वावृधानस्य त वय विश्वा धनानि जिग्युषः । ऊतिमिन्द्रा वृणीमहे ॥६॥
इन्द्रदेवता ! हामी तिम्रो त्यस्तो दिव्य संरक्षण प्राप्त गर्ने रहर गर्दछौँ, जसबाट हामी शत्रुका ऐश्वर्य जितेर समृद्ध हुन सकौँ ।

## सूक्त— २८

**ऋषि—** गोषूक्ति र अश्वसूक्ति । **देवता—** इन्द्र । **छन्द—** गायत्री ।

**व्य१न्तरिक्षमतिरन्मदे सोमस्य रोचना । इन्द्रो यदभिनद् वलम् ॥१॥**

...पान गर्दा उत्पन्न भएका उमङ्गले जब इन्द्रदेवताले बलवान् मेघलाई विदीर्ण गराए, त्यस बेला ...ले प्रकाशवान् आकाशलाई पनि विस्तृत गराए ।

**उद्गा आजदङ्गिरोभ्य आविष्कृण्वन् गुहा सतीः । अर्वाञ्चं नुनुदे वलम् ॥२॥**

...को रूपमा रहेका हे इन्द्रदेवता ! तिमीले गुफामा रहेकाले देखा नपरेका किरणरूपी ...हरूलाई प्रकट गराएर देहधारी अङ्गिराहरू भएका ठाउँसम्म पुऱ्यायौ । तिनलाई थुनेर राख्ने बल ...को असुरलाई उँधो मुन्टो गराएर भाग्न विवश बनायौ ।

**इन्द्रेण रोचना दिवो दृढानि दृंहितानि च । स्थिराणि न पराणुदे ॥३॥**

...न्तरिक्षमा रहेका सबै प्रकाशवान् नक्षत्रहरूलाई इन्द्रदेवताले नै सुदृढ र समृद्ध गराए । ती ...क्षत्रहरूलाई कसैले पनि उनका स्थानबाट हल्लाउन सक्दैन ।

**अपामूर्मिर्मदन्निव स्तोम इन्द्राजिरायते । वि ते मदा अराजिषुः ॥४॥**

हे इन्द्रदेवता ! जसरी समुद्रका लहरहरू उर्लिने गर्दछन्, उसै गरी तिम्रा लागि गरिएको प्रार्थना पनि ...तत्परताका साथ पुगेर तिम्रो उत्साह बढाउने गर्दछ ।

## सूक्त— २९

**ऋषि—** गोषूक्ति र अश्वसूक्ति । **देवता—** इन्द्र । **छन्द—** गायत्री ।

**त्वं हि स्तोमवर्धन इन्द्रास्युक्थवर्धनः । स्तोतृणामुत भद्रकृत् ॥१॥**

हे इन्द्रदेवता ! तिमी स्तोता र स्तुतिले सन्तुष्ट एवं समृद्ध हुने गर्दछौ । तिमी स्तुतिकर्ताहरूका लागि हितकारी छौ ।

**इन्द्रमित् केशिना हरी सोमपेयाय वक्षतः । उप यज्ञं सुराधसम् ॥२॥**

...लामो जगर भएका दुवै अश्वले श्रेष्ठ ऐश्वर्यसम्पन्न इन्द्रदेवतालाई सोमपान गर्नका लागि यज्ञमण्डपका नजिकै लिएर आउने गर्दछन् ।

**अपां फेनेन नमुचेः शिर इन्द्रोदवर्तयः । विश्वा यदजय स्पृधः ॥३॥**

...मुक्त हुन नदिने आसुरी प्रवृत्ति हुने नमुची नामका असुरको शिरलाई इन्द्रदेवताले फिँज उठेका पानीको प्रवाहशक्तिले नष्ट गराए ।

**मायाभिरुत्सिसृप्सत इन्द्र द्यामारुरुक्षतः । अव दस्यूँरधूनुथाः ॥४॥**

हे इन्द्रदेवता ! तिमी आफ्नो मायाले सर्वत्र विद्यमान छौ । तिमीले द्युलोकमा बढ्दै आएका वृत्र आदि दस्युहरूलाई तलतिर मुन्ट्याइदियौ ।

**असुन्वामिन्द्र संसदं विषूचीं व्य नाशयः । सोमपा उत्तरो भवन् ॥५॥**

हे इन्द्रदेवता ! तिमी सोमपान गर्ने तथा महान् छौ । सोमयज्ञ नगर्ने स्वार्थी मानिसहरूलाई सङ्गठनलाई आपसमा झगडा गराएर तिमीले विनाश गरेका थियौ ।

## सूक्त— ३०

**ऋषि—** वरु वा सर्वहरि । **देवता—** हरि इन्द्र । **छन्द—** जगती ।

**प्र ते महे विदथे शंसिषं हरी प्र ते वन्वे वनुषो हर्यतं मदम् । घृतं न यो हरिभिश्चारु सेचत आ त्वा विशन्तु हरिवर्पसं गिरः ॥१॥**

हे इन्द्रदेवता ! हामी यस यज्ञमा तिम्रा दुवै घोडालाई अर्चना गर्दछौँ । हामी तिम्रो सेवनीय तथा प्रशंसनीय उत्साहको कामना गर्दछौँ । हरणशील हुनाले जसलाई हरि भन्ने गरिन्छ, ती सूर्य आदिका

माध्यमबाट तेज अथवा जलको सेचन गर्दछौं । यस्तो मनोहर इन्द्रदेवताका निकट हाम्रो स्तोत्र पुगोस् ।

हरिं हि योनिमभि ये समस्वरन् हिन्वन्तो हरी दिव्यं यथा सदः । आ यं पृणन्ति हरिभिर्न धेनव इन्द्राय शूषं हरिवन्तमर्चत ॥२॥

हे ऋत्विक्हरू हो ! जुन अश्वले द्रुत गतिमा इन्द्रदेवतालाई दिव्य धाममा पुऱ्याउँछन्, इन्द्रदेवताका ती दुवै अश्वलाई हामी स्तुति गरौं । अश्वहरूका साथमा इन्द्रदेवताको कल्याणकारी सामर्थ्यलाई स्तुति गरौं । गाईले जसरी दुध दिने गर्दछन्, उसै गरी तिमीहरू पनि हरियो आभासम्पन्न सोम र स्तुतिले इन्द्रदेवतालाई सन्तुष्ट गराओ ।

सो अस्य वज्रो हरितो य आयसो हरिर्निकामो हरिरा गभस्त्योः । द्युम्नी सुशिप्रो हरिमन्युसायक इन्द्रे नि रूपा हरिता मिमिक्षिरे ॥३॥

इन्द्रदेवता आफूसित भएको हरियो वर्णको हरण गर्ने फलामे, शत्रुनाशक वज्रलाई दुवै हातले धारण गर्दछन् । इन्द्रदेवता वैभवशाली, सुन्दर चिउँडोले सजिएका छन् र क्रोधित भएर दुष्टहरूलाई बाणले विनाश गर्दछन् । हरियो आभा भएको सोमरसले इन्द्रदेवतालाई अभिषेक गर्दै छ ।

दिवि न केतुरधि धायि हर्यतो विव्यचद् वज्रो हरितो न रंह्या । तुददहिं हरिशिप्रो य आयसः सहस्रशोका अभवद्धरिंभरः ॥४॥

अन्तरिक्षका सूर्यको जस्तै कान्तिमान् वज्र प्रशंसनीय भएर सबैतिर व्याप्त हुने गरेको छ । मानौं उसको आफ्नो गति रथ वहन गरेका अश्वझैं भएर सबै दिशाहरूमा व्याप्त हुन पुगेको छ । सुन्दर चिउँडो भएका सोमरस पान गर्ने इन्द्रदेवता फलामले बनेको वज्र नामको अस्त्रले वृत्रासुरलाई हनन गर्ने बेलामा असाधारण आभाले सम्पन्न भएका थिए ।

त्वंत्वमहर्यथा उपस्तुतः पूर्वेभिरिन्द्र हरिकेश यज्वभिः । त्वं हर्यसि तव विश्वमुक्थ्य१मसामि राधो हरिजात हर्यतम् ॥५॥

हे हरियो कपाल भएका इन्द्रदेवता ! उहिलेका ऋषिहरूले यज्ञमा तिम्रो प्रार्थना गर्दथे र तिमी पनि यज्ञमा उपस्थित हुन्थ्यौ । तिमी सबैका लागि प्रशंसनीय छौ । हे इन्द्रदेवता ! तिम्रा सबै खालका अन्न प्रशंसनीय छन् । तिमी कान्तिमान् र असाधारण विशेषताहरूले युक्त छौ ।

## सूक्त– ३१

**ऋषि–** वरु वा सर्वहरि । **देवता–** हरि इन्द्र । **छन्द–** जगती ।

ता वज्रिणं मन्दिनं स्तोम्यं मद इन्द्रं रथे वहतो हर्यता हरी । पुरूण्यस्मै सवनानि हर्यत इन्द्राय सोमा हरयो दधन्विरे ॥१॥

स्तुति गर्न योग्य र वज्र धारण गर्ने इन्द्रदेवता जब सोमरस पान गर्नका लागि हर्षित हुँदै तयार हुन्छन्, त्यस बेला दुई वटा सुन्दर तथा हरियो वर्णका घोडाहरू उनका रथमा नारिन्छन् र उनलाई तिनले वहन गर्दछन् । त्यो हाम्रो यज्ञस्थलमा सोमको कामना गर्ने इन्द्रदेवताका निम्ति अनेकौं पटक सोमरस पेल्ने काम भइरहेको हुन्छ ।

अरं कामाय हरयो दधन्विरे स्थिराय हिन्वन् हरयो हरी तुरा । अर्वद्भिर्यो हरिभिर्जोषमीयते सो अस्य कामं हरिवन्तमानशे ॥२॥

इन्द्रदेवताका निम्ति यथोचित मात्रामा सोमरस राखिएको छ । उसै सोमरसले गर्दा नै इन्द्रदेवताका अविचल घोडाहरू यज्ञका लागि गतिशील हुने गरेका छन् । गतिशील घोडाले जुन रथलाई युद्धभूमितर्फ लैजान्छन्, त्यसै रथले इन्द्रदेवतालाई सुहाउँदो पार्दछ र सोमरसले सम्पन्न गरिने यज्ञ पनि ल्याउने गर्दछ ।

हरिश्मशारुर्हरिकेश आयसस्तुरस्पेये यो हरिपा अवर्धत । अर्वद्भिर्यो हरिभिर्वाजिनीवसुरति विश्वा दुरिता पारिषद्धरी ॥३॥

हरियो किरणलाई नै दाह्रीजुँघा र कपालका रूपमा धारण गर्ने, फलामको जस्तै बलियो ...

भएका। इन्द्रदेवता तीव्रतापूर्वक हर्षित गराउने सोमरस पान गरेर उत्साहित हुने गर्दछन् । उनी गतिशील अश्वमा नै यज्ञसम्म पुग्ने गरेका छन् । दुवै अश्वलाई रथमा जोडेर उनले हामीलाई सबै किसिमका बाधाविघ्नहरूबाट मुक्त गराऊन् ।

**स्रुवेव यस्य हरिणी विपेततुः शिप्रे वाजाय हरिणी दविध्वतः । प्र यत् कृते चमसे मर्मृजद्धरी पीत्वा मदस्य हर्यतस्यान्धसः ॥४॥**

बलशाली इन्द्रदेवताका दुई वटा हरियो वर्णका दीप्तिमान् नेत्रहरू यज्ञवेदीमा दुई वटा सुरोजस्ता भएर विशिष्ट ढङ्गले सोमरसमा केन्द्रित भएका हुन्छन् । उनका हरणशील दुवै ओठ सोमरस पान गर्नका लागि कम्पित भइरहेका हुन्छन् । चमस नामका पात्रमा प्रशोधन गरिएको सोमरस अति सुखप्रद, उज्ज्वल बनेको हुन्छ र त्यसलाई पिएर उनी आफ्ना दुवै अश्वको शरीर परिमार्जित गराउँछन् ।

**उत स्म सद्म हर्यतस्य पस्त्योश्रत्यो न वाजं हरिवाँ अचिक्रदत् । मही चिद्धि धिषणाहर्यदोजसा वृहद् वयो दधिषे हर्यतश्चिदा ॥५॥**

कान्तिमान् इन्द्रदेवताको आवास द्यावापृथिवीमा नै रहेको छ । उनी रथमा आरुढ भएर घोडाको जस्तै अत्यन्त वेगले समरक्षेत्रमा जाने गरेका छन् । हे इन्द्रदेवता ! उत्कृष्ट स्तोत्रले तिमीलाई प्रशंसा गरिएको छ । तिमी आफ्नो सामर्थ्यअनुसार विपुल अन्न धारण गर्दछौ ।

## सूक्त– ३२

**ऋषि–** वरु वा सर्वहरि । **देवता–** हरि इन्द्र । **छन्द–** जगती, त्रिष्टुप् ।

**आ रोदसी हर्यमाणो महित्वा नव्यंनव्यं हर्यसि मन्म नु प्रियम् । प्रपस्त्यमसुर हर्यतं गोराविष्कृधि रहये सूर्याय ॥१॥**

हे इन्द्रदेवता ! तिमी आफ्नो महानताले द्यावापृथिवीलाई व्याप्त गराउँछौ र नयाँनौला प्रिय स्तोत्रको कामना गर्दछौ । हे बलसम्पन्न इन्द्रदेवता ! तिमी गाईरूपी पृथ्वीलाई हर्षित गराउनका लागि सर्वप्रेरक सूर्यदेवताको घरका रूपमा रहेको आकाशलाई प्रकट गर्दछौ ।

**आ त्वा हर्यन्तं प्रयुजो जनानां रथे वहन्तु हरिशिप्रमिन्द्र । पिबा यथा प्रतिभूतस्य मध्वो हर्यन् यज्ञं सधमादे दशोणिम् ॥२॥**

हे सुन्दर चिउँडो भएका इन्द्रदेवता ! तिम्रा अश्वहरू रथमा जोतिएर मानिसहरूले सम्पन्न गर्न लागेका यज्ञमा तिमीलाई पुऱ्याऊन् । तिम्रा लागि प्रेमपूर्वक तयार गरिएको मधुर सोमरस प्रस्तुत गरेपछि तिमी त्यसलाई पान गर । दस औँलाले तयार गरिएको सोमरस यज्ञको साधनरूप हो, तिमी युद्धमा विजय प्राप्त गर्नका लागि त्यो सोमरस पान गर्ने कामना गर ।

**अपाः पूर्वेषां हरिवः सुतानामथो इदं सवनं केवलं ते । ममद्धि सोमं मधुमन्तमिन्द्र सत्रा वृषञ्जठर आ वषस्व ॥३॥**

हे अश्वयुक्त इन्द्रदेवता ! पहिलेको प्रातःसवनमा सोमरस प्रदान गरिएको थियो, तिमीले त्यसलाई पान गऱ्यौ । यस बेला दिउँसोको सवनमा सोमरस प्रस्तुत गरिएको छ, त्यो पनि केवल तिम्रै लागि हो । तिमी यो मिठो सोमरसबाट आनन्द प्राप्त गर । हे विपुल वर्षा गराउने इन्द्रदेवता ! तिमी आफ्नो पेट सोमरसले परिपूर्ण गराऊ ।

## सूक्त– ३३

**ऋषि–** अष्टक । **देवता–** इन्द्र । **छन्द–** त्रिष्टुप् ।

**अप्सु धूतस्य हरिवः पिबेह नृभिः सुतस्य जठरं पृणस्व । मिमिक्षुर्यमद्रय इन्द्र तुभ्यं तेभिर्वर्धस्व मदमुक्थवाहः ॥१॥**

हे अश्वका अधिपति इन्द्रदेवता ! जलमा शोधन गरेर यस यज्ञमा ल्याइएको सोमरस पान गर । यसैले तिमी आफ्नो पेट पूरा गराऊ । हे प्रशंसनीय इन्द्रदेवता ! ढुङ्गाले जसलाई पेलेर तयार पारिएको छ, त्यस सोमरसलाई पिएर तिमी उत्साहित होऊ र हाम्रो स्तुति ग्रहण गर ।

**प्रोग्रां पीतिं वृष्ण इयर्मि सत्यां प्रयै सुतस्य हर्यश्व तुभ्यम् । इन्द्र धेनाभिरिह मादयस्व धीभिर्विश्वाभिः शच्या गृणानः ॥२॥**

हरियो अश्वका अधिपति हे इन्द्रदेवता ! सोमरस तिम्रै लागि पेलेर तयार पारिएको छ । तिमी सुखऐश्वर्यको वर्षा गराउने हौ र यज्ञतर्फ सुनिश्चित रूपले आउँछौ भन्ने जानेर नै तिमीले पान गर्नका लागि हामी सोम प्रस्तुत गर्दछौं । हे देवता ! तिमी स्तोत्र ग्रहण गरेर आनन्दित होऊ । तिमी समस्त बुद्धि र शक्तिका साथमा स्तुत्य भएका छौ ।

**ऊती शचीवस्तव वीर्येण वयो दधाना उशिज ऋतज्ञाः । प्रजावदिन्द्र मनुषो दुरोणे तस्थुर्गृणन्तः सधमाद्यासः ॥३॥**

हे इन्द्रदेवता ! उशिज्का वंशजहरू यज्ञकर्मका विशेषज्ञ हुन् । उनीहरू तिम्रो आश्रयमा रहेर तिम्रै प्रभावले अन्न र सन्तान प्राप्त गर्दछन् र यजमानका यज्ञशालामा रहने गरेका छन् । उनीहरू सबै नै आनन्दले गद्गद् भएर तिम्रो प्रार्थना गर्न लागेका हुन्छन् ।

## सूक्त— ३४

**ऋषि—** गृत्समद । **देवता—** इन्द्र । **छन्द—** त्रिष्टुप् ।

**यो जात एव प्रथमो मनस्वान् देवो देवान् क्रतुना पर्यभूषत् । यस्य शुष्माद् रोदसी अभ्यसेतां नृम्णस्य मह्ना स जनास इन्द्रः ॥१॥**

हे मानिसहरू हो ! आफ्ना पराक्रमका प्रभावले ख्याति प्राप्त गरेका मनस्वी इन्द्रदेवताले उत्पन्न हुनासाथ श्रेष्ठ कर्म गरेर देवताहरूलाई सुशोभित गराएका थिए । उनका शक्तिले आकाश र पृथ्वी दुवै भयभीत भए ।

**यः पृथिवीं व्यथमानामदृंहद् यं पर्वतान् प्रकुपिताँ अरम्णात् । यो अन्तरिक्षं विममे वरीयो यो द्यामस्तभ्नात् स जनास इन्द्रः ॥२॥**

हे मानिसहरू हो ! उनै इन्द्रदेवतालेँ विशाल आकाशलाई मापन गरे, द्युलोकलाई धारण गरे र काँप्दो अवस्थामा रहेका पृथ्वीलाई बलियो आधार प्रदान गरेर क्रोधी पर्वतलाई स्थिर गराए ।

**यो हत्वाहिमरिणात् सप्त सिन्धून् यो गा उदाजदपधा वलस्य । यो अश्मनोरन्तरग्निं जजान संवृक् समत्सु स जनास इन्द्रः ॥३॥**

हे मानिसहरू हो ! जसले वृत्र नामको राक्षसलाई मारेर जलको वर्षा गराउँदै सात नदीहरूलाई प्रवाहित गराए, जसले बल नामका असुरले अपहरण गरेका गाईहरूलाई मुक्त गराए, जसले ढुङ्गाका बीचबाट अग्निदेवतालाई उत्पन्न गरे, जसले शत्रुहरूलाई संहार गराए उनी इन्द्रदेवता नै हुन् ।

**येनेमा विश्वा च्यवना कृतानि यो दासं वर्णमधरं गुहाकः । श्वघ्नीव यो जिगीवाँल्लक्षमाददर्यः पुष्टानि स जनास इन्द्रः ॥४॥**

हे मानिसहरू हो ! जसले समस्त गतिशील लोकको निर्माण गरे, जसले अमानवीय आचरण गर्ने खालका दास वर्णलाई निम्न स्थान प्रदान गरे, जसले आफ्नो लक्ष्य प्राप्त गरेका थिए र व्याधाले पशुमाथि गरेझैं शत्रुको समृद्धि आफ्नो अधिकारमा लिए, इन्द्रदेवता उनै हुन् ।

**यं स्मा पृच्छन्ति कुह सेति घोरमुतेमाहुर्नैषो अस्तीत्येनम् । सो अर्यः पुष्टीर्विज इवा मिनाति श्रदस्मै धत्त स जनास इन्द्रः ॥५॥**

कहाँ छन् भनेर मानिसहरूले जुन इन्द्रदेवताका विषयमा सोधखोज गर्दछन्, कतिपय मानिसहरू उनी कतै छैनन् पनि भन्ने गर्दछन् । आफूलाई नमान्ने शत्रुहरूको पोषणकारी सम्पत्ति वीरतापूर्वक नष्ट उनै इन्द्रदेवताले गर्दछन् । हे मानिसहरू हो ! त्यस्ता इन्द्रदेवतालाई श्रद्धा प्रकट गर, त्यस्ता महान् देवता नै इन्द्रदेवता हुन् ।

**यो रध्रस्य चोदिता यः कृशस्य यो ब्रह्मणो नाधमानस्य कीरेः । युक्तग्राव्णो यो ऽविता सुशिप्रः सुतसोमस्य स जनास इन्द्रः ॥६॥**

मानिसहरू हो ! जो दरिद्र, ज्ञानी तथा स्तुति गर्नेहरूलाई धन प्रदान गर्दछन् र सोमरस निकाल्नका लागि यजमानले ढुङ्गा लिएर तयार भएका बेलामा यजमानलाई रक्षा गर्ने उनै इन्द्रदेवता नै हुन् ।

**यस्याश्वासः प्रदिशि यस्य गावो यस्य ग्रामा यस्य विश्वे रथासः । यः सूर्यं य उषसं जजान यो अपां नेता स जनास इन्द्रः ॥७॥**

मानिसहरू हो ! जसका अधीनमा समस्त गाउँ, घोडा र रथ रहेका छन्, जसले सूर्य तथा ...लाई उत्पन्न गराए, जसले समस्त प्रकृतिलाई सञ्चालन गरिरहेका छन्, ती इन्द्रदेवता हुन् ।

**यं क्रन्दसी संयती विह्वयेते परेऽवर उभया अमित्राः समानं चिद्रथमातस्थिवांसा नाना हवेते स जनास इन्द्रः ॥८॥**

मानिसहरू हो ! परस्पर सँगै गतिमान अवस्थामा रहेका द्युलोक र पृथ्वीलोकले जसलाई ...हायताका लागि बोलाउँछन्, महान् तथा निम्न स्तरीय शत्रु पनि जसलाई युद्धमा मद्दत पाउनका ...गि बोलाउँछन्, एउटा रथमा आरुढ दुई वीरले सँगसँगै भएर जसलाई मद्दतका लागि गुहार्दछन् ... उनै इन्द्रदेवता हुन् ।

**यस्मान्न ऋते विजयन्ते जनासो यं युध्यमाना अवसे हवन्ते । यो विश्वस्य प्रतिमानं बभूव यो अच्युतच्युत् स जनास इन्द्रः ॥९॥**

मानिसहरू हो ! जसको सहायताबिना शूरवीरहरू युद्धमा विजयी हुन सक्दैनन्, युद्धमा ...डिरहेका वीर पुरुषले आफ्नो संरक्षणका लागि जसलाई पुकार्दछन्, जो समस्त संसारलाई ...विधि जानेर पनि अपरिमित शक्ति भएका शत्रुलाई संहार गर्न सक्दछन्, उनी इन्द्रदेवता नै ... ।

**यः शश्वतो मह्येनो दधानानमन्यमानाञ्छर्वा जघान । यः शर्धते नानुददाति शृध्यां यो दस्योर्हन्ता स जनास इन्द्रः ॥१०॥**

मानिसहरू हो ! जसले आफ्नो वज्रले महान् पापी शत्रुलाई हनन गरे, जो अहङ्कारी मानिसको ...ड नाश गराउँछन्, जो अर्काको पदार्थ हरण गर्ने दुष्टलाई नाश गर्दछन्, उनी तिनै इन्द्रदेवता नै ... ।

**यः शम्बरं पर्वतेषु क्षियन्तं चत्वारिंश्यां शरद्यन्वविन्दत् । ओजायमानं यो अहिं जघान दानुं शयानं स जनास इन्द्रः ॥११॥**

...निसहरू हो ! चालीस वर्षसम्म पर्वतमा लुकिरहेका शम्बर नामका असुरलाई जसले खोजेर ...ले, जसले जल रोकिराखेर सुतेका वृत्र नामका असुरलाई मारे उनी नै इन्द्रदेवता हुन् ।

**यः शम्बरं पर्यतरत् कसीभिर्योऽचारुकास्नापिबत् सुतस्य । अन्तर्गिरौ यजमानं बहुं जनं यस्मिन्नामूर्छत् स जनास इन्द्रः ॥१२॥**

...निसहरू हो ! जसले आफ्ना वज्रले मेघलाई विदीर्ण गराए, जसले सुरुचिपूर्वक सोमरस पान ...छन्, जो यज्ञ आदि श्रेष्ठ कर्म गर्नेहरूलाई पर्वतको शिखरजस्तै माथि उठाउँछन्, उनी तिनै ...देवता हुन् ।

**यः सप्तरश्मिर्वृषभस्तुविष्मानवासृजत् सर्तवे सप्त सिन्धून् । यो रौहिणमस्फुरद् वज्रबाहुर्द्यामारोहन्तं स जनास इन्द्रः ॥१३॥**

...निसहरू हो ! जसले सात किरण भएका बलशाली र ओजस्वी सात दिव्य नदीहरूलाई ...हित गर्दछन्, जसले द्युलोकतर्फ बढिरहेका रोहिणीलाई आफ्ना हातका वज्रले रोकिदिए उनी ...देवता नै हुन् ।

**द्यावा चिदस्मै पृथिवी नमेते शुष्माच्चिदस्य पर्वता भयन्ते । यः सोमपा निचितो वज्रबाहुर्यो वज्रहस्तः स जनास इन्द्रः ॥१४॥**

हे मानिसहरू हो ! जोप्रति द्युलोक र पृथ्वीलोक श्रद्धापूर्वक नमस्कार गर्दछन्, जसका बलसित पर्वतहरू भयभीत हुन्छन्, जसले सोमपान गर्दछन्, जसका वज्रजस्तै बलिया भुजाहरू छन् र जसको शरीर ज्यादै बलशाली छ, उनी यिनै इन्द्रदेवता हुन् ।

**यः सुन्वन्तमवति यः पचन्तं यः शंसन्तं यः शशमानमूती । यस्य ब्रह्म वर्धनं यस्य सोमो यस्येदं राधः स जनासः इन्द्रः ॥१५॥**

हे मानिसहरू हो ! सोम प्रशोधन गर्ने र स्तुति गर्नेहरूलाई जसले रक्षा गर्दछन्, सोमले जसको बल तथा यशलाई र आहुतिले जसको सामर्थ्यलाई बढाउँछ, उनी तिनै इन्द्रदेवता हुन् ।

**जातो व्यख्यत् पित्रोरुपस्थे भुवो न वेद जनितुः परस्य । स्तविष्यमाणो नो यो अस्मद् व्रता देवानां स जनास इन्द्रः ॥१६॥**

हे मानिसहरू हो ! जसले उत्पन्न हुनासाथ द्युलोकका काखमा प्रकाशमान भए, जसले माताका रूपमा रहेकी पृथ्वी र पिताका रूपमा रहेका द्युलोकलाई पनि चिनेका छैनन् र हामीले स्तुति गर्दा जसले दिव्य व्रतहरूलाई पूरा गराउँछन्, उनी इन्द्रदेवता नै हुन् ।

**यः सोमकामो हर्यश्वः सूरिर्यस्माद् रेजन्ते भुवनानि विश्वा । यो जघान शम्बरं यश्च शुष्णं य एकवीरः स जनास इन्द्रः ॥१७॥**

हे मानिसहरू हो ! सोमरसको कामना गर्दै जो हरि नामका अश्वलाई उचित किसिमले चलाउने गर्दछन्, जसद्वारा शम्बर र शुष्ण नामका असुरहरू मारिए, जो पराक्रमी कार्यमा असाधारण शौर्य प्रदर्शन गर्दछन्, जोसित सबै प्राणीहरू भयभीत रहन्छन् उनी इन्द्रदेवता नै हुन् ।

**यः सन्वते पचते दुध्र आ चिद् वाजं दर्दर्षि स किलासि सत्यः । वयं त इन्द्र विश्वह प्रियासः सुवीरासो विदथमा इन्द्रः ॥१८॥**

सोमयज्ञ गर्ने र सोमरस प्रशोधन गर्नेहरूलाई जसले मनग्गे धन प्रदान गर्दछन्, उनी निश्चय नै सत्यका रूपजस्ता इन्द्रदेवता नै हुन् । हे इन्द्रदेवता ! हामी सन्ततियुक्त प्रियजनका साथमा सधैँ तिम्रो यशको गुणगान गरौँ ।

## सूक्त— ३५

**ऋषि—** नोधा । **देवता—** इन्द्र । **छन्द—** त्रिष्टुप् ।

**अस्मा इदु प्र तवसे तुराय प्रयो न हर्मि स्तोमं माहिनाय । ऋचीषमायाध्रिगव ओहमिन्द्राय ब्रह्माणि राततमा ॥१॥**

शीघ्र कार्य गर्ने, मन्त्रले वर्णन गरिने खालको महान् कीर्ति भएका र निर्बाध गति भएका इन्द्रदेवताका लागि हामी प्रशंसात्मक मन्त्रहरू गाउँदै हविष्यान्न समर्पित गर्दछौं ।

**अस्मा इदु प्रय इव प्र यंसि भराम्याङ्गूषं बाधे सुवृक्ति । इन्द्राय हृदा मनसा मनीषा प्रत्नाय पत्ये धियो मर्जयन्त ॥२॥**

हामी उनै इन्द्रदेवताका लागि हविष्यान्नजस्तै स्तोत्र अर्पित गर्दछौं, उनै शत्रुनाशक इन्द्रदेवताका लागि उत्तम स्तुति गान गर्दछौँ । ऋषिहरू पनि उनै पुरातन इन्द्रदेवताका लागि हृदय, मन र बुद्धिले पवित्र स्तुति गर्दछन् ।

**अस्मा इदु त्यमुपमं स्वर्षां भराम्याङ्गूषमास्येन । मंहिष्ठमच्छोक्तिभिर्मतीनां सुवृक्तिभिः सूरिं वावृधध्यै ॥३॥**

महान् विद्वान् इन्द्रदेवतालाई आकृष्ट गर्ने खालका उनको महिमाअनुसारको उत्तम स्तुति निर्मल बुद्धिले नादपूर्वक हामी उच्चारण गर्दछौँ ।

**अस्मा इदु स्तोमं सं हिनोभि रथं न तष्टेव तत्सिनाय । गिरश्च गिर्वाहसे सुवृक्तीन्द्राय विश्वमिन्वं मेधिराय ॥४॥**

जसरी त्वष्टादेवताले रथ निर्माण गरेर इन्द्रेदेवतालाई प्रदान गर्दछन्, उसै गरी हामी समस्त कामनाहरू सिद्ध गराउने, स्तुत्य, मेधावी इन्द्रदेवताका लागि आफ्ना वाणीले सर्वसिद्ध श्रेष्ठ स्तोत्र गाउने गर्दछौं ।

**अस्मा इदु सप्तिमिव श्रवस्येन्द्रायार्कं जुह्वा३ समञ्जे । वीरं दानौकसं वन्दध्यै पुरां गूर्तश्रवसं दर्माणम् ॥५॥**

अश्वलाई रथमा जोतेझैँ गरी हामी धनको कामनाले इन्द्रदेवताका निम्ति स्तोत्रलाई वाणीमा जुटाउँछौं । यो स्तोत्र हामी उनै वीर, दानशील, विपुल यशस्वी, शत्रुको सहर ध्वस्त पार्ने इन्द्रदेवताको वन्दनाका रूपमा उच्चारण गर्दछौं ।

**अस्मा इदु त्वष्टा तक्षद् वज्रं स्वपस्तमं स्वर्यं१ रणाय । वृत्रस्य चिद् विदद् येन मर्म तुजन्नीशानस्तुजता कियेधाः ॥६॥**

उचित किसिमले लक्ष्य भेदन गर्ने शक्तिशाली वज्र त्वष्टाले युद्धमा इन्द्रदेवताका निम्ति तयार गरेका हुन् । उसै वज्रले शत्रुनाशक, अति बलवान् इन्द्रदेवताले वृत्रका मर्मस्थलमा प्रहार गरेर उसलाई मारेका थिए ।

**अस्येदु मातुः सवनेषु सद्यो महः पितुं पपिवाञ्चार्वन्ना । मुषायद् विष्णुः पचतं सहीयान् विध्यद् वराहं तिरो अद्रिमस्ता ॥७॥**

वर्षा गराएर आमाले झैँ संसारको श्रेष्ठ निर्माण गर्ने महान् इन्द्रदेवताले यज्ञमा हवि सेवन गरे र सोमपान पनि शीघ्रताले गरे । उनै सर्वव्यापक इन्द्रदेवताले शत्रुको धन जिते र वज्रले प्रहार गरेर मेघलाई भेदन गरे ।

**अस्मा इदु ग्नाश्चिद् देवपत्नीरिन्द्रायार्कमहिहत्य ऊवुः । परि द्यावापृथिवी जभ्र उर्वी नास्य ते महिमानं परि ष्टः ॥८॥**

गतिहीन भएकाले अहि नाम भएको असुरलाई हनन गर्दा देवपत्नीहरूले इन्द्रदेवताको स्तुति गरे । इन्द्रदेवताले त्यसपछि द्युलोक र पृथ्वीलोकलाई आफ्नो वशमा गराए । दुवै लोकमा उनका सामर्थ्यको सामना गरेर उभिन सक्ने कोही पनि हुँदैन ।

**अस्येदेव प्र रिरिचे महित्वं दिवस्पृथिव्याः पर्यन्तरिक्षात् । स्वरालिन्द्रो दम आ विश्वगूर्तः स्वरिरमत्रो ववक्षे रणाय ॥९॥**

इन्द्रदेवताको महत्ता आकाश, पृथ्वी र अन्तरिक्षभन्दा पनि विस्तृत छ । स्वयं प्रकाशित, सर्वप्रिय, उत्तम योद्धा, असीमित बल भएका इन्द्रदेवता युद्धका लागि आफ्ना वीरहरूलाई प्रेरित गर्दछन् ।

**अस्येदेव शवसा शुषन्तं वि वृश्चद् वज्रेण वृत्रमिन्द्रः । गा न व्राणा अवनीरमुञ्चदभि श्रवो दावने सचेताः ॥१०॥**

इन्द्रदेवताले आफ्नै बलले शोषक वृत्रलाई वज्रले हानेर काटिदिए र अपहरण भएका गाईहरूजस्तै भएर थुनिएको जललाई मुक्त गराए । हविदाताहरूलाई अन्नले पूरा गराए ।

**अस्येदु त्वेषसा रन्त सिन्धवः परि यद् वज्रेण सीमयच्छत् । ईशानकृद् दाशुषे दशस्यन् तुर्वीतये गाधं तुर्वणिः कः ॥११॥**

इन्द्रदेवताका बलले नै नदीहरू प्रवाहित भएका छन् । किनभने उनैले नै वज्रले यिनलाई नियन्त्रित गरेका छन् । शत्रुलाई मारेर सबै स्थानमा शासन गर्ने इन्द्रदेवता हविदातालाई धन प्रदान गर्दै तुर्वणि नामका शत्रुसित मोर्चा लिनेहरूलाई सहायता गर्दछन् ।

**अस्मा इदु प्र भरा तूतुजानो वृत्राय वज्रमीशानः कियेधाः । गोर्न पर्व वि रदा तिरश्चेष्यन्नर्णांस्यपां चरध्यै ॥१२॥**

अति वेगवान्, सबैका स्वामी, महाबली हे इन्द्रदेवता ! तिमी यस वृत्रलाई वज्रले प्रहार गर र उस

वृत्रका जोडाइहरूमा तेर्छो रूपमा प्रहार गरेर भूमिजस्तै समतल बनाऊ । यसरी नै प्रहार गरेर जललाई मुक्त रूपमा प्रवाहित गराऊ ।

**अस्येदु प्र ब्रूहि पूर्व्याणि तुरस्य कर्माणि नव्य उक्थैः । युधे यदिष्णान आयुधान्यृघायमाणो निरिणाति शत्रून् ॥१३॥**

हे मानिसहरू हो ! यी फुर्तिला इन्द्रदेवताका पुराना कर्महरूको प्रशंसा गर । उनी स्तुतियोग्य छन् । युद्धमा शीघ्रतापूर्वक शस्त्रहरू प्रहार गरेर समाजलाई हानी पुऱ्याउने शत्रुलाई उनले नष्ट गर्दछन् ।

**अस्येदु भिया गिरयश्च दृळ्हा द्यावा च भूमा जनुषस्तुजेते । उपो वेनस्य जोगुवान ओणिं सद्यो भुवद् वीर्याय नोधाः ॥१४॥**

यी इन्द्रदेवताका डरले बलिया पर्वत, आकाश, पृथ्वी र सबै प्राणीहरू पनि काँप्ने गर्दछन् । नोधा ऋषि इन्द्रदेवताको सर्वश्रेष्ठ रक्षण सामर्थ्यको बयान गर्दै उनका अनुग्रहले बलशाली भएका थिए ।

**अस्मा इदु त्यदनु दाय्येषामेको यद् वव्ने भूरेरीशानः । प्रैतशं सूर्ये पस्पृधानं सौवश्व्ये सुष्विमावदिन्द्रः ॥१५॥**

अपार धनका एकमात्र स्वामी इन्द्रदेवताले जे चिताउँछन् स्तोताहरूले त्यही अर्पित गर्दछन् । इन्द्रदेवता स्वश्वका पुत्र सूर्यका साथमा स्पर्धा गर्ने, सोमयाग गर्ने, एतश नामका ऋषिलाई सुरक्षा प्रदान गरेका थिए ।

**एवा ते हारियोजना सुवृक्तिन्द्र ब्रह्माणि गोतमासो अक्रन् । ऐषु विश्वपेशसं धियं धाः प्रातर्मक्षू धियावसुर्जगम्यात् ॥१६॥**

हरियो रङ्गका अश्व नारिएको रथ भएका हे इन्द्रदेवता ! गोतमका वंशजहरूले तिम्रा लागि आकर्षक मन्त्रले युक्त स्तोत्र गाएका थिए । यो स्तोत्र तिमी ध्यानपूर्वक सुन । विचारपूर्वक अपार धनवैभव प्रदान गर्ने इन्द्रदेवता हामीलाई प्रातःकालीन यज्ञमा चाँडै नै प्राप्त होऊन् ।

## सूक्त— ३६

**ऋषि—** भरद्वाज । **देवता—** इन्द्र । **छन्द—** त्रिष्टुप् ।

**य एक इद्धव्यश्चर्षणीनामिन्द्रं तं गीर्भिरभ्यर्च आभिः । यः पत्यते वृषभो वृष्ण्यावान्त्सत्यः सत्वा पुरुमायः सहस्वान् ॥१॥**

सङ्कट कालमा मानिसले आह्वान गर्न योग्य एकमात्र इन्द्रदेवता नै हुन् । स्तुति गर्नाले उनी आउँछन् । इच्छापूर्ति गराउने, पराक्रमी, ज्ञानी, सत्यवादी र शत्रुलाई सताउने इन्द्रदेवतालाई हामी स्तुति गर्दछौं ।

**तमु नः पूर्वे पितरो नवग्वाः सप्त विप्रासो अभि वाजयन्तः । नक्षद्दाभं ततुरिं पर्वतेष्ठामद्रोघवाचं मतिभिः शविष्ठम् ॥२॥**

अङ्गिरा आदि प्राचीन ऋषिहरूले इन्द्रदेवताको पराक्रम अझै बढाउनका लागि नौ महिनासम्म यज्ञको अनुष्ठान सम्पन्न गरेका थिए र उनको स्तुति गरे । उनै इन्द्रदेवता सबैका शासक, तीव्रगामी र शत्रुका संहारक पनि हुन् ।

**तमीमह इन्द्रमस्य रायः पुरुवीरस्य नृवतः पुरुक्षोः । यो अस्कृधोयुरजरः स्वर्वान् तमा भर हरिवो मादयध्यै ॥३॥**

हे अश्वका अधिपति इन्द्रदेवता ! हामी पुत्रपौत्रादि स्वजन, सेवक, पशु आदिले युक्त प्रसन्नतादायक धनको याचना तिमीसित गर्दछौं । हामीलाई उल्लसित गर्नका लागि कहिल्यै क्षीण नहुने, स्थायी, सुखदायक धन प्रचुर मात्रामा तिमीले प्रदान गर ।

**तन्नो वि वोचो यदि ते पुरा चिज्जरितार आनशुः सुम्नमिन्द्र । कस्ते भागः किं वयो दुध खिद्वः पुरुहूत पुरूवसोऽसुरघ्नः ॥४॥**

हे शत्रुविजयी, पराक्रमी, अनेकौं तिरबाट बोलाइने गरेका ऐश्वर्यवान् इन्द्रदेवता ! तिमी दुष्ट

असुरहरूलाई नाश गर्ने खालको सामर्थ्यले युक्त छौ । तिमीलाइ यज्ञमा कुन खालको भाग प्राप्त भएको छ ? हे इन्द्रदेवता ! उहिलेका स्तोताहरूलाइ तिमीले पहिले जुन खालको सुख दिएका थियौं हामीलाई तिमी त्यसै खालको सुख प्रदान गर ।

**तं पृच्छन्ती वज्रहस्तं रथेष्ठामिन्द्रं वेपी वक्वरी यस्य नू गीः । तुविग्राभं तुविकूर्मिं रभोदां गातुमिषे नक्षते तुम्रमच्छ ॥५॥**

वज्र धारण गरेका, रथमा आरुढ भएका, धेरै किसिमको कर्म गर्ने, अनेकौं शत्रुलाई एकै पटक पक्रने इन्द्रदेवताको गुणगान गर्दै जुन यजमानले यज्ञकर्म र स्तुति गर्दछन्, तिनले शत्रुलाई पराजित गर्दै सुख प्राप्त गर्दछन् ।

**अया ह त्यं मायया वावृधानं मनोजुवा स्वतवः पर्वतेन । अच्युता चिद् वीलिता स्वोजो रुजो वि दृढहा धृषता विरप्शिन् ॥६॥**

हे इन्द्रदेवता ! तिमी स्वयं बलले युक्त छौ । तिमीले आफ्ना मनको वेगजस्तै वज्रले अगाडि बढ्दै आएको वृत्र नामको मायावी असुरलाइ संहार गरेका थियौ । हे तेजस्वी इन्द्रदेवता ! तिमीले अचल, सुदृढ र शक्तिशाली सहरहरूलाई नष्ट गराएका थियौ ।

**तं वो धिया नव्यस्या शविष्ठं प्रत्नं प्रत्नवत् परितंसयध्यै । स नो वक्षदनिमानः सुवह्मेन्द्रो विश्वान्यति दुर्गहाणि ॥७॥**

उहिलेका ऋषिहरूले झैं हामी पनि उहिलेदेखिका पराक्रमी इन्द्रदेवतालाई नयाँनौला स्तोत्रले प्रवर्धमान गराउँछौं । उनी अनन्त महिमावान्, सुन्दर वाहन भएका इन्द्रदेवताले हामीलाई विश्वका सबै खालका सङ्कटबाट पार लगाऊन् ।

**आ जनाय द्रुह्वणे पार्थिवानि दिव्यानि दीपयोऽन्तरिक्षा । तपा वृषन् विश्वतः शोचिषा तान् ब्रह्मद्विषे शोचय क्षामपश्च ॥८॥**

हे इन्द्रदेवता ! तिमी अभीष्टको वर्षा गराउने खालका छौ । द्युलोक, पृथ्वी र अन्तरिक्षमा सर्वत्र व्याप्त भएर आफ्ना तीव्र तेजले तप्त गराएर ब्रह्मविद्वेषी दुष्टहरूलाई भस्म गराऊ ।

**भुवो जनस्य दिव्यस्य राजा पार्थिवस्य जगतस्त्वेषसंदृक् । धिष्व वज्रं दक्षिण इन्द्र हस्ते विश्वा अजुर्य दयसे वि मायाः ॥९॥**

हे तेजस्वी, अजर इन्द्रदेवता ! तिमी देवलोकवासी र पृथ्वीवासी सबैका राजा हौ । तिमी दाहिने हातमा वज्र धारण गरेर विश्वका मायावीहरूलाई नाश गर ।

**आ संयतमिन्द्र णः स्वस्तिं शत्रुतूर्याय बृहतीममृधाम् । यया दासान्यार्याणि वृत्रा करो वज्रिन्त्सुतुका नाहुषाणि ॥१०॥**

हे वज्रधारी इन्द्रदेवता ! तिमी शत्रुलाई संहार गर्नका लागि अक्षुण्ण, संयमित एवं कल्याणकारी धन प्रचुर मात्रामा हामीलाई प्रदान गर । त्यस धनले हामी इन्द्रिय अथवा कुमार्गका दासहरूलाई श्रेष्ठ मार्गगामी आर्य बनाउन सकौं र मानवताका शत्रुहरूलाई नाश गर्न सकौं ।

**स नो नियुद्भिः पुरुहूत वेधो विश्ववाराभिरा गहि प्रयज्यो । न या अदेवो वरते न देव आभिर्याहि तूयमा मद्र्यद्रिक् ॥११॥**

हे इन्द्रदेवता ! तिमी पूज्य एवं धेरै तिरबाट बोलाइने खालका छौ । तिमी सबैतिरका मानिसहरूबाट प्रशंसित घोडामा हामीकहाँ आऊ । जुन अश्वको गतिलाई देवता र असुरले पनि रोक्न सक्दैनन्, उनै अश्वमा तिमी हामीकहाँ आऊ ।

## सूक्त— ३७

**ऋषि—** वसिष्ठ । **देवता—** इन्द्र । **छन्द—** त्रिष्टुप् ।

**यस्तिग्मशृङ्गो वृषभो न भीम एकः कृष्टीश्च्यावयति प्र विश्वाः । यः शश्वतो अदाशुषो गयस्य प्रयन्तासि सुष्वितराय वेदः ॥१॥**

इन्द्रदेवता तिखा सिङ भएको साँढेजस्तै भयङ्कर छन्, उनले एक्लै नै शत्रुलाई आफ्ना स्थानबाट

पदच्युत गराउँछन् । यजन नगर्नेहरूका निवास खोस्ने हे इन्द्रदेवता ! हामी याजकहरूलाई तिमी ऐश्वर्य प्रदान गर ।

**त्वं ह त्यदिन्द्र कुत्समावः शुश्रूषमाणस्तन्वा समर्ये । दासं यच्छुष्णं कुयवं न्य स्मा अरन्धय आर्जुनेयाय शिक्षन् ॥२॥**

हे इन्द्रदेवता ! सङ्ग्रामका समयमा तिमीले नै कुत्सलाई आफैँले सुसार र सुरक्षा गरेका थियौ । उसै बेला तिमीले अर्जुनीका पुत्र कुत्सलाई धन दिएका थियौ र शुष्ण तथा कुयव नामका दासलाई संहार गरेका थियौ ।

**त्वं धृष्णो धृषता वीतहव्यं प्रावो विश्वाभिरूतिभिः सुदासम् । प्र पौरुकुत्सिं त्रसदस्युमावः क्षेत्रसाता वृत्रहत्येषु पूरुम् ॥३॥**

हे अदम्य इन्द्रदेवता ! तिमी हवि पदार्थ अर्पित गर्ने राजा सुदासलाई आफ्नै रक्षण शक्ति र वज्रले गर्दछौ । तिमीले शत्रुलाई संहार गर्ने बेलामा र भूमिको बाँडफाँड गर्ने बेलामा पुरुकुत्सका पुत्र त्रसदस्यु एवं पुरुको संरक्षण गरेका थियौ ।

**त्वं नृभिर्नृमणो देववीतौ भूरीणि वृत्रा हर्यश्व हंसि । त्वं नि दस्युं चुमुरिं धुनिं चास्वापयो दभीतये सुहन्तु ॥४॥**

मानिसका हितैषि हे इन्द्रदेवता ! तिमीले युद्धभूमिमा मरुत्गणको सहायताले उनका शत्रुहरूलाई विनाश गरेका थियौ । हे हरियो वर्णका अश्व भएका इन्द्रदेवता ! तिमीले नै दभीतिलाई सुरक्षा गर्नका लागि चुमुरी र धुनी नामका दस्युहरूलाई मारेका थियौ ।

**तव च्यौत्नानि वज्रहस्त नानि नव यत् पुरो नवतिं च सद्यः । निवेशने शततमाविवेषीरहं च वृत्रं नमुचिमुताहन् ॥५॥**

हे वज्रधारी इन्द्रदेवता ! तिमीले आफ्नो प्रसिद्ध बलले शत्रुका उनान्सय सहरहरू अत्यन्त चाँडै ध्वस्त गरायौ । आफ्नो निवासका लागि सयौँ सहरमा प्रवेश गरेर तिमीले वृत्रासुर र नमुचीलाई मारिदियौ ।

**सना ता त इन्द्र भोजनानि रातहव्याय दाशुषे सुदासे । वृष्णे ते हरी वृषणा युनज्मि व्यन्तु ब्रह्माणि पुरुशाक वाजम् ॥६॥**

हे इन्द्रदेवता ! तिमीले हविदाता सुदास राजाका लागि सधैँ स्थायी रहने खालको धनसम्पदा प्रदान गरेका थियौ । हे धेरै किसिमको काम गर्ने इन्द्रदेवता ! कामनाहरू पूरा गराउने तिमी नै हौ । तिम्रा लागि हामी दुई वटा बलशाली अश्वलाई रथमा नियोजित गर्दछौँ । त्यस्ता बलवान् इन्द्रकहाँ हाम्रो स्तोत्र पुगोस् ।

**मा ते अस्यां सहसावन् परिष्ट्यवघाय भुम हरिवः परादै । त्रायस्व नोऽवृकेभिर्वरूथैस्तव प्रियासः सूरिषु स्याम ॥७॥**

हे इन्द्रदेवता ! तिमी बलवान् छौ र अश्वका स्वामी हौ । तिम्रा यस यज्ञमा हामी अर्काको सहायता प्राप्त गर्ने पाप गर्नेछैनौँ । आफ्ना रक्षण साधनले तिमी हामीलाई रक्षा गर । तिम्रो स्तुति गर्ने हामीहरू तिम्रा विशेष प्रियपात्र हुन सकौँ ।

**प्रियास इत् ते मघवन्नभिष्टौ नरो मदेम शरणे सखायः । नि तुर्वशं नि याद्वं शिशीह्यतिथिग्वाय शंस्यं करिष्यन् ॥८॥**

हे धनका अधिपति इन्द्रदेवता ! तिम्रो स्तुति गर्ने हामीहरू सबै आपसमा प्रेमपूर्वक मित्रभावले प्रसन्न भएर घरमा रहौँ । अतिथि सत्कारमा कुशल सुदासलाई सुख प्रदान गर्दै तिमी तुर्वश र यदुलाई परास्त गर ।

**सद्यश्चिन्नु ते मघवन्नभिष्टौ नरः शंसन्त्युक्थशास उक्था । ये ते हवेभिर्वि पणीँरदाशन्नस्मान् वृणीष्व युज्याय तस्मै ॥९॥**

हे धनवान् इन्द्रदेवता ! तिम्रा यज्ञमा हामी स्तोताहरूले नै उक्थ र स्तोत्र उच्चारण गर्दछौँ ।

तिमीलाई हवि अर्पित गरेर उक्थहरू उच्चारण गर्दै लोभी पणीहरूलाई धन दान गर्ने प्रेरणा प्रदान गरौँ । हामी सबैलाई तिमी मित्रभैँ स्वीकार गर ।

**एते स्तोमा नरां नृतम तुभ्यमस्मद्र्यञ्चो ददतो मघानि । तेषामिन्द्र वृत्रहत्ये शिवो भूः सखा च शूरोऽविता च नृणाम् ॥१०॥**

हे नेतृत्व गर्नेहरूमा श्रेष्ठ इन्द्रदेवता ! स्तोत्र र हविले तिमीलाई यजन गर्नेहरूले तिमीलाई हामी सबैका हितैषि बनाइदिएका छन् । युद्धमा तिमी तिनै स्तोताहरूलाई सुरक्षा गर ।

**नू इन्द्र शूर स्तवमान ऊती ब्रह्मजूतस्तन्वा वावृधस्व । उप नो वाजान् मिमीह्युप स्तीन् यूयं पात स्वस्तिभिः सदा नः ॥११॥**

हे शूरवीर इन्द्रदेवता ! स्तुत्य भएर र ज्ञानले प्रेरित भएर तिम्रो शरीर र रक्षण शक्तिमा वृद्धि होस् । हामी सबैलाई तिमी आफ्नो कल्याणकारी शक्तिले सुरक्षित गर र अन्न एवं आवासका लागि घर प्रदान गर ।

## सूक्त– ३८

**ऋषि**– इरिम्बिठि, मधुच्छन्दा । **देवता**– इन्द्र । **छन्द**– त्रिष्टुप् ।

**आ याहि सुषुमा हि त इन्द्र सोमं पिबा इमम् । एदं बर्हिः सदो मम ॥१॥**

हे इन्द्रदेवता ! तिमी हाम्रा यस यज्ञमा आऊ । तयार पारिएको सोमरस तिमीलाई समर्पित छ, त्यसलाई पान गरेर तिमी श्रेष्ठ आसनमाथि विराजमान होऊ ।

**आ त्वा ब्रह्मयुजा हरी वहतामिन्द्र केशिना । उप ब्रह्माणि नः शृणु ॥२॥**

हे इन्द्रदेवता ! साङ्केतिक मन्त्र सुन्नेबित्तिकै रथमा नारिने गरेका श्रेष्ठ अश्वका सहायताले तिमी नजिकै आएर हाम्रो प्रार्थना सुन ।

**ब्रह्माणस्त्वा वयं युजा सोमपामिन्द्र सोमिनः । सुतावन्तो हवामहे ॥३॥**

हे सोमरस पान गर्ने इन्द्रदेवता ! हामी ब्रह्मनिष्ठ, सोमयज्ञ गर्ने साधकहरू सोमपान गर्नका लागि तिमीलाई आह्वान गर्दछौँ ।

**इन्द्रमिद् गाथिनो बृहदिन्द्रमर्केभिरर्किणः । इन्द्र वाणीरनूषत ॥४॥**

सामगान गाउने साधकले गाएका बृहत् सामका स्तुतिले देवताका राजा इन्द्र प्रसन्न हुने गर्दछन् । यसै किसिमले याज्ञिकहरू पनि मन्त्र उच्चारण गर्दै इन्द्रलाई स्तुति गर्दछन् ।

**इन्द्र इद्धर्योः सचा संमिश्ल आ वचोयुजा । इन्द्रो वज्री हिरण्ययः ॥५॥**

वज्रधारी, सुनका आभूषणले सजिएका इन्द्रदेवता वचनको सङ्केतमात्रैले रथमा नारिने अश्वका पनि साथी नै हुन् ।

**इन्द्रो दीर्घाय चक्षस आ सूर्यं रोहयद् दिवि । वि गोभिरद्रिमैरयत् ॥६॥**

देवशक्तिलाई सङ्गठित गर्ने इन्द्रदेवताले विश्वलाई प्रकाशित गर्ने महान् उद्देश्यले सूर्यदेवतालाई आकाशको उचाइमा स्थापित गराए र सूर्यरूपी इन्द्रले नै आफ्ना किरणले मेघ तथा पर्वत आदिलाई पर हटाए ।

## सूक्त– ३९

**ऋषि**– मधुच्छन्दा, गोषूक्ति अश्वक्ति । **देवता**– इन्द्र । **छन्द**– गायत्री ।

**इन्द्रं वो विश्वतस्परि हवामहे जनेभ्यः । आस्माकमस्तु केवलः ॥१॥**

हे ऋत्विक्हरू हो ! विश्वमा सबैभन्दा उत्तम इन्द्रलाई तिमीहरू सबैको कल्याणका लागि हामीले आमन्त्रित गरेका छौँ । उनले हामीमाथि विशेष कृपा गरून् ।

**व्यन्तरिक्षमतिरन्मदे सोमस्य रोचना । इन्द्रो यदभिनद् वलम् ॥२॥**

सोमपान गरेर उत्पन्न भएको उमङ्गले जब इन्द्रदेवताले बलवान् मेघलाई विदीर्ण गरेका उनले प्रकाशवान् आकाशलाई पनि विस्तार गराए ।

उद् गा आजदङ्गिरोभ्य आविष्कृण्वन् गुहा सतीः । अर्वाञ्चं नुनुदे वलम् ॥३॥
सूर्यका रूपमा रहेका हे इन्द्रदेवता ! तिमीले गुफामा छलिएर रहेका किरणरूपी गाईलाई प्रकट गराएर अङ्गिरारूपी शरीरधारीहरू भएका ठाउँमा पुऱ्यायौ । उनले रोकिराख्ने बल नामका असुरलाई उँधो मुन्टा पारेर भगाइदियौ ।

इन्द्रेण रोचना दिवो दृढहानि दृंहितानि च । स्थिराणि न पराणुदे ॥४॥
अन्तरिक्षमा रहेका सबै प्रकाशवान् नक्षत्रहरूलाई इन्द्रदेवताले सुदृढ र समृद्ध बनाए । ती नक्षत्रहरूलाई कसैले पनि तिनका स्थानबाट हटाउन सक्दैन ।

अपामूर्मिर्मदन्निव स्तोम इन्द्राजिरायते । वि ते मदा अराजिषुः ॥५॥
हे इन्द्रदेवता ! जसरी समुद्रका लहरहरू उर्लने गर्दछन्, उसै गरी तिम्रा लागि गरिएको प्रार्थना पनि चाँडै नै तिमीकहाँ पुगेर तिम्रो उत्साह बढाउँछ ।

## सूक्त– ४०

**ऋषि–** मधुच्छन्दा । **देवता–** इन्द्र, मरुद्गण । **छन्द–** गायत्री ।

**इन्द्रेण सं हि दृक्षसे संजग्मानो अबिभ्युषा । मन्दू समानवर्चसा ॥१॥**
सधैँ प्रसन्न रहने, समान तेज भएका मरुत्गण, निर्भय रहने इन्द्रसँग सङ्गठित भएर सुहाउँदो बनेका छन् ।

**अनवद्यैरभिद्युभिर्मखः सहस्वदर्चति । गणैरिन्द्रस्य काम्यैः ॥२॥**
अत्यन्त तेजस्वी र पापरहित इन्द्रको कामना गर्ने मरुत्गणका कारण यो यज्ञ सुशोभित भएको छ ।

**आदह स्वधामनु पुनर्गर्भत्वमेरिरे । दधाना नाम यज्ञियम् ॥३॥**
यज्ञीय नाम भएका, धारण गर्नमा समर्थ मरुत्हरू वास्तवमा अन्न वृद्धि गराउने कामनाले बारम्बार मेघ आदिका गर्भमा पुग्ने गर्दछन् ।

## सूक्त– ४१

**ऋषि–** गोतम । **देवता–** इन्द्र । **छन्द–** गायत्री ।

**इन्द्रो दधीचो अस्थभिर्वृत्राण्यप्रतिष्कुतः । जघान नवतीर्नव ॥१॥**
अपराजित इन्द्रदेवताले दधीचिका हड्डीले बनेका वज्रले उनान्सय किसिमका वृत्र नामका राक्षसहरूको संहार गरे ।

**इच्छन्नश्वस्य यच्छिरः पर्वतेष्वपश्रितम् । तद् विदच्छर्यणावति ॥२॥**
इन्द्रदेवताका मनका सङ्कल्पले अश्वको शिर पर्वतका पल्लोपट्टि शर्यणावत् नामको सरोवरमा छ भन्ने जब थाहा भयो दधीचिका हड्डीलाई वज्र बनाएर त्यसै वज्रले वृत्र नामका असुरलाई वध गरे ।

**अत्राह गोरमन्वत नाम त्वष्टुरपीच्यम् । इत्था चन्द्रमसो गृहे ॥३॥**
यसै गरी मनीषीहरूले संसारलाई सन्तुष्टि प्रदान गर्ने त्वष्टा नामका सूर्यदेवताको दिव्य तेज, गतिमान् चन्द्रमण्डलमा रहेको अनुभव गरे ।

## सूक्त– ४२

**ऋषि–** कुरुस्तुति । **देवता–** इन्द्र । **छन्द–** गायत्री ।

**वाचमष्टापदीमहं नवस्रक्तिमृतस्पृशम् । इन्द्रात् परि तन्वं ममे ॥१॥**
हे इन्द्रदेवता ! तिम्रो सत्यलाई बढाउने, नयाँ कल्पनाले सम्पन्न आठ पदले युक्त वाणीलाई हामीले धारण गरेका छौँ ।

**अनु त्वा रोदसी उभे क्रक्षमाणमकृपेताम् । इन्द्र यद् दस्युहाभवः ॥२॥**
शत्रुसित प्रतिस्पर्धाको भावना राख्ने गरेका हे इन्द्रदेवता ! तिमीले शत्रुनाश गर्दाखेरि द्युलोक र पृथ्वीलोक दुवै कम्पायमान भएका थिए ।

**उत्तिष्ठन्नोजसा सह पीत्वी शिप्रे अवेपयः । सोममिन्द्र चमू सुतम् ॥३॥**
हे इन्द्रदेवता ! पात्रमा राखिइको सोमरस ग्रहण गरेर सामर्थ्यशाली हुँदै तिमी उठ र आफ्ना दुवै ओठ चलायमान गराऊ ।

## सूक्त— ४३

**ऋषि—** त्रिशोक । **देवता—** इन्द्र । **छन्द—** गायत्री ।

**भिन्धि विश्वा अप द्विषः परि बाधो जही मृधः । वसु स्पार्हं तदा भर ॥१॥**
हे इन्द्रदेवता ! तिमी हाम्रा शत्रुलाई नाश गरेर उनलाई हामीदेखि पर हटाइदेऊ र उनको ऐश्वर्य हामीकहाँ ल्याइदेऊ ।

**यद् वीलाविन्द्र यत् स्थिरे यत् पर्शाने पराभृतम् । वसु स्पार्हं तदा भर ॥२॥**
हे इन्द्रदेवता ! हामीलाई तिमी यस्तो खालको ऐश्वर्य प्रदान गर, जो पुष्ट र स्थिर भूमिमा विद्यमान होस् तथा जसलाई कसैले छोएको पनि नहोस् ।

**यस्य ते विश्वमानुषो भूरेर्दत्तस्य वेदति । वसु स्पार्हं तदा भर ॥३॥**
हे इन्द्रदेवता ! तिमीले प्रदान गरेको जुन वैभवलाई सबैले उचित किसिमले जानेका छन्, त्यो हामीलाई पर्याप्त मात्रामा प्रदान गर ।

## सूक्त— ४४

**ऋषि—** इरिम्बिठि । **देवता—** इन्द्र, मरुद्गण । **छन्द—** गायत्री ।

**प्र सम्राजं चर्षणीनामिन्द्रं स्तोता नव्यं गीर्भिः । नरं नृषाहं मंहिष्ठम् ॥१॥**
हे स्तोताहरू हो ! तिमीहरू मानिसहरूमध्ये मनग्गे प्रतिष्ठा प्राप्त गरेका, स्तुति गर्न योग्य, शत्रुमाथि विजय प्राप्त गरेका, नेतृत्वको क्षमताले सम्पन्न, महान् इन्द्रदेवताको स्तुति गर ।

**यस्मिन्नुक्थानि रण्यन्ति विश्वानि च श्रवस्या । अपामवो न समुद्रे ॥२॥**
जसरी सबै जलप्रवाहहरू समुद्रमा खसेर त्यसको शोभा बढाउँछन्, उसै गरी समस्त स्तुति र कीर्तिहरूले इन्द्रदेवता सुशोभित हुने गरेका छन् ।

**तं सुष्टुत्या विवासे ज्येष्ठराजं भरे कृत्नुम् । महो वाजिनं सनिभ्यः ॥३॥**
हामी महान् धन प्राप्त गर्नका लागि रणक्षेत्रमा प्रबल पुरुषार्थ गर्ने, शक्तिशाली, महान् राजा इन्द्रदेवतालाई श्रेष्ठ स्तुतिले स्वागतसत्कार गर्दछौँ ।

## सूक्त— ४५

**ऋषि—** शुनः शेप (देवरातापरनामा) । **देवता—** इन्द्र, मरुद्गण । **छन्द—** गायत्री ।

**अयमु ते समतसि कपोत इव गर्भधिम् । वचस्तच्चिन्न ओहसे ॥१॥**
हे इन्द्रदेवता ! जसरी गर्भधारण गर्ने रहर भएका पोथी ढुक्कुरसँग भाले ढुक्कुर स्नेहपूर्वक जाने गर्दछ, उसै गरी स्नेहपूर्वक यो सोमरस तिम्रा लागि प्रस्तुत भएको छ । तिमी यसलाई स्वीकार गर ।

**स्तोत्रं राधानां पते गिर्वाहो वीर यस्य ते । विभूतिरस्तु सूनृता ॥२॥**
हे धनका अधिपति, स्तुत्य र वीर इन्द्रदेवता ! तिमी वैभवसम्पन्न छौ र तिम्रा विषयमा यस किसिमको स्तोत्र सत्य सिद्ध हुने गर्दछ ।

**ऊर्ध्वस्तिष्ठा न ऊतयेऽस्मिन् वाजे शतक्रतो । समन्येषु ब्रवावहै ॥३॥**
हे सयौँ यज्ञ आदि असल कर्म सम्पन्न गरेका इन्द्रदेवता ! जीवनरूपी युद्धमा हाम्रो संरक्षण गर्नका लागि तिमी नजिकै आऊ । अरू देवताहरू उपस्थित रहे तापनि हामी तिमीलाई नै स्तुति गर्दछौँ ।

## सूक्त— ४६

**ऋषि—** इरिम्बिठि । **देवता—** इन्द्र, मरुद्गण । **छन्द—** गायत्री ।

**प्रणेतारं वस्यो अच्छा कर्तारं ज्योतिः समत्सु । सासह्वांसं युधामित्रान् ॥१॥**
इन्द्रदेवता धनवान्हरूलाई धन दान गराउने, सङ्ग्राममा शौर्य देखाउने र शस्त्रास्त्रले शत्रुलाई

परास्त गराउने गर्दछन् ।

**स नः पप्रिः पारयाति स्वस्ति नावा पुरुहूतः । इन्द्रो विश्वा अति द्विषः ॥२॥**

सबैको परिपालन गर्ने इन्द्रदेवता अनेकौं तिरबाट आह्वान गरिँदै हुन्छन् । उनी रक्षण साधनरूपी आफ्नो नौकाले समस्त शत्रुबाट हामीलाई पार लगाएर हाम्रो रक्षा गरून् ।

**स त्वं न इन्द्र वाजेभिर्दशस्या च गातुया च । अच्छा च नः सुम्नं नेषि ॥३॥**

हे इन्द्रदेवता ! हामीलाई तिमी शक्ति र धनधान्यले परिपूर्ण ऐश्वर्य प्रदान गर । श्रेष्ठ मार्ग प्रदर्शित गराउँदै हामीलाई सुखी बनाऊ ।

## सूक्त– ४७

**ऋषि–** सुकक्ष, मधुच्छन्दा, इरिम्बिठि, प्रस्कण्व । **देवता–** इन्द्र, सूर्य । **छन्द–** गायत्री ।

**तमिन्द्रं वाजयामसि महे वृत्राय हन्तवे । स वृषा वृषभो भुवत् ॥१॥**

वृत्रलाई संहार गर्नका लागि हामी इन्द्रदेवतालाई स्तुतिले प्रवृद्ध गराउँछौं । अभीष्टवर्षक उनै इन्द्रदेवता शक्तिसम्पन्न एवं पराक्रमी वीर होऊन् ।

**इन्द्रः स दामने कृत ओजिष्ठः स मदे हितः । द्युम्नी श्लोकी स सोम्यः ॥२॥**

दान दिनका लागि उनै इन्द्रदेवता प्रख्यात छन् । उनी बलवान् बन्नका लागि सोमपान गर्दछन् । प्रशंसनीय कार्य गर्ने उनै देवता सोमपान गराउनका लागि पनि योग्य छन् ।

**गिरा वज्रो न संवृतः सबलो अनपच्युतः । ववक्ष ऋष्वो अस्तृतः ॥३॥**

हातमा वज्र लिएका, स्तुतिले प्रशंसित, तेजस्वी, वीर र अपराजेय इन्द्रदेवता साधकलाई ऐश्वर्य प्रदान गर्दछन् ।

**इन्द्रमिद् गाथिनो बृहदिन्द्रमर्केभिरार्किणः । इन्द्रं वाणीरनूषत ॥४॥**

सामगान गाउने साधकहरूले गाउने योग्य बृहत् सामका स्तुतिगाथाहरूले देवताका राजा इन्द्र प्रसन्न हुने गरेका छन् । यसै किसिमले याज्ञिकहरू पनि मन्त्र उच्चारण गरेर इन्द्रदेवताको नै स्तुति गर्ने गर्दछन् ।

**इन्द्र इद्धर्योः सचा संमिश्ल आ वचोयुजा । इन्द्रो वज्री हिरण्ययः ॥५॥**

हातमा वज्र लिएका, सुनौला वस्त्रले सजिएका इन्द्रदेवता वचनको सङ्केत पाउनासाथ रथमा नारिने अश्वका पनि साथी हुन् ।

**इन्द्रो दीर्घाय चक्षस आ सूर्यं रोहयद् दिवि । वि गोभिरद्रिमैरयत् ॥६॥**

देवशक्तिलाई सङ्गठित गराउने इन्द्रदेवताले विश्वलाई प्रकाशित गराउने महान् उद्देश्यले सूर्यदेवतालाई आकाशको उचाइमा स्थापित गरे र सूर्यरूपी उनै इन्द्रले नै आफ्ना किरणले मेघ, पर्वत आदिलाई पर पन्छाए ।

**आ याहि सुषुमा हि त इन्द्र सोमं पिबा इमम् एदं बर्हिः सदो मम ॥७॥**

हे इन्द्रदेवता ! हाम्रा यस यज्ञमा तिमी आऊ । तयार गरिएको सोमरस तिम्रा लागि समर्पित गरिएको छ । त्यसलाई पान गरेर उच्च आसनमा विराजमान होऊ ।

**आ त्वा ब्रह्मयुजा हरी वहतामिन्द्र केशिना । उप ब्रह्माणि नः शृणु ॥८॥**

हे इन्द्रदेवता ! मन्त्रको सङ्केत सुन्नासाथ रथमा नारिने खालका श्रेष्ठ अश्वका माध्यमबाट तिमी हाम्रा नजिक आएर प्रार्थना सुन ।

**ब्रह्माणस्त्वा वयं युजा सोमपामिन्द्र सोमिनः । सुतावन्तो हवामहे ॥९॥**

हे सोमपान गर्ने इन्द्रदेवता ! हामी ब्रह्मनिष्ठ सोमयज्ञकर्ता साधकहरू सोमपान गर्नका लागि तिमीलाई आह्वान गर्दछौं ।

**युञ्जन्ति ब्रध्नमरुषं चरन्तं परि तस्थुषः । रोचन्ते रोचना दिवि ॥१०॥**

बाँधेर राख्ने भएकाले ब्रध्न नाम भएका तेजस्वी इन्द्रको उपस्थितिले गर्दा चारैतिर घुम्नेहरू पनि

एकै ठाउँमा अडिएर रहेका छन् । उनले यसै किसिमले प्रकाशमान द्युलोकलाई प्रकाशित गराउँछन् ।

**युञ्जन्त्यस्य काम्या हरी विपक्षासा रथे । शोणा धृष्णू नृवाहसा ॥११॥**

यी इन्द्रका रथका दुवै छेउमा कामना योग्य नेता इन्द्रलाई वहन गर्ने विचार गरेका सङ्घर्ष क्षमताले सम्पन्न दुई वटा हरि नामका गतिशील अश्वहरू जोतिइरहेका हुन्छन् ।

**केतुं कृण्वन्नकेतवे पेशो मर्या अपेशसे । समुषद्भिरजायथाः ॥१२॥**

हे मानिसहरू ! तिमीहरू रातका समयमा निद्राका वशमा परेर, चेतनाविहीन हुन्छौ र बिहान फेरि सचेत एवं सचेष्ट हुने गर्दछौ । मानौं तिमीहरू प्रत्येक दिन नयाँ जीवन पाइरहेका छौ र प्रतिदिन नयाँ जन्म लिने गर्दछौ ।

**उदु त्यं जातवेदसं देवं वहन्ति केतवः । दृशे विश्वाय सूर्यम् ॥१३॥**

ज्योतिले सम्पन्न यो रश्मि सम्पूर्ण प्राणीका ज्ञाता सूर्यदेवतलाई र सम्पूर्ण विश्वलाई समान दृष्टि प्रदान गर्नका लागि विशेष रूपले प्रकाशित हुने गर्दछ ।

**अप त्ये तायवो यथा नक्षत्रा यन्त्यक्तुभिः । सूराय विश्वचक्षसे ॥१४॥**

सबैलाई प्रकाश प्रदान गर्ने सूर्यदेवता उदाउनासाथ रातको तारामण्डल उसरी नै लुक्यो जसरी दिउँसोका समयमा चोरहरू लुक्ने गर्दछन् ।

**अदृश्रन्नस्य केतवो वि रश्मयो जनाँ अनु । भ्राजन्तो अग्नयो यथा ॥१५॥**

दन्किइरहेका अग्निको किरणजस्ता सूर्यदेवताको रश्मिले सम्पूर्ण जीवनजगत्‌लाई प्रकाशित गराउँछ ।

**तरणिर्विश्वदर्शतो ज्योतिष्कृदसि सूर्य । विश्वमा भासि रोचन ॥१६॥**

हे सूर्यदेवता ! तिमी साधकहरूलाई उद्धार गर्ने हौ, समस्त संसारमा एकमात्र दर्शनीय प्रकाशक तिमी नै हौ र तिमी नै विस्तृत अन्तरिक्षलाई पनि सबै तिरबाट प्रकाशित गराउँछौ ।

**प्रत्यङ् देवानां विशः प्रत्यङ्ङुदेषि मानुषीः । प्रत्यङ् विश्वं स्वर्दृशे ॥१७॥**

हे सूर्यदेवता ! देवता र मानिसहरूका लागि तिमी नियमित रूपमा उदाउने गर्दछौ । तिमी नै सम्पूर्ण विश्वलाई प्रकाशित गराउँछौ ।

**येना पावक चक्षसा भुरण्यन्तं जनाँ अनु । त्वं वरुण पश्यसि ॥१८॥**

हे पवित्रकर्ता देवता ! जुन दृष्टिरूपी प्रकाशक शक्तिले तिमी सम्पूर्ण प्राणीलाई भरणपोषण गर्ने मानिसहरूलाई हेर्ने गर्दछौ उसैले हामीलाई पनि हेर र हामीलाई त्यसैले प्रकाशित गराऊ ।

**वि द्यामेषि रजस्पृथ्वहर्मिमानो अक्तुभिः । पश्यञ्जन्मानि सूर्य ॥१९॥**

हे सूर्यदेवता ! तिमी दिन र रातका रूपमा समयलाई विभाजन गर्दै अन्तरिक्ष र द्युलोकमा भ्रमण गर्दै सबै प्राणीलाई हेर्ने गर्दछौ ।

**सप्त त्वा हरितो रथे वहन्ति देव सूर्य । शोचिष्केशं विचक्षणम् ॥२०॥**

हे सर्वद्रष्टा सूर्यदेवता ! तिमी तेजस्वी ज्वालाहरूले युक्त भएका सप्तरङ्गी किरणरूपी अश्वका रथमा दिव्यतापूर्वक सुशोभित हुने गरेका छौ ।

**अयुक्त सप्त शुन्ध्युवः सूरो रथस्य नप्त्यः । ताभिर्याति स्वयुक्तिभिः ॥२१॥**

पवित्रता प्रदान गर्ने, ज्ञानसम्पन्न, ऊर्ध्वगामी सूर्यदेवत आफ्ना सप्तरङ्गी अश्वरूपी किरणले सुशोभित रथमा आफ्नै युक्तिअनुसार गमन गर्दछन् ।

## सूक्त— ४८

**ऋषि—** खिल्, सार्पराज्ञी । **देवता—** गौ, सूर्य । **छन्द—** गायत्री ।

**अभि त्वा वर्चसा गिरः सिञ्चन्तीराचरण्यवः । अभि वत्सं न धेनवः ॥१॥**

स्वतन्त्र घुम्ने गाईहरू जसरी बारम्बार आफ्ना बाछाका नजिक जान्छन्, उसै गरी स्तुतिरूपी वाणीहरू तेजद्वारा तिमीलाई सेचन गर्दै उसरी नै तिम्रा नजिक आउने गर्दछन् ।

**ता अर्षन्ति शुभ्रियः पृञ्चन्तीर्वर्चसा प्रियः । जातं जात्रीर्यथा हृदा ॥२॥**

संरक्षणको आवश्यकतालाई बुझेर आमाहरूले जसरी आफ्नो नवजात शिशुलाई छातीमा टाँसेर राख्दछन्, उसै गरी श्रेष्ठ भावनाले युक्त स्तुतिले तीव्रताका साथ इन्द्रदेवतालाई सुशोभित गराउँछ ।

**वज्रापवसाध्यः कीर्तिर्म्रियमाणमावहन् । मह्यमायुर्घृतं पयः ॥३॥**

वज्र, असाध्य रोग अथवा दुर्गुण आदि मर्नेहरूतिर जाऊन् र हामीलाई आयु, घिउरूपी तेज, दुध आदि पोषक रस प्राप्त होऊन् ।

**आयं गौः पृश्निरक्रमीदसदन्मातरं पुरः । पितरं च प्रयन्त्स्वः ॥४॥**

गतिमान् अवस्थामा रहने सूर्यदेवता प्रकट भएका छन् । उनले सबैभन्दा पहिले माता पृथ्वीलाई र त्यसपछि पिता स्वर्गलाई तथा अन्तरिक्षलाई प्राप्त गर्दछन् ।

**अन्तश्चरति रोचना अस्य प्राणादपानतः । व्यख्यन्महिषः स्वः ॥५॥**

यी सूर्यदेवताको प्रकाश आकाशमा सञ्चरण गर्दछ । यी सूर्यदेवताका रश्मिले प्राणदेखि अपानसम्मको प्रक्रिया पूरा गर्दछ । यी महान् सूर्यदेवताले द्युलोकलाई विशेष रूपले प्रकाशित गराउँछन् ।

**त्रिंशद् धामा वि राजति वाक् पतङ्गो अशिश्रियत् । प्रति वस्तोरहर्द्युभिः ॥६॥**

सर्वप्रेरक सूर्यदेवता दिउँसोका तीस घडीहरूभरि आफ्नो रश्मिले प्रकाशित हुने गर्दछन् । उनको स्तुति गर्नका लागि हामी वाणीको आश्रय लिने गर्दछौँ ।

## सूक्त– ४९

**ऋषि–** खिल, नोधा, मेध्यातिथि । **देवता–** इन्द्र । **छन्द–** गायत्री, प्रगाथ ।

**यच्छक्रा वाचमारुहन्नन्तरिक्षं सिषासथः । सं देवा अमदन् वृषा ॥१॥**

हे इन्द्रदेवता ! जब अन्तरिक्षमाथि विजय प्राप्त गर्ने अभिलाषाले स्तोताहरू वाणीको प्रयोग गर्दछन्, त्यस बेला देवशक्तिहरू पनि हर्षित हुने गर्दथे ।

**शक्रो वाचमधृष्टयोरुवाचो अधृष्णुहि । मंहिष्ठ आ मदर्दिवि ॥२॥**

हे शक्तिमान् इन्द्रदेवता ! तिमी शिष्ट मानिसमाथि कठोर वाणी प्रयोग नगर । तिमी महिमामय दिव्यलोकमा आनन्दमग्न होऊ ।

**शक्रो वाचमधृष्णुहि धामधर्मन् वि राजति । विमदन् बर्हिरासरन् ॥३॥**

हे इन्द्रदेवता ! तिमी कठोरतापूर्वक बोली उच्चारण नगर । तिमी विशिष्ट किसिमले आनन्दमग्न हुँदै आएर कुशका आसनमा विराजमान होऊ ।

**तं वो दस्ममृतीषहं वसोर्मन्दानमन्धसः । अभि वत्सं न स्वसरेषु धेनव इन्द्रं गीर्भिर्नवामहे ॥४॥**

हे ऋत्विक्हरू हो ! शत्रुबाट रक्षा गर्ने, तेजस्वी र सोमरसले तृप्त हुने इन्द्रदेवतालाई हामी उसै किसिमले स्तुति गर्दछौँ, जसरी गोठमा बाछो भेट्न जानका लागि गाई उल्लसित हुने गर्दछ ।

**द्युक्षं सुदानुं तविषीभिरावृतं गिरिं न पुरुभोजसम् । क्षुमन्तं वाजं शतिनं सहस्रिणं मक्षू गोमन्तमीमहे ॥५॥**

देवलोकका बासिन्दा, उत्तम दानदाता, सामर्थ्यवान् इन्द्रदेवताबाट हामी सबै किसिमका ऐश्वर्य, सयौँ गाई र पोषक अन्नको कामना गर्दछौँ ।

**तत् त्वा यामि सुवीर्यं तद् ब्रह्म पूर्वचित्तये । येना यतिभ्यो भृगवे धने हिते येन प्रस्कण्वमाविथ ॥६॥**

हे इन्द्रदेवता ! तिमीले जुन शक्तिले सन्न्यासी तथा भृगु ऋषिलाई धन प्रदान गरेका थियौ र जुन ज्ञानले प्रस्कण्व नामका ज्ञानीको रक्षा गरेका थियौ, उही ज्ञान र बल प्राप्त गर्नका लागि सबैभन्दा पहिले हामी तिमीलाई नै प्रार्थना गर्दछौँ ।

**येना समुद्रमसृजो महीरपस्तदिन्द्र वृष्णि ते शवः । सद्यः सो अस्य महिमा न संनशे यं क्षोणीरनुचक्रदे ॥७॥**

हे इन्द्रदेवता ! जुन शक्तिले तिमीले समुद्र तथा विशाल नदीहरूलाई निर्माण गरेका छौ, त्यही शक्तिले हाम्रो अभीष्ट पूरा गराउँछ । तिम्रो जुन महिमाको अनुगमन द्युलोक र पृथ्वीलोकले गर्दछन्, त्यसको कुनै पनि वारपार छैन ।

## सूक्त– ५०

**ऋषि–** मेध्यातिथि । **देवता–** इन्द्र । **छन्द–** प्रगाथ ।

**कन्नव्यो अतसीनां तुरो गृणीत मर्त्यः । नही न्वस्य महिमानमिन्द्रियं स्वर्गृणन्त आनशुः ॥१॥**

हे मानिसहरू हो ! चिरनवीन कुनै पनि आकार ग्रहण गर्ने बलवान् इन्द्रदेवताको स्तुति गर । उनको महिमा पूर्ण रूपले गाउन नसक्ने स्तोताले के स्वर्ग प्राप्त गर्न सक्दैन ?

**कदु स्तुवन्त ऋतयन्त देवत ऋषिः को विप्र ओहते । कदा हवं मघवन्निन्द्र सुन्वतः कदु स्तुवत आ गमः ॥२॥**

हे इन्द्रदेवता ! यस्तो कुन देवता होला, जो तिम्रा निम्ति यज्ञ गर्दछन् र ज्ञानी ऋषि को हुन्, जो तिम्रो स्तुति गरेर कृपा प्राप्त गर्दछन् ? हे धनवान् इन्द्रदेवता ! तिमी सोमरस पेल्नेहरूको स्तुति सुनेर उनीहरूका निकट कहिले जान्छौ ?

## सूक्त– ५१

**ऋषि–** प्रस्कण्व, पुष्टिगु । **देवता–** इन्द्र । **छन्द–** प्रगाथ ।

**अभि प्र वः सुराधसमिन्द्रमर्च यथा विदे । यो जरितृभ्यो मघवा पुरूवसुः सहस्रेणेव शिक्षति ॥१॥**

हे ऋत्विक्हरू हो ! ऐश्वर्यवान् इन्द्रदेवताको स्तुति गर्नेहरूलाई अनेकौं किसिमका श्रेष्ठ धनले सम्पन्न बनाउँछन् । त्यसैले उत्तम धन प्राप्त गर्नका लागि जसरी सम्भव हुन्छ, उनै इन्द्रदेवतालाई अर्चना गर ।

**शतानीकेव प्र जिगाति धृष्णुया हन्ति वृत्राणि दाशुषे । गिरेरिव प्र रसा अस्य पिन्विरे दत्राणि पुरुभोजसः ॥२॥**

जसरी सेनापतिले शत्रुमाथि चढाइ गर्ने समयमा आफ्ना सेनाको संरक्षण गर्दछ, उसै गरी श्रेष्ठ कार्यमा आफ्नो साधन लगाउनेहरूलाई इन्द्रदेवताले संरक्षण गर्दछन् । यस्तो साधन मानिसहरूका लागि पर्वतबाट खसेका झर्नाको पानीजस्तै लाभदायक हुन्छ ।

**प्र सु श्रुतं सुराधसमर्चा शक्रमभिष्टये । यः सुन्वते स्तुवते काम्यं वसु सहस्रेणेव मंहते ॥३॥**

हे स्तोताहरू हो ! सोमयज्ञ गर्ने स्तोताहरूलाई जुन इन्द्रदेवताले हजारौं किसिमका इच्छित ऐश्वर्य प्रदान गर्दछन् । उनै बलशाली, ऐश्वर्यशाली र यशस्वी इन्द्रदेवताको वाञ्छित सम्पत्ति प्राप्त गर्नका लागि प्रार्थना गर ।

**शतानीका हेतयो अस्य दुष्टरा यन्द्रस्य समिषो महीः । गिरिर्न भुज्मा मघवत्सु पिन्वते यदीं सुता अमन्दिषुः ॥४॥**

जब सुसंस्कृत सोमरसले इन्द्रदेवतालाई आनन्दित गराउँछ, त्यस बेला उनले सम्पत्तिवान्हरूलाई पर्वतजत्तिकै विशाल पदार्थको भण्डार प्रदान गरेर उनलाई सन्तुष्ट गराउँछन् । उनीसँग अडिग रहने र उचित किसिमले फ्याँकिने सयौं शस्त्रास्त्र छन् ।

## सूक्त— ५२

**ऋषि—** मेध्यातिथि । **देवता—** इन्द्र । **छन्द—** बृहती ।

**वयं घ त्वा सुतावन्त आपो न वृक्तबर्हिषः । पवित्रस्य प्रस्रवणेषु वृत्रहन् परि स्तोतार आसते ॥१॥**

हे इन्द्रदेवता ! जसरी पानी ओरालोतिर मात्रै बग्ने गर्दछ, उसै गरी शोधित सोमरसका साथमा हामी झुकेर तिमीलाई नमस्कार गर्दछौं । पवित्र यज्ञमा कुशका आसनमा सँगसँगै बसेर याजकहरू तिम्रै उपासना गर्दछन् ।

**स्वरन्ति त्वा सुते नरो वसो निरेक उक्थिनः । कदा सुतं तृषाण ओक आ गम इन्द्र स्वब्दीव वंसगः ॥२॥**

सबैलाई निवास प्रदान गर्ने हे इन्द्रदेवता ! सोमरस निकालेर याजकहरू तिम्रो स्तुति गर्दछन् । सोमपान गर्ने इच्छा भएका तिमी साँढे डुक्रिएको जस्तै शब्द गर्दै हामीकहाँ कहिले आउँछौ ?

**कण्वेभिर्धृष्णवा धृषद् वाजं दर्षि सहस्रिणम् । पिशङ्गरूपं मघवन् विचर्षणे मक्षू गोमन्तमीमहे ॥३॥**

धनवान्, ज्ञानी र शूरवीर हे इन्द्रदेवता ! हामी तिमीसित शत्रुनाशक, सुवर्णको जस्तै कान्ति भएको, गाईजस्तै पवित्र धन प्राप्त गर्ने इच्छा गर्दछौं । हे शूरवीर इन्द्रदेवता ! कण्वका वंशमा उत्पन्न भएका मेधावी ऋषिहरूले स्तुति गरेपछि तिमी उनीहरूलाई हजारौं किसिमका बल र ऐश्वर्य प्रदान गर्दछौ ।

## सूक्त— ५३

**ऋषि—** मेध्यातिथि । **देवता—** इन्द्र । **छन्द—** बृहती ।

**क ईं वेद सुते सचा पिबन्तं कद् वयो दधे । अयं यः पुरो विभिनत्त्योजसा मन्दानः शिप्र्यन्धसः ॥१॥**

सोमयज्ञमा एकै ठाउँमा स्थिर रहेर सोमपान गर्ने, अत्यधिक वैभवसम्पन्न इन्द्रदेवतालाई कसले चिनेको छैन र ? सोमपान गरेर खुसी हुने, शिरमा मुकुट धारण गरेका इन्द्रदेवता आफ्ना शक्तिले विरोधीहरूको नगरलाई विनाश गरिदिन्छन् ।

**दाना मृगो न वारणः पुरुत्रा चरथं दधे । नकिष्ट्वा नि यमदा सुते गमो महाश्चरस्योजसा ॥२॥**

आफ्ना ओजले विचरण गर्ने, हाम्रा सम्माननीय हे इन्द्रदेवता ! तिमी यस सोमयज्ञमा आऊ । शत्रुको खोजीमा घुम्ने गरेका, मदमत्त हात्तीजस्तै भएर रथमा चढेर यज्ञमा जानबाट तिमीलाई कसैले पनि रोक्न सक्दैन ।

**य उग्रः सन्ननिष्टृत स्थिरो रणाय संस्कृतः । यदि स्तोतुर्मघवा शृणवद्धवं नेन्द्रो योषत्या गमत् ॥३॥**

जो शस्त्रास्त्रले सुसज्जित भएर युद्धभूमिमा अडिग रहन्छन्, त्यस्ता अपराजेय, पराक्रमी, वैभवशाली इन्द्रदेवताले हाम्रो स्तुति सुनून् र अर्का स्थानमा नगएर यसै यज्ञमा आऊन् ।

## सूक्त— ५४

**ऋषि—** रेभ । **देवता—** इन्द्र । **छन्द—** अतिजगती, उपरिष्टाद् बृहती ।

**विश्वाः पृतना अभिभूतरं नरं सजूस्ततक्षुरिन्द्रं जजनुश्च राजसे । क्रत्वा वरिष्ठं वर आमुरिमुतोग्रमोजिष्ठं तवसं तरस्विनम् ॥१॥**

ऋषि अथवा देवताहरूले सेनानायक, पराक्रमी, सङ्गठित सेनाले युक्त शस्त्रास्त्र धारण गरेका इन्द्रदेवतालाई प्रकट गराए । उनै शत्रुहन्ता, उग्र, तीव्र गतिले कार्य गर्ने महिमामय इन्द्रदेव हुन् ।

**समीं रेभासो अस्वरन्निन्द्रं सोमस्य पीतये । स्वर्पतिं यदीं वृधे धृतव्रतो ह्योजसा समूतिभिः ॥२॥**

रेभ आदि याजक ऋषिहरूले सोमपान गर्नका लागि इन्द्रदेवतालाई स्तुति गरे । जब स्तोताहरू देवलोकका स्वामी, बल एवं वैभवले सम्पन्न इन्द्रदेवताको वन्दना गर्दछन्, त्यस बेला व्रतधारी एवं संरक्षण साधनले युक्त हुने गर्दछन् ।

**नेमिं नमन्ति चक्षसा मेषं विप्रा अभिस्वरा । सुदीतयो वो अद्रुहोऽपि कर्णे तरस्विनः समृक्वभिः ॥३॥**

नम्र स्वभाव भएका रेभ आदि विद्वान्हरू नेत्र एवं वाणीका साथ इन्द्रदेवतालाई नमस्कार गर्दछन् । कसैसित द्रोह नगर्ने हे श्रेष्ठ स्तोताहरू हो ! तिमीहरू पनि इन्द्रदेवताका कानलाई मन पर्ने खालका ऋचाहरूले उनको स्तुति गर ।

## सूक्त– ५५

**ऋषि–** रेभ । **देवता–** इन्द्र । **छन्द–** अतिजगती, बृहती ।

**तमिन्द्रं जोहवीमि मघवानमुग्रं सत्रा दधानमप्रतिष्कुतं शवांसि । मंहिष्ठो गीर्भिरा च यज्ञियो ववर्तद् राये नो विश्वा सुपथा कृणोतु वज्री ॥१॥**

धनवान्, वीर, महाबलशाली, अपराजेय इन्द्रदेवतालाई हामी सहायता प्राप्त गर्नका लागि बोलाउँछौं । सबैभन्दा महान्, यज्ञमा पूज्य इन्द्रदेवतालाई स्त्रोत्रले प्रार्थना गर्दछन् । ऐश्वर्य प्राप्त गर्नका लागि उनै वज्रधारीले हाम्रा सबै मार्गहरू सुगम बनाऊन् ।

**या इन्द्र भुज आभरः स्वर्वाँ असुरेभ्यः । स्तोतारमिन्मघवन्नस्य वर्धये ये च त्वे वृक्तबर्हिषः ॥२॥**

आत्मशक्तिले सम्पन्न हे इन्द्रदेवता ! तिमी राक्षसहरूबाट जितेर ल्याएका धनले स्तोताहरूलाई संरक्षण गर र जसले तिमीलाई आह्वान गर्दछन् उनैलाई उन्नति गराऊ ।

**यमिन्द्र दधिषे त्वमश्वं गां भागमव्ययम् । यजमाने सुन्वति दक्षिणावति तस्मिन् तं धेहि मा पणौ ॥३॥**

हे इन्द्रदेवता ! तिमीसित गाई, अश्व तथा अविनाशी ऐश्वर्य विद्यमान छन् । ती सबै तिमी सोमयाग गर्ने र दक्षिणा प्रदान गर्ने याजकहरूलाई प्रदान गर । तिमी उसलाई सम्पत्ति जोगाउन खोज्ने कन्जुसहरूलाई नदेऊ ।

## सूक्त– ५६

**ऋषि–** गोतम । **देवता–** इन्द्र । **छन्द–** पङ्क्ति ।

**इन्द्रो मदाय वावृधे शवसे वृत्रहा नृभिः । तमिन्महत्स्वाजिषूतेमर्भे हवामहे स वाजेषु प्र नोऽविषत् ॥१॥**

हर्ष र उत्साहवर्धनको कामना गरेर स्तोताले इन्द्रदेवताको यशलाई विस्तार गराउँछन् । त्यसैले साना र ठूला सबै युद्धमा हाम्रो रक्षक बनेका इन्द्रदेवतालाई आह्वान गर्दछौं । इन्द्रदेवताले हामीलाई युद्धमा रक्षा गरून् ।

**असि हि वीर सेन्योऽसि भूरि परादिः । असि दभ्रस्य चिद् वृधो यजमानाय शिक्षसि सुन्वत भूरि ते वसु ॥२॥**

हे वीर इन्द्रदेवता ! तिमी सैन्यबलले युक्त छौ । तिमी अनुचरहरूको वृद्धि गर्ने र उनलाई विपुल धन प्रदान गर्ने हौ । तिमी सोमयाग गर्ने यजमानका लागि विपुल धन प्राप्त गर्ने प्रेरणा प्रदान गर्दछौ ।

**यदुदीरत आजयो धृष्णवे धीयते धना । युक्ष्वा मदच्युता हरी कं हनः कं वसौ दधोऽस्माँ इन्द्र वसौ दधः ॥३॥**

युद्ध प्रारम्भ भएपछि शत्रुमाथि विजय प्राप्त गर्नेले नै धन प्राप्त गर्दछन् । हे इन्द्रदेवता ! युद्ध

आरम्भ भएपछि मद चुहाउने अश्वलाई तिमी आफ्ना रथमा जोत । तिमी कसलाई धन दिन्छौ र कसलाई वध गर्दछौ भन्ने कुरो तिमीमाथि नै निर्भर छ । त्यसैले हे इन्द्रदेवता ! हामीलाई ऐश्वर्यले सम्पन्न गराऊ ।

**मदेमदे हि नो ददिर्यूथा गवामृजुक्रतुः । सं गृभाय पुरू शतोभयाहस्त्या वसु शिशीहि राय आ भर ॥४॥**

हे इन्द्रदेवता ! यज्ञकार्यमा सोमरसले प्रफुल्लित भएर हामीलाई तिमी गाई आदि विपुल धन प्रदान गर्दछौ । हामीलाई तिमी दुवै हातले सयौं किसिमका वैभव प्रदान गर । हामी वीरतापूर्वक यशका भागीदार बनौं ।

**मादयस्व सुते सचा शवसे शूर राधसे । विद्मा हि त्वा पुरूवसुमुप कामान्त्ससृज्महेऽथा नोऽविता भव ॥५॥**

हे इन्द्रदेवता ! बल वृद्धिका लागि, हविष्यान्न ग्रहण गर्नका लागि र पेलेर तयार पारेको सोमरस पान गर्नका लागि हाम्रा यज्ञस्थलमा तिमी आऊ अनि सोमपान गरेर हर्षित होऊ । तिमीलाई विपुल सम्पदाको स्वामी भन्ने गरिन्छ । कामनाहरूलाई पूरा गरेर तिमी नै हाम्रो रक्षा गर्दछौ ।

**एते त इन्द्र जन्तवो विश्वं पुष्यन्ति वार्यम् । अन्तर्हि ख्यो जनानामर्यो वेदो अदाशुषां तेषां नो वेद आ भर ॥६॥**

हे इन्द्रदेवता ! यी सबै प्राणी तिमीलाई वरण गर्न योग्य पदार्थ बढाउने खालका छन् । हे स्वामी हे इन्द्रदेवता ! तिमी कृपणहरूले लुकाएको धन थाहा पाउँछौ, त्यस्तो धन खोजेर हामीलाई प्रदान गर ।

## सूक्त– ५७

**ऋषि–** मधुच्छन्दा, विश्वामित्र, गृत्समद, मेध्यातिथि । **देवता–** इन्द्र । **छन्द–** गायत्री अनुष्टुप, बृहती ।

**सुरूपकृत्नुमूतये सुदुघामिव गोदुहे । जुहूमसि द्यविद्यवि ॥१॥**

गाई दुहुने गोठालाले जसरी दिनदिनै मिठो दुध दुहुनका लागि गाईलाई बोलाउने गर्दछ, उसै गरी हामी पनि संरक्षण प्राप्त गर्नका लागि सौन्दर्यपूर्ण यज्ञकर्म सम्पन्न गर्ने इन्द्रदेवतालाई आह्वान गर्दछौं ।

**उप नः सवना गहि सोमस्य सोमपाः पिब । गोदा इद् रेवतो मदः ॥२॥**

सोमरस पान गर्ने हे इन्द्रदेवता ! तिमी सोम ग्रहण गर्नका लागि हाम्रो सोमयज्ञका सवनमा आऊ सोमरस पान गर र त्यसपछि प्रसन्न भएर याजकहरूलाई यश, वैभव र गाई आदि प्रदान गर ।

**अथा ते अन्तमानां विद्याम सुमतीनाम् । मा नो अति ख्य आ गहि ॥३॥**

हे इन्द्रदेवता ! सोमपान गरिसकेपछि तिम्रा नजिकै रहेका श्रेष्ठ प्रज्ञाले सम्पन्न पुरुषका उपस्थितिमा रहेर हामी तिम्रा विषयमा अझै धेरै ज्ञान प्राप्त गर्न सकौं । तिमी पनि हामीबाहेक अरू कसैका अगाडि आफ्नो स्वरूप प्रकट नगर ।

**शुष्मिन्तमं न ऊतये द्युम्निनं पाहि जागृविम् । इन्द्र सोमं शतक्रतो ॥४॥**

हे सयौं किसिमका कर्म गर्ने इन्द्रदेवता ! हामी याजकहरूलाई संरक्षण प्रदान गर्नका लागि तिमी अत्यन्त बलप्रदायक, दीप्तिमान् चैतन्यता प्रदान गर्ने सोमरसलाई पान गर ।

**इन्द्रियाणि शतक्रतो या ते जनेषु पञ्चसु । इन्द्र तानि त आ वृणे ॥५॥**

हे सयौं किसिमका कर्म गर्ने इन्द्रदेवता ! समाजका पाँचै किसिमका मानिससित इन्द्रियरूपी जुन विशेष सामर्थ्य छ, त्यसलाई हामी तिम्रो शक्तिका रूपमा स्वीकार गर्दछौं ।

**अगन्निन्द्र श्रवो बृहद् द्युम्नं दधिष्व दुष्टरम् । उत् ते शुष्मं तिरामसि ॥६॥**

हे इन्द्रदेवता ! यो महान् हविष्यान्न तिम्रा नजिक पुगोस् । तिमी शत्रुका लागि दुर्लभ एवं तेजस्वी सोमरस ग्रहण गर । हामी तिम्रो बल बढाइदिन्छौं ।

अर्वावतो न आ गह्यथो शक्र परावतः । उ लोको यस्ते अद्रिव इन्द्रह तत आ गहि ॥७॥
हे वज्रधारी इन्द्रदेवता ! तिमी नजिकमा रहेका ठाउँबाट हामीकहाँ आऊ । पर रहेका ठाउँबाट पनि हामीकहाँ आऊ । तिम्रो उत्कृष्ट लोक जहाँ छ, त्यस लोकबाट पनि तिमी यहाँ आऊ ।

इन्द्रो अङ्ग महद् भयमभी षदप चुच्यवत् । स हिं स्थिरो विचर्षणिः ॥८॥
युद्धमा स्थिर रहने विश्वद्रष्टा इन्द्रदेवता महान् पराभवकारी भयलाई चाँडै नै पर हटाउँछन् ।

इन्द्रश्च मृडयाति नो न नः पश्चादघं नशत् । भद्रं भवाति नः पुरः ॥९॥
यदि बलशाली इन्द्रदेवताले हामीलाई संरक्षण प्रदान गर्दछन् भने हामीलाई पापले नष्ट गर्न सक्दैन । उनले अनेकौँ तरिकाले हामीलाई कल्याण गर्नेछन् ।

इन्द्र आशाभ्यस्परि सर्वाभ्यो अभयं करत् । जेता शत्रून् विचर्षणिः ॥१०॥
शत्रुविजेता, प्रज्ञावान् इन्द्रदेवता सबै दिशाहरूबाट हामीलाई निर्भय प्रदान गर्दछन् ।

क ईं वेद सुते सचा पिबन्तं कद् वयो दधे अयं यः पुरो विभिनत्त्योजसा मन्दानः शिप्रयन्धसः ॥११॥
सोमयज्ञमा एकै स्थानमा विद्यमान रहेर सोमपान गर्ने, अत्यधिक वैभवसम्पन्न इन्द्रदेवतालाई कसले जान्दैन ? सोमपानले आनन्दित भएका, शिरस्त्राण धारण गरेर इन्द्रदेवता आफ्नै शक्तिले विरोधीहरूका सहरहरू विनष्ट गराइदिन्छन् ।

दाना मृगो न वारणः पुरुत्रा चरथं दधे । नकिष्ट्वा नि यमदा सुते गमो महाश्चरस्योजसा ॥१२॥
आफ्नै ओजले विचरण गर्ने र हाम्रा लागि अत्यन्त सम्माननीय हे इन्द्रदेवता ! तिमी यस सोमयज्ञमा आऊ । शत्रुलाई खोज्नका लागि घुम्ने गरेका, मदमत्त हात्तीजस्ता तिमीलाई रथमा चढेर यज्ञमा आउनका लागि कसैले रोक्न सक्दैन ।

य उग्रः सन्ननिष्टृतः स्थिरो रणाय संस्कृतः । यदि स्तोतुर्मघवा शृणवद्धवं नेन्द्रो योषत्या गमत् ॥१३॥
शस्त्रास्त्रले सुसज्जित भएर जो युद्धभूमिमा स्थिर रहन्छन्, त्यस्ता अपराजेय, पराक्रमी, वैभवशाली इन्द्रदेवताले हाम्रो स्तुति सुनून् र अरू ठाउँमा नगईकन यसै यज्ञमा आऊन् ।

वयं घ त्वा सुतावन्त आपो न वृक्तबर्हिषः । पवित्रस्य प्रस्रवणेषु वृत्रहन् परि स्तोतार आसते ॥१४॥
हे वृत्रहन्ता इन्द्रदेवता ! जसरी पानी ओरालोतिर नै बग्ने गर्दछ, उसै गरी प्रशोधित सोम साथमा लिँदै हामी तिमीलाई भुकेर नमस्कार गर्दछौँ । पवित्र यज्ञमा कुशका आसनमा एकै ठाउँमा बसेर याजकहरू तिम्रै उपासना गर्दछन् ।

स्वरन्ति त्वा सुते नरो वसो निरेक उक्थिनः । कदा सुतं तृषाण ओक आ गम इन्द्र स्वब्दीव वंसगः ॥१५॥
सबैलाई निवास प्रदान गर्ने हे इन्द्रदेवता ! सोमरस निकालिसकेर याजकहरू तिम्रो स्तुति गर्दछन् । सोमपान गर्ने इच्छा भएका तिमी साँढे डुक्रिएको जस्तै आवाज गर्दै कहिले आउँछौ ?

कण्वेभिर्धृष्णवा धृषद् वाजं दर्षि सहस्रिणम् । पिशङ्गरूपं मघवन् विचर्षणे मक्षू गोमन्तमीमहे ॥१६॥
धनवान्, ज्ञानी हे इन्द्रदेवता ! हामी तिमीसित शत्रुनाशक, सुवर्णको कान्तिले युक्त, गाईजस्तै पवित्र धन पाउने इच्छा गर्दछौँ । हे शूरवीर इन्द्रदेवता ! कण्ववंशीय मेधावी ऋषिहरूले स्तुति गरिसकेपछि तिमी उनीहरूलाई हजारौँ किसिमका बल र ऐश्वर्य प्रदान गर्दछौ ।

## सूक्त– ५८

**ऋषि–** नृमेध, भरद्वाज । **देवता–** इन्द्र, सूर्य । **छन्द–** प्रगाथ ।

**श्रायन्त इव सूर्यं विश्वेदिन्द्रस्य भक्षत । वसूनि जाते जनमान ओजसा प्रति भागं न दीधिम ॥१॥**

किरण जसरी सूर्यका आश्रयमा रहन्छ, उसै गरी इन्द्रदेवता पनि सम्पूर्ण संसारका आश्रयदाता हुन् । इन्द्रदेवतासित हामी आआफ्ना भागको कामना गर्दछौँ, किनभने उनी नै पहिले जन्मिएका र पछि जन्मिनेहरूलाई आआफ्नो भाग प्रदान गर्दछन् ।

**अनर्शरातिं वसुदामुप स्तुहि भद्रा इन्द्रस्य रातयः । सो अस्य कामं विधतो न रोषति मनो दानाय चोदयन् ॥२॥**

हे स्तोताहरू हो ! तिमीहरू सत्पुरुषलाई धन आदि दान गर्ने इन्द्रदेवतालाई स्तुति गर । किनभने यिनको दान कल्याणकारी प्रेरणा प्रदान गर्ने खालको छ । जब इन्द्रदेवता आफ्नो मनअनुसारको फल प्रदान गर्ने प्रेरणा दिन्छन् त्यस बेला उपासकका मनको कामना नष्ट गराउँदैनन् ।

**बण्महाँ असि सूर्य बडादित्य महाँ असि । महस्ते सतो महिमा पनस्यतेऽद्धा देव महाँ असि ॥३॥**

हे अदितिका पुत्र सूर्यरूपी इन्द्रदेवता ! तिमी महान् तेजस्वी छौ भन्ने कुरो निश्चित नै छ । हे देवता ! तिमी महान् शक्तिशाली छौ । हामी तिम्रा महानताको गुणगान गर्दछौँ ।

**बट् सूर्य श्रवसा महाँ असि सत्रा देव महाँ असि । मह्ना देवानामसुर्यः पुरोहितो विभु ज्योतिरदाभ्यम् ॥४॥**

हे सूर्यदेवता ! तिमी आफ्नै यशका कारण महान् छौ । देवताहरूका बीचमा विशेष महत्त्वका कारण तिमी महान् छौ । तिमी अन्धकाररूपी असुरलाई नाश गर्दछौ । तिमी पुरोहितजस्तै भएर देवताहरूलाई नेतृत्व प्रदान गर्दछौ । तिम्रो तेज अदम्य, सर्वव्यापी र अविनाशी छ ।

## सूक्त– ५९

**ऋषि–** मेध्यातिथि, वसिष्ठ । **देवता–** इन्द्र । **छन्द–** प्रगाथ ।

**उदु त्ये मधुमत्तमा गिर स्तोमास ईरते । सत्राजितो धनसा अक्षितोतयो वाजयन्तो रथा इव ॥१॥**

मधुरतायुक्त श्रेष्ठ वाणीको स्तुति प्रकट भइरहेको छ । विजय प्रदान गर्ने, ऐश्वर्य प्राप्तिका माध्यम, निरन्तर रक्षा गर्ने, मधुर स्तोत्र रथजस्तै भएर देवतासमक्ष हव्यका रूपमा इच्छित भाव पुऱ्याउने गर्दछन् ।

**कण्वा इव भृगवः सूर्या इव विश्वमिद्धीतमानशुः । इन्द्रं स्तोमेभिर्महयन्त आयवः प्रियमेधासो अस्वरन् ॥२॥**

कण्वका वंशज ऋषिहरूको जस्तै गरी स्तुति गर्दै भृगुको वंशमा उत्पन्न भएका ऋषिहरूले इन्द्रदेवतालाई चारै तिरबाट घेरेका छन् । त्यो घेरा सूर्यलाई रश्मिले घेरेको जस्तै चारैतिर फैलिएको छ । प्रियमेधले स्तुति गर्दै महान् इन्द्रदेवताको पूजा गरे ।

**उदिन्न्वस्य रिच्यतेंऽशो धनं न जिग्युषः । य इन्द्रो हरिवान्न दभन्ति तं रिपो दक्षं दधाति सोमिनि ॥३॥**

जुन यजमानले हरि नामका अश्वयुक्त रथमा बसेका इन्द्रदेवतालाई सोमरस तयार गरेर अर्पित गर्दछन्, उनीहरू इन्द्रदेवताको कृपाले प्राप्त गरेका बलले शत्रु जित्न सक्छन् ।

**मन्त्रमखर्वं सुधितं सुपेशसं दधात यज्ञियेष्वा । पूर्वीश्चन प्रसितयस्तरन्ति तं य इन्द्रे कर्मणा भुवत् ॥४॥**

हे स्तोताहरू हो ! यजनीय देवताहरूका बीचमा इन्द्रदेवताका लागि अति नै राम्रोसित कुँदिएजस्तै गरी तयार पारेको राम्रो स्तोत्र अर्पित गर । जसको स्तोत्र इन्द्रदेवताले मनैबाट स्वीकार गर्दछन्

उसलाई कुनै पनि किसिमका बन्धनले कष्ट दिन सक्दैन ।

## सूक्त– ६०

**ऋषि–** सुतकक्ष वा सुकक्ष, मधुच्छन्दा । **देवता–** इन्द्र । **छन्द–** गायत्री

**एवा ह्यसि वीरयुरेवा शूर उत स्थिरः । एवा ते राध्यं मनः ॥१॥**

हे बलवान् इन्द्रदेवता ! रणक्षेत्रमा शत्रुलाई पराजित गराउने, युद्धमा अडिग रहने तिमी शूरवीर छौ । तिम्रो सङ्कल्पशील मन प्रशंसाका लागि योग्य छ ।

**एवा रातिस्तुवीमघ विश्वेभिर्धायि धातृभिः । अधा चिदिन्द्र मे सचा ॥२॥**

हे ऐश्वर्यवान् इन्द्रदेवता ! तिमीले प्रदान गरेको साधन सबै याजकले प्राप्त गर्दछन् । हामीलाई पनि तिमी ऐश्वर्य प्रदान गर ।

**मो षु ब्रह्मेव तन्द्रयुर्भुवो वाजानां पते । मत्स्वा सुतस्य गोमतः ॥३॥**

अन्नका अधिपति, बलवान् हे इन्द्रदेवता ! गाईका दुधमा मिसाइएको सोमरस पान गरेर तिमी आनन्दित होऊ । अल्छे ब्राह्मणजस्तो तिमी निष्क्रिय नहोऊ ।

**एवा ह्यस्य सूनृता विरप्शी गोमती मही । पक्वा शाखा न दाशुषे ॥४॥**

इन्द्रदेवताको अति मधुर र सत्य वाणीले उसै किसिमले सुख प्रदान गर्दछ, जसरी गाईरूपी धन प्रदान गर्ने र पाकेको फलले भरिएको रुखले हविदाता यजमानहरूलाई सुख प्रदान गर्दछन् ।

**एवा हि ते विभूतय ऊतय इन्द्र मावते । सद्यश्चित् सन्ति दाशुषे ॥५॥**

हे इन्द्रदेवता ! तिम्रो इष्ट सिद्धि गराउने र संरक्षण प्रदान गर्ने जुन विभूतिहरू छन्, ती हामीजस्ता सबै दानदाता अथवा आफ्नो साधन असल कार्यमा प्रयोग गर्नेहरूलाई तत्काल प्राप्त हुने गर्दछ ।

**एवा ह्यस्य काम्या स्तोम उक्थं च शंस्या । इन्द्राय सोमपीतये ॥६॥**

दान दाताको स्तुति अति नै मनोरम र प्रशंसनीय छ । यो सबै सोमपान गर्ने इन्द्रदेवताकै लागि हो ।

## सूक्त– ६१

**ऋषि–** गोषूक्तिअश्वसूक्ति । **देवता–** इन्द्र । **छन्द–** उष्णिक्

**तं ते मदं गृणीमसि वृषणं पृत्सु सासहिम् । उ लोककृत्नुमद्रिवो हरिश्रियम् ॥१॥**

हातमा वज्र लिएका हे इन्द्रदेवता ! शक्तिशाली, सङ्ग्राममा शत्रुलाई पराजित गराउने, कल्याणकारक र अश्वका लागि सेवनीय तिम्रो उत्साहलाई हामी प्रशंसा गर्दछौं ।

**येन ज्योतींष्यायवे मनवे च विवेदिथ । मन्दानो अस्य बर्हिषो वि राजसि ॥२॥**

हे इन्द्रदेवता ! तिमीले दीर्घजीवी मानिसको हित गर्नका लागि ज्योतिष्मान् सूर्य आदि नक्षत्रहरूलाई प्रकाशित गराएका छौ । तिमी यज्ञवेदिकामा राखिएको बर्ही नामको कुशका आसनमा बस ।

**तदद्या चित्त उक्थिनोऽनु ष्टुवन्ति पूर्वथा । वृषपत्नीरपो जया दिवेदिवे ॥३॥**

हे इन्द्रदेवता ! सनातन स्तुतिकर्ताहरू आज पनि तिम्रा बलको स्तुति गर्दछन् । पर्जन्यले वर्षा गराउने जललाई तिमी प्रत्येक दिन मुक्त गर अर्थात् समयअनुसार वर्षा गराऊ ।

**तम्वभि प्र गायत पुरुहूतं पुरुष्टुतम् । इन्द्रं गीर्भिस्तविषमा विवासत ॥४॥**

हे स्तोताहरू हो ! अनेकौं यजमानहरूले स्तुति गर्दै आह्वान गर्ने गरेका, प्रशंसाका योग्य उनै महान् इन्द्रदेवतालाई विभिन्न खालका स्तोत्रले स्तुति गर ।

**यस्य द्विबर्हसो बृहत् सहो दाधार रोदसी । गिरींरज्राँ अपः स्व र्वृषत्वना ॥५॥**

उनै इन्द्रदेवताले आफ्ना शक्तिले शीघ्रगामी बादल तथा गतिमान् जललाई धारण गरेका छन् । उनका महान् बललाई द्युलोक र पृथ्वीलोकले ग्रहण गर्दछन् ।

**स राजसि पुरुष्टुतँ एको वृत्राणि जिघ्नसे । इन्द्र जैत्रा श्रवस्या च यन्तवे ॥६॥**

धेरै तिरबाट प्रशंसा पाउने हे इन्द्रदेवता ! तिमी आफ्नो दिव्य कान्तिले आलोकित हुने गरेका छौ । ऐश्वर्य र कीर्ति प्राप्त गर्नका लागि तिमीले एक्लै नै वृत्रासुरलाई मार्ने गर्दछौ ।

## सूक्त— ६२

**ऋषि—** सौभरि, नृमेध, गोषूक्तिअश्वसूक्ति । **देवता—** इन्द्र । **छन्द—** प्रगाथ, उष्णिक् ।

**वयमु त्वामपूर्व्य स्थूरं न कच्चिद् भरन्तोऽवस्यवः । वाजे चित्रं हवामहे ॥१॥**

हातमा वज्र धारण गर्ने अनुपम हे इन्द्रदेवता ! जसरी सांसारिक गुणले सम्पन्न, शक्तिशाली मानिसलाई सबैतिरका मानिसहरूले बोलाउँछन्, उसै गरी आफ्नो रक्षा गर्ने विचार भएका मानिसहरूले विशिष्ट सोमरस प्रदान गरेर तिमीलाई सन्तुष्ट गराउँछन् । हामी तिमीलाई स्तुति गर्दछौं ।

**उप त्वा कर्मन्नूतये स नो युवोग्रश्चक्राम यो धृषत् । त्वामिद्ध्यवितारं ववृमहे सखाय इन्द्र सानसिम् ॥२॥**

हे शत्रुसंहारक इन्द्रदेवता ! कर्मशील रहेका हुनाले तथा हाम्रो सहायताका लागि र तरुण तथा शूरवीर रूपमा काम गर्ने हुनाले हामी तिम्रै आश्रय लिने गर्दछौं । मित्रको जस्तै सहायता प्राप्त गर्नका लागि हामी तिमीलाई नै स्मरण गर्दछौं ।

**यो न इदमिदं पुरा प्र वस्य आनिनाय तमु व स्तुषे । सखाय इन्द्रमूतये ॥३॥**

हे मित्रहरू हो ! उहिलेदेखि नै जसले धन, वैभव प्रदान गर्दै आएका छन्, उनै इन्द्रदेवतालाई हामी आफ्नो कल्याणका लागि स्तुति गर्दछौं ।

**हर्यश्वं सत्पतिं चर्षणीसहं स हि ष्मा यो अमन्दत । आ तु नः स वयति गव्यमश्व्यं स्तोतृभ्यो मघवा शतम् ॥४॥**

हरियो अश्व भएका, सज्जनहरूलाई पालन गर्ने, शत्रुलाई परास्त गराउने र स्तुतिले प्रसन्न हुने गरेका इन्द्रदेवतालाई हामी प्रार्थना गर्दछौं । उनले हामी स्तुतिकर्तालाई सयौं खालका गाई तथा अश्वका साथमा भरिपूर्ण ऐश्वर्य प्रदान गरून् ।

**इन्द्राय साम गायत विप्राय बृहते बृहत् । धर्मकृते विपश्चिते पनस्यवे ॥५॥**

हे उद्गाताहरू हो ! विवेकले सम्पन्न, महान्, स्तुति गर्न योग्य, प्रज्ञावान् इन्द्रदेवताका लागि तिमीहरू बृहत् साम नामको स्तोत्र गाउने गर ।

**त्वमिन्द्राभिभूरसि त्वं सूर्यमरोचयः । विश्वकर्मा विश्वदेवो महाँ असि ॥६॥**

सूर्यलाई प्रकाशित गराउने, दुष्टदुराचारीहरूलाई पराजित गराउने हे इन्द्रदेवता ! तिमी संसारका रचयिता हौ, संसारका प्रकाशक हौ र तिमी महान् छौ ।

**विभ्राजं ज्योतिषा स्व१रगच्छो रोचनं दिवः । देवास्त इन्द्र सख्याय येमिरे ॥७॥**

आफ्नो तेजलाई विस्तार गराउँदै संसारमा सूर्यलाई प्रकाशित गराउने हे इन्द्रदेवता ! तिमी आऊ । समस्त देवगण मित्रतापूर्वक तिमीसित सम्पर्क स्थापित गराउने रहर गर्दै छन् ।

**तम्वभि प्र गायत पुरुहूतं पुरुष्टुतम् । इन्द्रं गीर्भिस्तविषमा विवासत ॥८॥**

हे स्तोताहरू हो ! अनेकौं यजमानहरूले स्तुतिपूर्वक आह्वान गर्ने गरेका, प्रशंसा गर्न योग्य उनै महान् इन्द्रदेवतालाई विभिन्न स्तोत्रले स्तुति गर ।

**यस्य द्विबर्हसो बृहत् सहो दाधार रोदसी । गिरीँरज्राँ अपः स्वर्वृषत्वना ॥९॥**

इन्द्रदेवता आफ्ना शक्तिले शीघ्रगामी बादल तथा गतिमान् जल धारण गर्दछन् । उनका महान् बललाई द्युलोक र पृथ्वीलोकले ग्रहण गर्दछन् ।

**स राजसि पुरुष्टुतँ एको वृत्राणि जिघ्नसे । इन्द्र जैत्रा श्रवस्या च यन्तवे ॥१०॥**

धेरैले प्रशंसा गर्ने गरेका हे इन्द्रदेवता ! तिमी आफ्नो दिव्य कान्तिले आलोकित हुने गर्दछौ ऐश्वर्य तथा कीर्ति प्राप्त गर्नका लागि तिमीले एक्लै नै वृत्रासुरलाई मारेका छौ ।

**ऋषि–** भुवन वा साधन, भरद्वाज, गोमत, पर्वत । **देवता–** इन्द्र । **छन्द–** त्रिष्टुप्, उष्णिक् ।

**इमा नु कं भुवना सीषधामेन्द्रश्च विश्वे च देवाः । यज्ञं च नस्तन्वं च प्रजां चादित्यैरिन्द्रः सह चीक्लृपाति ॥१॥**

हामी यी सबै लोकहरू चाँडै नै प्राप्त गरौं । इन्द्रदेवता र सबै देवताहरू हाम्रा लागि सुखशान्ति प्राप्त गर्नमा सहायक होऊन् । इन्द्रदेवता र आदित्यदेवताले हाम्रो यज्ञ सफल बनाऊन् । शरीरलाई निरोगी गराऊन् र हाम्रा सन्तानलाई सद्व्यवहारमा प्रेरित गरून् ।

**आदित्यैरिन्द्रः सगणो मरुद्भिरस्माकं भूत्वविता तनूनाम् । हत्वाय देवा असुरान् यदायन् देवा देवत्वमभिरक्षमाणाः ॥२॥**

आदित्य र मरुत्हरूका साथमा इन्द्रदेवता आएर हाम्रो शरीरलाई सुरक्षा प्रदान गरून् । जुन समयमा देवताहरू वृत्र आदि असुरहरूलाई संहार गरेर फर्किए, उसै बेला अमर देवत्वको सुरक्षा हुन सक्यो ।

**प्रत्यञ्चमर्कमनयञ्छचीभिरादित् स्वधामिषिरां पर्यपश्यन् । अया वाजं देवहितं सनेम मदेम शतहिमाः सुवीराः ॥३॥**

स्तोताहरूले इन्द्र आदि देवताहरूका लागि श्रेष्ठ यज्ञ आदि कर्मले युक्त स्तुति प्रस्तुत गरे । त्यसभन्दा पछि सबैले अन्तरिक्षमा बसेंदै गरेको जल देखे । हे इन्द्रदेवता ! हामी स्तोताहरूलाई तिमी अन्न आदिले सम्पन्न गराऊ । हामी वीर पुत्रपौत्रादिले युक्त भएर सुखपूर्वक सय वर्षसम्मको पूरा आयु भएको जीवन निर्वाह गरौं ।

**य एक इद् विदयते वसु मर्ताय दाशुषे । ईशानो अप्रतिष्कुत इन्द्रो अङ्ग ॥४॥**

हे प्रिय याजकहरू हो ! दानशील भएका कारण मानिसलाई धन प्रदान गर्ने, प्रतिकार गर्ने नसकिने उनै इन्द्रदेवता एक्लै नै सबै प्राणीहरूका अधिपति हुन् ।

**कदा मर्तमराधसं पदा क्षुम्पमिव स्फुरत् । कदा नः शुश्रवद् गिर इन्द्रो अङ्ग ॥५॥**

इन्द्रदेवताले हाम्रो स्तुति कहिले सुन्लान् ? आराधना नगर्नेहरूलाई बिकामे झारपात फाँडेझैं कहिले फाँडिदेलान् ?

**यश्चिद्धि त्वा बहुभ्य आ सुतावाँ आविवासति । उग्रं तत् पत्यते शव इन्द्रो अङ्ग ॥६॥**

हे इन्द्रदेवता ! असङ्ख्य यजमानहरूमध्ये सोमयज्ञ गरेर जुन यजमानले तिम्रो आराधना गर्दछ, उसैलाई तिमी शीघ्र नै बलले सम्पन्न बनाइदिने गर्दछौ ।

**य इन्द्र सोमपातमो मदः शविष्ठ चेतति । येना हंसि न्यत्रिणं तमीमहे ॥७॥**

सोमपान गर्नेहरूमा श्रेष्ठ, हे बलशाली इन्द्रदेवता ! तिमी उल्लसित भएर कार्यप्रति जागरूक हुने गर्दछौ । जुन बलले तिमी घातक असुर वा तिनको आसुरी वृत्ति नास गर्ने गर्दछौ, हामी त्यही सामर्थ्य तिमीसित माग्दछौं ।

**येना दशग्वमध्रिगुं वेपयन्तं स्वर्णरम् । येना समुद्रमाविथा तमीमहे ॥८॥**

हे इन्द्रदेवता ! जुन शक्तिले तिमीले अङ्गिरा वंशीय अध्रिगुलाई, अँध्यारो नष्ट गराउने सूर्यलाई र समुद्र वा अन्तरिक्षलाई रक्षा गरेका थियौ, तिमीसित हामी त्यही शक्तिको माग गर्दछौं ।

**येन सिन्धुं महीरपो रथाँ इव प्रचोदयः । पन्थामृतस्य यातवे तमीमहे ॥९॥**

हे इन्द्रदेवता ! तिमीले जुन बलले विशाल जलराशिलाई रथजस्तै गतिशील गराएर समुद्रतर्फ प्रेरित गर्‍यौ उसै बललाई हामी यज्ञीय पथमा गमन गर्नका लागि तिमीसित माग्दछौं ।

मुख्य प्राणजस्तो बनेर रहेँका हुन्छन् । यस्ता पूजनीय इन्द्रदेवतालाई तिमीले स्तुति गर ।

**वेत्था हि निर्ऋतीनां वज्रहस्त परिवृजम् । अहरहः शुन्ध्युः परिपदामिव ॥३॥**

जसरी सूर्य, अग्नि आदि प्रशोधनकर्ताले सर्वत्र गमनशील प्राण अथवा पक्षीलाई देखेचिनेका हुन्छन्, उसै गरी हे हातमा वज्र लिने इन्द्रदेवता ! तिमी निर्ऋति नामका सबै राक्षस वा सबै लोकरुलाई नियन्त्रित गर्न जान्दछौ ।

## सूक्त– ६७

**ऋषि–** परुच्छेप, गृत्समद । **देवता–** इन्द्र, मरुद्गण, अग्नि, द्रविणोदा । **छन्द–** अत्यष्टि, जगती ।

**वनोति हि सुन्वन् क्षयं परीणसः सुन्वानो हि ष्मा यजत्यव द्विषो देवानामव द्विषःसुन्वान इत् सिषासति सहस्रा वाज्यवृतः । सुन्वानायेन्द्रो ददात्याभुवं रयिं ददात्याभुवम् ॥१॥**

सोमयज्ञ गर्ने यजमानले धनधान्यले सम्पन्न आवास प्राप्त गर्दछन् । उनले दुष्ट र देवताको विरोध गर्नेहरूलाई पर हटाउँछन् । जुन याजकले अवरोधहरूबाट नबेरिईकन हजारौं किसिमका दिव्य धन जित्न खोजेका हुन्छन् उनलाई इन्द्रदेवताले पर्याप्त धन दिन्छन्, उनले मनग्गे दिव्य सम्पदा प्राप्त गर्दछन् ।

**मो षु वो अस्मदभि तानि पौंस्या सना भूवन् द्युम्नानि मोत जारिषुरस्मत् पुरोत जारिषुः । यद् वश्चित्रं युगेयुगे नव्यं घोषादमर्त्यम् । अस्मासु तन्मरुतो यच्च दुष्टरं दिधृता यच्च दुष्टरम् ॥२॥**

हे मरुतगण हो ! तिमीहरूका उहिलेदेखिका पराक्रमी सामर्थ्यले गरेका कार्यहरूलाई हामी कहिल्यै बिर्सनौं । हाम्रो कीर्ति पनि त्यसरी नै अक्षुण्ण रहोस् र हाम्रो बसोबास गर्ने गाउँसहरको विनाश नहोस् । आश्चर्यप्रद, स्तुतियोग्य र अमृतरूपी रस प्रदान गर्ने गाईसित सम्बन्धित तथा सबै मानिसका लागि उपयोगी धनसम्पदाहरू जेजति छन्, ती सबै युगौंयुगसम्म हामीसँगै रहून् । हामीलाई तिमी दुःख गर्दा पाइने सबै खालका सम्पदाहरू प्रदान गर ।

**अग्निं होतारं मन्ये दास्वन्तं वसुं सूनुं सहसो जातवेदसं विप्रं न जातवेदसम् । य ऊर्ध्वया स्वध्वरो देवो देवाच्या कृपा घृतस्य विभ्राष्टिमनु वष्टि शोचिषाजुह्वानस्य सर्पिषः ॥३॥**

दैवी गुणले सम्पन्न, श्रेष्ठ कर्मका सम्पादक जुन अग्निदेवता देवताहरूका नजिक जाने गरेका ऊर्ध्वगामी ज्वालाले प्रदीप्त र विस्तारयुक्त भएर, निरन्तर घिउ पान गर्ने अभिलाषा गर्दछन्, उनै देवतालाई आह्वान गर्ने, दान गर्ने, सबैका आश्रयका रूपमा रहेका, अरणी मन्थनबाट उत्पन्न भएका, शक्तिका पुत्र, सर्वज्ञानसम्पन्न, शास्त्रज्ञ र ब्रह्मनिष्ठ ज्ञानीजस्ता अग्निदेवतालाई हामी स्वीकार गर्दछौं ।

**यज्ञैः संमिश्लाः पृषतीभिर्ऋष्टिभिर्यामञ्छुभ्रासो अञ्जिषु प्रिया उत । आसद्या बर्हिर्भरतस्य सूनवः पोत्रादा सोमं पिबता दिवो नरः ॥४॥**

यज्ञीय कार्यमा सहयोग गर्ने, भूमिलाई सेचन गर्ने, शस्त्रले सुसज्जित, आभूषण रुचाउने, भरणपोषणमा समर्थ, देवताका पुत्र तथा नेतृत्व प्रदान गर्ने हे मरुतहरू हो ! तिमीहरू यज्ञमा विराजमान भएर पवित्र सोमरस पान गर ।

**आ वक्षि देवाँ इह विप्र यक्षि चोशन् होतर्नि षदा योनिषु त्रिषु । प्रति वीहि प्रस्थितं सोम्यं मधु पिबाग्नीध्रात् तव भागस्य तृप्णुहि ॥५॥**

हे मेधावी अग्निदेवता ! हाम्रा यस यज्ञमा देवताहरूलाई सत्कारपूर्वक बोलाइदेऊ ! हे होता अग्निदेवता ! हाम्रो यज्ञका कामनाले तिमी तीनै लोकमा प्रतिष्ठित होऊ । शोधित सोमरस

## सूक्त— ६४

**ऋषि—** नृमेध, विश्वमना । **देवता—** इन्द्र । **छन्द—** उष्णिक् ।

**एन्द्र नो गधि प्रियः सत्राजिदगोह्यः । गिरिर्न विश्वतस्पृथुः पतिर्दिवः ॥१॥**

सर्वप्रिय, सबै शत्रुलाई जित्ने, अपराजेय हे इन्द्रदेवता ! तिमी पर्वतजस्तै सुविशाल छौ र द्युलोकका अधिपति हौ । त्यसैले हामीलाई उचित सहयोग गर्नका लागि यहाँ आऊ ।

**अभि हि सत्य सोमपा उभे बभूथ रोदसी । इन्द्रासि सुन्वतो वृधः पतिर्दिवः ॥२॥**

सत्यको पालना गर्ने, सोमरस पान गर्ने हे इन्द्रदेवता ! तिमी आकाश र पृथ्वी दुवै लोकलाई आफ्नो प्रभावमा लिनका लागि समर्थ छौ । हे द्युलोकका अधिपति ! तिमी सोमयज्ञ गर्नेहरूलाई उन्नति प्रदान गर्दछौ ।

**त्वं हि शश्वतीनामिन्द्र दर्ता पुरामसि । हन्ता दस्योर्मनोर्वृधः पतिर्दिवः ॥३॥**

हे इन्द्रदेवता ! तिमी दुष्टका कहिल्यै नभत्किने सहरहरूलाई विनाश गर्ने, अज्ञान मेटाउने, यज्ञकर्ता मानिसको मनोबल बढाउने र प्रकाशलोकका स्वामी हौ ।

**एदु मध्वो मदिन्तरं सिञ्च वाध्वर्यो अन्धसः । एवा हि वीर स्तवते सदावृधः ॥४॥**

हे ऋत्विक्हरू हो ! मधुर सोमरसले आनन्दित हुने इन्द्रदेवतालाई यो रस समर्पित गर । पराक्रमी र निरन्तर वृद्धि प्राप्त गर्ने इन्द्रदेवतालाई नै स्तोताहरूले सधैं प्रशंसा गर्दछन् ।

**इन्द्र स्थातर्हरीणां नकिष्टे पूर्व्यस्तुतिम् । उदानंश शवसा न भन्दना ॥५॥**

हे अश्वका अधिपति इन्द्रदेवता ! ऋषिहरूले बनाएको तिम्रो स्तुतिलाई आफ्ना सामर्थ्य एवं तेजस्विताले अरू कसैले पनि प्राप्त गर्न सक्दैन ।

**तं वो वाजानां पतिमहूमहि श्रवस्यवः । अप्रायुभिर्यज्ञेभिर्वावृधेन्यम् ॥६॥**

ऐश्वर्यको कामना गर्ने हुनाले हामी उनै वैभवशाली इन्द्रदेवतालाई आह्वान गर्दछौं, जसले प्रमादरहित भएर याजकहरूका यज्ञकर्मले वृद्धि प्राप्त गर्दछन् ।

## सूक्त— ६५

**ऋषि—** विश्वमना । **देवता—** इन्द्र । **छन्द—** उष्णिक् ।

**एतो न्विन्द्रं स्तवाम सखाय स्तोम्यं नरम् । कृष्टीर्यो विश्वा अभ्यस्त्येक इत् ॥१॥**

हे मित्रहरू हो ! चाँडै आओ, हामी उनै स्तुत्य, वीर इन्द्रदेवतालाई प्रार्थना गरौं, जो एक्लै नै सबै शत्रुलाई परास्त गर्नका लागि सक्षम छन् ।

**अगोरुधाय गविषे द्युक्षाय दस्म्यं वचः । घृतात् स्वादीयो मधुनश्च वोचत ॥२॥**

हे याजकहरू हो ! गाई अथवा वाणी अथवा इन्द्रियहरूलाई वध नगरीकन त्यसलाई संरक्षण गर्ने, तेजले सम्पन्न इन्द्रदेवताका लागि घिउ र महभन्दा पनि बढी सुस्वादले भरिएका वाणीले स्तुति वचनहरूको पाठ गर ।

**यस्यामितानि वीर्या३ न राधः पर्येतवे । ज्योतिर्न विश्वमभ्यस्ति दक्षिणा ॥३॥**

ती इन्द्रदेवता असीम सौर्यले सम्पन्न छन् । उनको सम्पत्ति कसैले पनि प्राप्त गर्न सक्दैन । सूर्यको प्रकाशजस्तै उनको दान सबैका लागि उपलब्ध हुन्छ ।

## सूक्त— ६६

**ऋषि—** विश्वमना । **देवता—** इन्द्र । **छन्द—** उष्णिक् ।

**स्तुहीन्द्रं व्यश्ववदनूर्मिं वाजिनं यमम् । अर्यो गयं मंहमानं वि दाशुषे ॥१॥**

हे स्तोताहरू हो ! इन्द्रदेवता अहिंसित शक्तिले सम्पन्न छन् र उनै समस्त जगत्लाई नियमित गराउने हुन् । तिमीहरू उनलाई व्यश्व ऋषिले झैं प्रार्थना गर । उनले दानीहरूलाई प्रशंसनीय ऐश्वर्य प्रदान गर्नेछन् ।

**एवा नूनमुप स्तुहि वैयश्व दशमं नवम् । सुविद्वांसं चर्कृत्यं चरणीनाम् ॥२॥**

हे विश्वमना वैयश्व ऋषि ! उनै विद्वानइन्द्रदेवता मानिसभित्र नौ किसिमका प्राणहरूका साथ दसौं

स्वीकार गरेर यस यज्ञमा सोमपान गर र समर्पित गरिएका भागहरूले तिमी तृप्त होऊ ।

**एष स्य ते तन्वो नृम्णवर्धनः सह ओजः प्रदिवि बाह्वोर्हितः । तुभ्यं सुतो मघवन् तुभ्यमाभृतस्त्वमस्य ब्राह्मणादा तृपत् पिब ॥६॥**

हे इन्द्रदेवता ! तिमी हाम्रो यस यज्ञमा आऊ । होताहरू उत्तम स्तोत्रले स्तुति गर्दछन् । त्यसैले हामीले आह्वान गरेको सुन र यज्ञमा सुशोभित भएर बस । हे देवताहरू हो ! याजकहरूले शोधित गरेको यो सोमरस दुध मिसिएको छ; यसले शरीरको बल वृद्धि गराउँछ । त्यसैले तिमी हाम्रा यस यज्ञमा आएर सोमरस पान गर ।

**यमु पूर्वमहुवे तमिदं हुवे सेदु हव्यो ददिर्यो नाम पत्यते । अध्वर्युभिः प्रस्थितं सोम्यं मधु पोत्रात् सोमं द्रविणोदः पिब ऋतुभिः ॥७॥**

जुन अग्निदेवतालाई हामीले पहिले पनि बोलाएका थियौं, उनैलाई अहिले पनि बोलाउँछौं । यी अग्निदेवता निश्चित रूपमा नै याजकहरूलाई धन प्रदान गर्दछौ र सबैका स्वामी पनि तिमी नै हौ, तिमी आह्वान गर्न योग्य छौ । यी देवताका लागि नै याजकहरूले सोमरस पेलेर प्रशोधित गरेका हुन् । हे अग्निदेवता ! यस पवित्र यज्ञमा ऋतुअनुसारको सोमरस तिमी पान गर ।

## सूक्त– ६८

**ऋषि–** मधुच्छन्दा । **देवता–** इन्द्र । **छन्द–** गायत्री ।

**सुरूपकृत्नुमूतये सुदुघामिव गोदुहे । जुहूमसि द्यविद्यवि ॥१॥**

गाई दुहुने गोठालाले जसरी दिनहुँ मिठो दुध दिने खलाका लैना गाईहरूलाई बोलाउने गर्दछन्, उसै गरी हामी आफ्नो संरक्षणका लागि सौन्दर्यपूर्ण यज्ञकर्म सम्पन्न गर्न लागेका इन्द्रदेवतालाई आह्वान गर्दछौं ।

**उप नः सवना गहि सोमस्य सोमपाः पिब । गोदा इद् रेवतो मदः ॥२॥**

सोमरस पान गर्ने हे इन्द्रदेवता ! तिमी सोमरस ग्रहण गर्नका लागि हाम्रा यज्ञका सवनहरूमा आऊ र सोमरस पान गर । त्यसपछि प्रसन्न भएर याजकहरूलाई यश, वैभव र गाई आदि प्रदान गर ।

**अथा ते अन्तमानां विद्याम सुमतीनाम् । मा नो अति ख्य आ गहि ॥३॥**

सोमपान गरिसकेपछि हे इन्द्रदेवता ! हामी तिम्रा अत्यन्त नजिक रहेका श्रेष्ठ प्रज्ञाले सम्पन्न पुरुषहरूका उपस्थितिमा रहेर तिम्रा विषयमा अत्यधिक ज्ञान प्राप्त गर्न सक्नेछौं । तिमी पनि हामीबाहेक अरू कसैका अगाडि आफ्नो स्वरूप प्रकट नगर ।

**परेहि विग्रमस्तृतमिन्द्रं पृच्छा विपश्चितम् । यस्ते सखिभ्य आ वरम् ॥४॥**

हे ज्ञानीहरू हो ! उनी विशिष्ट बुद्धि भएका, अपराजेय इन्द्रदेवताका निकट तिमीहरू गएर आफन्त नातागोता र भाइबन्धुहरूका लागि धनऐश्वर्यका लागि उनलाई प्रार्थना गर ।

**उत ब्रुवन्तु नो निदो निरन्यतश्चिदारत । दधाना इन्द्र इद् दुवः ॥५॥**

इन्द्रदेवताको उपासना गर्ने याजकहरूले इन्द्रदेवताका निन्दकहरूलाई यहाँबाट निस्केर जानका लागि भनून् र त्यसो भएपछि ती दुष्टहरू यहाँबाट पर भागून् ।

**उत नः सुभगाँ अरिर्वोचेयुर्दस्म कृष्टयः । स्यामेदिन्द्रस्य शर्मणि ॥६॥**

हे इन्द्रदेवता ! हामी तिम्रो अनुग्रहले समस्त वैभव प्राप्त गरौं । त्यसलाई देखेपछि हाम्रा शत्रु र समस्त मित्रहरूले हामीलाई सौभाग्यशाली ठानून् ।

**एमाशुमाशवे भर यज्ञश्रियं नृमादनम् । पतयन्मन्दयत् सखम् ॥७॥**

हे याजकहरू हो ! यज्ञलाई श्रीसम्पन्न बनाउने, प्रसन्नता प्रदान गर्ने, मित्रलाई आनन्द प्रदान गर्ने यो सोमरस शीघ्रगामी इन्द्रदेवताका लागि भरेर अर्पित गर ।

**अस्य पीत्वा शतक्रतो घनो वृत्राणामभवः । प्रावो वाजेषु वाजिनम् ॥८॥**

हे सयौं खालका यज्ञ आदि असल कर्म सम्पन्न गर्ने इन्द्रदेवता ! यो सोमरस पान गरेर तिमी वृत्र आदि प्रमुख शत्रुहरूलाई संहार गर्ने सिद्ध भएका छौ । लडाइँका मैदानमा तिमी वीर योद्धाहरूको

रक्षा गर ।

**तं त्वा वाजेषु वाजिनं वाजयामः शतक्रतो । धनानामिन्द्र सातये ॥९॥**

हे सयौँ खालका कर्महरू सम्पन्न गर्ने इन्द्रदेवता ! युद्धमा बल प्रदान गर्ने तिमीलाई हामी धन प्राप्त गर्नका लागि हवि अर्पित गर्दछौँ ।

**यो रायोऽवनिर्महान्त्सुपारः सुन्वतः सखा । तस्मा इन्द्राय गायत ॥१०॥**

हे याजकहरू हो ! धनका महान् रक्षक, दुःख हटाउने र सोमयाग गर्ने याज्ञिकहरूसित मित्रको जस्तो भाव जसले राख्दछन्, उनै इन्द्रदेवताका लागि तिमीहरू स्तोत्रको गान गर ।

**आ त्वेता नि षीदतेन्द्रमभि प्र गायत । सखाय स्तोमवाहसः ॥११॥**

हे स्तोत्रगायक मित्रहरू हो ! इन्द्रदेवतालाई प्रसन्न गर्नका लागि स्तुति गर्न शीघ्र आएर बस र हरेक किसिमले उनको गुणगान गर ।

**पुरूतमं पुरूणामीशानं वार्याणाम् । इन्द्रं सोमे सचा सुते ॥१२॥**

हे याजक मित्रहरू हो ! सोम पेल्ने काम भइसकेपछि शत्रुलाई पराजित गर्ने र ऐश्वर्यका स्वामी इन्द्रदेवतालाई संयुक्त रूपमा स्तुति गरौँ ।

## सूक्त— ६९

**ऋषि—** मधुच्छन्दा । **देवता—** इन्द्र, मरुद्गण । **छन्द—** गायत्री ।

**स घा नो योग आ भुवत् स राये स पुरंध्याम् । गमद् वाजेभिरा स नः ॥१॥**

यी इन्द्रदेवता हाम्रो पुरुषार्थलाई प्रखर बनाउनमा सहायक, धनधान्यले हामीलाई परिपूर्ण गरून् र ज्ञान प्राप्तिको मार्ग प्रशस्त गर्दै पोषक अन्नसहित हाम्रा सन्निकट आओ ।

**यस्य संस्थे न वृण्वते हरी समत्सु शत्रवः । तस्मा इन्द्राय गायत ॥२॥**

हे स्तोताहरू हो ! सङ्ग्राममा जसका अश्वले युक्त रथका सम्मुख शत्रु टिक्न सक्दैनन्, उनै इन्द्रदेवताका गुणहरूलाई तिमीहरू गाउने गर ।

**सुतपाव्ने सुता इमे शुचयो यन्ति वीतये । सोमासो दध्याशिरः ॥३॥**

यो पेलेर तयार पारिएको, शुद्ध गराइएको, दही मिसाइएको सोमरस सोमपान गर्ने इच्छा गर्ने इन्द्रदेवले भोग गर्नका लागि जाने गर्दछ ।

**त्वं सुतस्य पीतये सद्यो वृद्धो अजायथाः । इन्द्र ज्यैष्ठ्याय सुक्रतो ॥४॥**

हे उत्तम कर्म गर्ने इन्द्रदेवता ! तिमी सोमरस पिउनका लागि र देवताहरूमा सर्वश्रेष्ठ हुनका लागि वृद्धि गर्दै बुढो हुने गर्दछन् ।

**आ त्वा विशन्त्वाशवः सोमास इन्द्र गिर्वणः । शं ते सन्तु प्रचेतसे ॥५॥**

हे इन्द्रदेवता ! यो तितो स्वाद भएको सोमरस, तिमीभित्र प्रवेश गरोस् र तिमी ज्ञानसम्पन्न देवताका लागि कल्याणकारी होस् ।

**त्वां स्तोम अवीवृधन् त्वामुक्था शतक्रतो । त्वां वर्धन्तु नो गिरः ॥६॥**

हे सयौँ किसिमका यज्ञ गर्ने इन्द्रदेवता ! स्तोत्रले तिमीलाई उन्नति गराऊन् । यो उक्थ नामको स्तोत्रको वचन र हाम्रो वाणीले तिम्रो महत्त्व बढाओस् ।

**अक्षितोतिः सनेदिमं वाजमिन्द्रः सहस्रिणम् । यस्मिन् विश्वानि पौंस्या ॥७॥**

रक्षणीय व्यक्तिलाई सर्वथा रक्षा गर्ने इन्द्रदेवता बलपराक्रम प्रदान गर्ने विविध रूपमा विद्यमान सोमरूपी अन्न सेवन गरून् ।

**मा नो मर्ता अभि द्रुहन् तनूनामिन्द्र गिर्वणः । ईशानो यवया वधम् ॥८॥**

हे स्तुति गर्नयोग्य इन्द्रदेवता ! हाम्रा शरीरलाई कुनै पनि शत्रुले क्षति गर्न नसकून् । हामीलाई कसैले पनि हिंसित नगरून्, तिमी नै हाम्रा लागि संरक्षक होऊ ।

**युञ्जन्ति ब्रध्नमरुषं चरन्तं परि तस्थुषः । रोचन्ते रोचना दिवि ॥९॥**

बाँधेर राख्ने भएकाले बध्न नाम गरेका तेजस्वी इन्द्रदेवता स्थित रहँदारहँदै पनि चारैतिर घुम्ने

गरेकाहरूलाई अड्याएर राख्दछन् । उनले यसै किसिमले प्रकाशमान द्युलोकलाई प्रकाशित गर्ने गरेका छन् ।

**युञ्जन्त्यस्य काम्या हरी विपक्षसा रथे । शोणा धृष्णू नृवाहसा ॥१०॥**

यी इन्द्रका रथका दुवै पक्षमा कामनायोग्य नेता इन्द्रियहरूले वहन गर्ने गर्दछन् । ती इन्द्रियरूपी सङ्घर्षशक्तिले सम्पन्न दुई वटा हरी नामका गतिशील अश्व सधैँ नारिएका हुन्छन् ।

**केतुं कृण्वन्नकेतवे पेशो मर्या अपेशसे । समुषद्भिरजायथाः ॥११॥**

हे मानिसहरू हो ! तिमी रातका समयमा निदाएर निद्राको वशमा परेर, चेतनाशून्य भएर बिहान फेरि सचेत एवं सचेष्ट भएर मानौँ प्रतिदिन नवजीवन प्राप्त गर्दछौ ।

**आदह स्वधामनु पुनर्गर्भत्वमेरिरे । दधाना नाम यज्ञियम् ॥१२॥**

यज्ञीय नाम भएका धारण गर्नका लागि समर्थ मरुत वास्तवमा अन्नको वृद्धि गर्ने कामनाले बारम्बार मेघ आदिका रूपमा गर्भमा पुग्ने गर्दछन् ।

## सूक्त— ७०

**ऋषि—** मधुच्छन्दा । **देवता—** इन्द्र, मरुद्गण, मरुद्गण । **छन्द—** गायत्री ।

**वीलु चिदारुजत्नुभिर्गुहा चिदिन्द्र वह्निभिः । अविन्द उस्रिया अनु ॥१॥**

हे इन्द्रदेवता ! सुदृढ किल्लाबन्दीलाई ध्वस्त गर्नमा समर्थ, तेजस्वी मरुत्‌गणका सहयोगले तिमीले गुफामा थुनिएका गाईरूपी किरणहरूलाई तिमीले खोजेर निकालेका थियौ ।

**देवयन्तो यथ मतिमच्छा विदद् वसुं गिरः । महामनूषत श्रुतम् ॥२॥**

देवत्व प्राप्त गर्ने कामना भएका ज्ञानी ऋत्विक्‌हरू यशस्वी, ऐश्वर्यवान् र वीर इन्द्रलाई बुद्धिमत्तापूर्वक स्तुति गर्दछन् ।

**इन्द्रेण सं हि दृक्षसे संजग्मानो अबिभ्युषा । मन्दू समानवर्चसा ॥३॥**

सधैँ प्रसन्न रहने, समान तेज भएका मरुत्‌हरू निर्भय भएर रहने गरेका इन्द्रदेवतासित सङ्गठित र सुशोभित हुने गर्दछन् ।

**अनवद्यैरभिद्युभिर्मखः सहस्वदर्चति । गणैरिन्द्रस्य काम्यैः ॥४॥**

अत्यन्त तेजस्वी र पापरहित इन्द्रदेवताको कामना गर्ने मरुत्‌हरूका सहायताले यो यज्ञ सुशोभित हुने गर्दछ ।

**अतः परिज्मन्ना गहि दिवो वा रोचनादधि । समस्मिन्नृञ्जते गिरः ॥५॥**

हे सर्वत्र गमनशील मरुत्‌गण हो ! तिमीहरू अन्तरिक्षबाट, आकाशबाट अथवा प्रकाशमान द्युलोकबाट यहाँ आओ, किनभने यस यज्ञमा हाम्रा वाणीले तिमीहरूलाई स्तुति गरिरहेको छ ।

**इतो वा सातिमीमहे दिवो वा पार्थिवादधि । इन्द्रं महो वा रजसः ॥६॥**

यस पृथ्वी, अन्तरिक्ष अथवा द्युलोकबाट अथवा जताततैबाट प्रचुर धन प्राप्त गर्नका लागि हामी इन्द्रदेवताको प्रार्थना गर्दछौँ ।

**इन्द्रमिद् गाथिनो बृहदिन्द्रमर्केभिरर्किणः । इन्द्रं वाणीरनूषत ॥७॥**

सामगानका साधकहरू नयाँ र गाउनयोग्य बृहत्‌सामको स्तुतिगाथा गाएर देवराज इन्द्रलाई प्रसन्न गराउँछन् । यसै गरी याज्ञकहरू पनि मन्त्रको उच्चारण गरेर इन्द्रदेवतालाई स्तुति गर्छन् ।

**इन्द्र इद्धर्योः सचा संमिश्ल आ वचोयुजा । इन्द्रो वज्री हिरण्ययः ॥८॥**

वज्र धारण गर्ने, स्वर्ण वस्त्रले सजिएका इन्द्रदेवता वचनको सङ्केत पाउनासाथ रथमा नारिने खालका अश्वका साथमा रहने गर्दछन् ।

**इन्द्रो दीर्घाय चक्षस आ सूर्यं रोहयद् दिवि । वि गोभिरद्रिमैरयत् ॥९॥**

देवशक्तिहरूका सङ्गठक इन्द्रदेवताले विश्वलाई प्रकाशित गर्नुपर्ने महान् उद्देश्यले सूर्यदेवतालाई आकाशका उच्च भागमा स्थापित गरे र सूर्यकै रूपमा रहेका इन्द्रले नै आफ्ना किरणले मेघपर्वत आदिलाई पर पुऱ्याए ।

इन्द्र वाजेषु नोऽव सहस्रप्रधनेषु च । उग्र उग्राभिरूतिभिः ॥१०॥
हे वीर इन्द्रदेवता तिमी हजारौं किसिमका लाभ हुने खालका साना वा ठूला सङ्ग्रामहरूमा वीरतापूर्वक हामीलाई रक्षा गर ।

इन्द्रं वयं महाधन इन्द्रमर्भे हवामहे । युजं वृत्रेषु वज्रिणम् ॥११॥
हामी जीवनमा आइपर्ने साना वा ठूला सङ्ग्रामहरूमा सहयाता प्राप्त गर्नका लागि वृत्रासुरका संहारक, वज्र हातमा लिने इन्द्रदेवतालाई बोलाउँछौं ।

स नो वृषन्नमुं चरुं सत्रादावन्नपा वृधि । अस्मभ्यमप्रतिष्कुतः ॥१२॥
निरन्तर दान गर्ने बानी भएका, सधैं अपराजित हुने हे इन्द्रदेवता ! हाम्रा लागि तिमी बादलबाट पानीको वर्षा गराऊ ।

तुञ्जेतुञ्जे य उत्तरे स्तोमा इन्द्रस्य वज्रिणः । न विन्धे अस्य सुष्टुतिम् ॥१३॥
प्रत्येक दानका समयमा वज्रधारी इन्द्रदेवताजस्तो दानी भनेर तुलना गर्ने अर्को कतै पनि छैन । इन्द्रदेवतालाई यसभन्दा ठूलो स्तुति गर्ने अर्को कोही पनि छैन ।

वृषा यूथेव वंसगः कृष्टीरियर्त्योजसा । ईशानो अप्रतिष्कुतः ॥१४॥
सबैका स्वामी, हाम्रो विरुद्ध कुनै कार्य नगर्ने, शक्तिमान, इन्द्रदेवता आफ्नो सामर्थ्यअनुसार दान तथा सहयोग वितरण गर्नका लागि मानिसका नजिक डसै गरी जाने गर्दछन् जसरी साँढे गाईका बथानमा जान्छ ।

य एकश्चर्षणीनां वसूनामिरज्यति । इन्द्रः पञ्च क्षितीनाम् ॥१५॥
इन्द्रदेवता ब्राह्मण आदि पाँचै वर्णका मानिस र सबै खालका ऐश्वर्य सम्पदाका अद्वितीय स्वामी हुन् ।

इन्द्रं वो विश्वतस्परि हवामहे जनेभ्यः । अस्माकमस्तु केवलः ॥१६॥
हे ऋत्विक्हरू हो ! हे यजमानहरू हो ! सबै मानिसहरूमा उत्तम, इन्द्रदेवतालाई तिमीहरू सबैको कल्याणका लागि हामी आमन्त्रित गर्दछौं र उनले हामीमाथि विशेष कृपा गरून् ।

एन्द्र सानसिं रयिं सजित्वानं सदासहम् । वर्षिष्ठमूतये भर ॥१७॥
हे इन्द्रदेवता ! तिमीहरू हाम्रो जीवनरक्षा र शत्रुलाई पराजित गर्नका लागि हामीलाई ऐश्वर्यले परिपूर्ण गराऊ ।

नि येन मुष्टिहत्यया नि वृत्रा रुणधामहै । त्वोतासो न्यर्वता ॥१८॥
त्यस ऐश्वर्यको प्रभाव र तिमीद्वारा सुरक्षित अश्वका सहयोगले हामी मुड्की प्रहार गरेर आफ्नै शक्तिका प्रभावले शत्रुलाई भगाउँछौं ।

इन्द्र त्वोतास आ वयं वज्रं घना ददीमहि । जयेम सं युधि स्पृधः ॥१९॥
हे इन्द्रदेवता ! तिमीबाट संरक्षित भएर तीक्ष्ण वज्र धारण गरेर हामी युद्धमा प्रतिस्पर्धा गर्न आउने शत्रुमाथि विजय प्राप्त गरौं ।

वयं शूरेभिरस्तृभिरिन्द्र त्वया युजा वयम् । सासह्याम पृतन्यतः ॥२०॥
हे इन्द्रदेवता ! तिमीबाट संरक्षित भएपछि कुशल शस्त्रचालक वीरहरूका साथमा हामी आफ्नो शत्रुलाई पराजित गरौं ।

## सूक्त– ७१

**ऋषि–** मधुच्छन्दा । **देवता–** इन्द्र । **छन्द–** गायत्री ।

महाँ इन्द्रः परश्च नु महित्वमस्तु वज्रिणे । द्यौर्न प्रथिना शवः ॥१॥
इन्द्रदेवता श्रेष्ठ र महान् छन् । वज्रधारी इन्द्रदेवताको यश द्युलोकजस्तै व्यापक भएर फैलियोस् र तिनका बलको प्रशंसा चारै दिशामा होस् ।

समोहे वा य आशत नरस्तोकस्य सनितौ । विप्रासो वा धियायवः ॥२॥
जो सङ्ग्राममा जुटेका हुन्छन्, जो पुत्र प्राप्तिका लागि वा पुत्रको विजयका आशामा हुन्छन् र

बुद्धिपूर्वक ज्ञान प्राप्त गर्नका लागि यत्न गर्दछन्, ती सबै इन्द्रदेवताको स्तुति गरेर खोजेको कुरो प्राप्त गर्दछन् ।

**यः कुक्षिः सोमपातमः समुद्र इव पिन्वते । उर्वीरापो न काकुदः ॥३॥**

अत्यधिक सोमरस पान गर्ने इन्द्रदेवताको पेट समुद्रझैँ विशाल हुने गर्दछ । त्यो सोमरस जिब्रोबाट प्रवाहित हुने रसझैँ निरन्तर चुहुने गर्दछ ।

**एवा ह्यस्य सूनृता विरप्शी गोमती मही । पक्वा शाखा न दाशुषे ॥४॥**

इन्द्रदेवताको मधुर र सत्य वाणीले उसै किसिमले सुख प्रदान गर्दछ, जसरी गाईरूपी धनको दानले र पाकेका फलयुक्त वृक्षका शाखाले दिन सक्दछ ।

**एवा हि ते विभूतय ऊतय इन्द्र मावते । सद्यश्चित् सन्ति दाशुषे ॥५॥**

हे इन्द्रदेवता ! तिम्रो इष्ट सिद्धि गराउने र संरक्षण प्रदान गर्ने विभूति हामीजस्ता दानदातलाई आफ्नो विभूति श्रेष्ठ कार्यमा खटाउनका लागि तत्काल प्राप्त हुने गर्दछ ।

**एवा ह्यस्य काम्या स्तोम उक्थं च शंस्या । यन्द्राय सोमपीतये ॥६॥**

दाताको स्तुति र उक्थवचन अत्यन्तै मनोरम र प्रशंसनीय छन् । यी सबै सोमपान गर्ने इन्द्रदेवताका लागि नै हुन् ।

**इन्द्रेहि मत्स्यन्धसो विश्वेभिः सोमपर्वभिः । महाँ अभिष्टिरोजसा ॥७॥**

हे इन्द्रदेवता ! सोमरूपी अन्नले तिमी प्रसन्न हुने गर्दछौ । आफ्ना शक्तिले अत्यन्त बलिया शत्रुमाथि विजयश्री वरण गर्ने क्षमता प्राप्त गर्नका लागि तिमी यज्ञशालामा आऊ ।

**एमेनं सृजता सुते मन्दिमिन्द्राय मन्दिने । चक्रिं विश्वानि चक्रये ॥८॥**

हे याजकहरू हो ! प्रसन्नता प्रदान गर्ने सोमरसलाई पेलेर तयार पार र सम्पूर्ण कार्यका सम्पादक इन्द्रदेवताको सामर्थ्य बढाउनका लागि उपयुक्त यो सोमरस उनैलाई अर्पित गर ।

**मत्स्वा सुशिप्र मन्दिभि स्तोमेभिर्विश्वचर्षणे । सचैषु सवनेष्वा ॥९॥**

हे उत्तम शस्त्रले सुसज्जित अथवा राम्रो नासिका भएका सर्वद्रष्टा इन्द्रदेवता ! हाम्रा यी यज्ञमा आएर प्रफुल्लता प्रदान गर्ने खालका स्तोत्रले तिमी आनन्दित होऊ ।

**असृग्रमिन्द्र ते गिरः प्रतित्वामुदहासत । अजोषा वृषभं पतिम् ॥१०॥**

हे इन्द्रदेवता ! तिम्रो स्तुति गर्नका लागि हामीले स्तोत्रको रचना गरेका छौँ । मनको रहर पूरा गर्न खोज्ने स्त्रीहरू जसरी सामर्थ्यसम्पन्न पुरुषकहाँ पुग्ने गर्दछन्, उसरी नै हाम्रो स्तुति तिमी भएकै ठाउँमा पुगोस् ।

**सं चोदय चित्रमर्वाग् राध इन्द्र वरेण्यम् । असदित् ते विभु प्रभु ॥११॥**

हे इन्द्रदेवता ! विशाल ऐश्वर्यका अधिपति तिमी नै हौ । त्यसैले विभिन्न खालका ऐश्वर्यहरूलाई हामीतिर प्रेरित गर ।

**अस्मान्त्सु तत्र चोदयन्द्र राये रभस्वतः । तुविद्युम्न यशस्वतः ॥१२॥**

हे प्रचुर ऐश्वर्यले सम्पन्न इन्द्रदेवता ! तिमी वैभव प्राप्त गर्नका लागि हामीलाई श्रेष्ठ कर्ममा प्रेरित गर, जसले गर्दा हामी परिश्रमी र यशस्वी हुन सकौँ ।

**सं गोमदिन्द्र वाजवदस्मे पृथु श्रवो बृहत् । विश्वायुर्धेह्यक्षितम् ॥१३॥**

हे इन्द्रदेवता ! हामीलाई तिमी गाई, धनधान्यले युक्त अपार वैभव र अक्षय तथा पूर्ण आयु प्रदान गर ।

**अस्मे धेहि श्रवो बृहद् द्युम्नं सहस्रसातमम् । इन्द्र ता रथिनीरिषः ॥१४॥**

हे इन्द्रदेवता ! हामीलाई तिमी प्रचुर यश एवं विपुल ऐश्वर्य तथा धेरै खालका रथमा भरेर अन्न आदि प्रदान गर ।

**वसोरिन्द्रं वसुपतिं गीर्भिर्गृणन्त ऋग्मियम् । होम गन्तारमूतये ॥१५॥**

धनका अधिपति, ऐश्वर्यका स्वामी, ऋचाहरूले स्तुति गरिने खालका इन्द्रदेवतालाई हामी स्तुति गर्दै

आह्वान गर्दछौँ । उनी हाम्रो यज्ञमा आएर हाम्रो ऐश्वर्यको रक्षा गरून् ।

**सुतेसुते न्योकसे बृहत् बृहत एदरिः । इन्द्राय शूषमर्चति ॥१६॥**

प्रत्येक सोमयज्ञमा सोम पेल्ने अवसरमा याजकहरूले इन्द्रदेवताका पराक्रमको प्रशंसा गर्छन् ।

## सूक्त– ७२

**ऋषि–** परुच्छेप । **देवता–** इन्द्र । **छन्द–** अत्यष्टि ।

**विश्वेषु हि त्वा सवनेषु तुञ्जते समानमेकं वृषमण्यवः पृथक् स्वः सनिष्यवः पृथक् । तं त्वा नावं न पर्षणिं शुषस्य धुरि धीमहि । इन्द्रं न यज्ञैश्चितयन्त आयव स्तोमेभिरिन्द्रमायवः ॥१॥**

हे इन्द्रदेवता ! सबै सोमयज्ञहरूमा विभिन्न उद्देश्य लिएका याजकले तिमीलाई हविष्यान्न प्रदान गर्दछन् । स्वर्ग प्राप्त गर्ने इच्छा भएकाहरू पनि पृथक् रूपले आहुति प्रदान गर्दछन् । मानिसलाई समुद्रबाट पारि लगाउने नौकाजस्तै बनेका इन्द्रदेवतालाई जागरूक गराएर सेनाका अग्र पङ्क्तिमा उनीहरूले प्रतिष्ठित गराउँछन् । हामी स्तोत्रले तिमीलाई स्तुति गर्दछौँ ।

**वि त्वा ततस्रे मिथुना अवस्यवो व्रजस्य साता गव्यस्य निःसृजः सक्षन्त इन्द्र निःसृजः । यद् गव्यन्ता द्वा जना स्व१र्यन्ता समूहसि । आविष्करिक्रद् वृषणं सचाभुवं वज्रमिन्द्र सचाभुवम् ॥२॥**

हे इन्द्रदेवता ! संरक्षण प्राप्त गर्न इच्छुक गृहस्थहरू पत्नीका साथै भएर स्वर्ग प्राप्त गर्न र गाई प्राप्त गर्नका लागि तिम्रासामु प्रस्तुत हुने गर्दछन् । यस्ता अवस्थामा हे इन्द्रदेवता ! गाईको समूह प्राप्त गर्नका लागि हुने गरेका सङ्ग्राममा तिमीलाई स्वयं लगेर प्रेरित गर्ने यजमानहरूले तिम्रै लागि यज्ञका कर्म सम्पन्न गर्ने गर्दछन् । तिमीले नै आफूसित रहने गरेको वज्रलाई प्रकट गरेका हौ ।

**उतो नो अस्या उषसो जुषेत ह्य१र्कस्य बोधि हविषो हवीमभिः स्वर्षाता हवीमभिः । यदिन्द्र हन्तवे मृधो वृषा वज्रिञ्चिकेतसि । आ मे अस्य वेधसो नवीयसो मन्म श्रुधि नवीयसः ॥३॥**

हे इन्द्रदेवता ! तिमी हाम्रा प्रभातकालीन यज्ञ आदि कर्म गर्ने समयमा उच्चारण गरिएका स्तुतिमा ध्यान देऊ र आहुति ग्रहण गर । सुख प्राप्त गर्नका लागि स्तुतिको अभिप्राय बुझ । हे वज्रधारी इन्द्रदेवता ! जसरी तिमी शत्रुनाशक कार्यमा सचेत भइरहन्छौ, उसै गम्भीरतापूर्वक तिमी नवीन रचित स्तोत्रत्र र नयाँ ज्ञानी स्तोताहरूका प्रार्थनामा ध्यान देऊ ।

## सूक्त– ७३

**ऋषि–** वसिष्ठ, वसुक्र । **देवता–** इन्द्र । **छन्द–** त्रिपदा विराट् अनुष्टुप्, जगती, अभिसारिण त्रिष्टुप् ।

**तुभ्येदिमा सवना शूर विश्वा तुभ्यं ब्रह्माणि वर्धना कृणोमि । त्वं नृभिर्हव्यो विश्वधासि ॥१॥**

हे इन्द्रदेवता ! तिम्रा लागि यज्ञका अनेकौँ सवन छन् । यो स्तोत्र पनि तिम्रो यश बढाउनका लागि नै हो । तिमी नै मानिसहरूबाट हवि प्राप्त गर्ने योग्य छौ ।

**नू चिन्नु ते मन्यमानस्य दस्मोदश्नुवन्ति महिमानमुग्र । न वीर्यमिन्द्र त न राधः ॥२॥**

हे दर्शनीय इन्द्रदेवता ! तिम्रा यस किसिमका महिमाको पार कसैले पाउन सक्दैन । हे शूरवीर ! तिम्रो पराक्रम र धनको पार कसैले पनि पाउन सक्दैन ।

**प्र वो महे महिवृधे भरध्वं प्रचेतसे प्र सुमतिं कृणुध्वम् । विशः पूर्वीः प्र चरा चर्षणिप्राः ॥३॥**

हे मानिसहरू हो ! महान् कार्य सम्पन्न गर्ने प्रख्यात इन्द्रदेवताका लागि सोम प्रदान गर्दै श्रेष्ठ स्तोत्रले उनको स्तुति गर । हे इन्द्रदेवता ! तिमी पनि हविदाता प्रजाहरूको कामना पूर्ण गराउँदै उनको कल्याण गर ।

**यदा वज्रं हिरण्यमिदथा रथं हरी यमस्य वहतो वि सूरिभिः । आ तिष्ठति मघवा सनश्रुत इन्द्रो वाजस्य दीर्घश्रवसस्पतिः ॥४॥**

इन्द्रदेवता जब आफ्ना तेजस्वी स्वर्णिम वज्र धारण गरेर आफ्ना दुई अश्व नारिएका रथमा आरुढ हुन्छन्, त्यस बेला उनी विशेष रूपले सुशोभित हुने गर्दछन् । इन्द्रदेवता सबैले चिनेजानेको उत्तम अन्न र ऐश्वर्य आदिका अधिपति हुन् ।

**सो चिन्नु वृष्टिर्यूथ्या३ स्वा सचाँ इन्द्रः श्मश्रूणि हरिताभि प्रुष्णुते । अव वेति सुक्षयं सुते मधूदिद्धूनोति वातो यथा वनम् ॥५॥**

जसरी वर्षको जलले पशुको समूह भिज्दछ, उसै गरी इन्द्रदेवता हरियो वर्णको सोमरसले आफ्ना दाह्रीजुँगा भिजाउँछन् । त्यसपछि उनी उत्तम यज्ञस्थलमा गएर तयार गरेको सोमरस पान गर्दछन्, त्यस बेला जसरी हावाले रुखबिरुवा हल्लाउँछ, उसै गरी उनी शत्रुलाई थर्काउँछन् ।

**यो वाचा विवाचो मृध्रवाचः परू सहस्राशिवा जघान । तत्तदिदस्य पौंस्यं गृणीमसि पितेव यस्तविषीं वावृधे शवः ॥६॥**

अनेकौं किसिमका उत्तेजक वाणीलाई प्रयोग गर्ने शत्रुलाई सामर्थ्यशाली इन्द्रदेवताले आफ्ना बोलीले हकारेरै शान्त गराए र क्रोधले हजारौं शत्रुलाई समूल नष्ट गराए । पिताले जसरी अन्नपानी दिएर पुत्रको पालनपोषण गर्दछन्, उसै गरी इन्द्रदेवताले मानिसको पालनपोषण गर्दछन् । हामी उनै बलवान् इन्द्रदेवताको महिमाको गुणगान गर्दछौं ।

## सूक्त– ७४

**ऋषि**– शुनःशेप । **देवता**– इन्द्र । **छन्द**– पङ्क्ति ।

**यच्चिद्धि सत्य सोमपा अनाशस्ता इव स्मसि । आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥१॥**

हे सत्यस्वरूप सोमपायी इन्द्रदेवता ! यद्यपि हामी प्रशंसा पाउने पात्र त होइनौं तर पनि हामीलाई तिमी सहस्रौं गाई र घोडा प्रदान गरेर सम्पन्न बनाऊ ।

**शिप्रिन् वाजानां पते शचीवस्तव दंसना । आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥२॥**

हे इन्द्रदेवता ! तिमी शक्तिशाली, शिरस्त्राण धारण गर्ने, बलका अधिपति र ऐश्वर्यशाली हौ । सधैं तिम्रो अनुग्रह हामीमाथि रहिरहोस् । हामीलाई हजारौं किसिका गाई र घोडा आदि प्रदान गरेर सम्पन्न बनाऊ ।

**नि ष्वापया मिथूदृशा सस्तामबुध्यमाने । आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥३॥**

हे इन्द्रदेवता ! विपत्ति र दरिद्रता नामका दुवै खालका दुर्गतिहरू एकले अर्कालाई आपसमा हेरी सुतून् । तिनीहरू कहिल्यै नजागेर अचेत अवस्थामा ढलिरहून् । हामीलाई हजारौं किसिका गाई र घोडा आदि प्रदान गरेर सम्पन्न बनाऊ ।

**ससन्तु त्या अरातयो बोधन्तु शूर रातयः । आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥४॥**

हे इन्द्रदेवता ! हाम्रा शत्रुहरू सबै नै सुतिरहून् र हाम्रा वीर दानी मित्रहरू जागा भइरहून् । हामीलाई हजारौं किसिका गाई र घोडा आदि प्रदान गरेर सम्पन्न बनाऊ ।

**समिन्द्र गर्दभं मृण नुवन्तं पापयामुया । आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥५॥**

हे इन्द्रदेवता ! कपटपूर्ण वाणी बोल्ने शत्रुरूपी गधाहरूलाई मारिदेऊ । हामीलाई हजारौं किसिका गाई र घोडा आदि प्रदान गरेर सम्पन्न बनाऊ ।

पताति कुण्डृणाच्या दूरं वातो वनादधि । आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥६॥

हे इन्द्रदेवता ! दुष्ट शत्रुहरू विध्वंसकारी झञ्झावातझैँ भाग्दै वनभन्दा पर पुगेर पछारिऊन् । हामीलाई हजारौँ किसिका गाई र घोडा आदि प्रदान गरेर सम्पन्न बनाऊ ।

सर्वं परिक्रोशं जहि जम्भया कृकदृश्वम् । आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥७॥

हे इन्द्रदेवता ! हामीमाथि रिसडाह गर्ने सबै शत्रुलाई विनाश गर; हिंस्रकहरूलाई नाश गर । हामीलाई हजारौँ किसिका गाई र घोडा आदि प्रदान गरेर सम्पन्न बनाऊ ।

## सूक्त— ७५

**ऋषि—** परुच्छेप । **देवता—** इन्द्र । **छन्द—** अत्यष्टि ।

वि त्वा ततस्रे मिथुना अवस्यवो व्रजस्य साता गव्यस्य निःसृजः सक्षन्त इन्द्र निःसृजः । यद् गव्यन्ता द्वा जना स्व१र्यन्ता समूहसि । आविष्करिक्रद् वृषणं सचाभुवं वज्रमिन्द्र सचाभुवम् ॥१॥

हे इन्द्रदेवता संरक्षण प्राप्त गर्ने इच्छा भएका गृहस्थ यजमानहरू पत्नीसहितै स्वर्गलोक प्राप्त गर्नका लागि र गाई प्राप्त गर्नका लागि तिम्रा सम्मुख उपस्थित प्रस्तुत हुने गर्दछन् । यस्ता अवस्थामा हे इन्द्रदेवता ! गाईको समूह प्राप्त गर्नका लागि हुने गरेका सङ्ग्राममा तिमीलाई स्वयं लगेर प्रेरित गराउने यजमान तिम्रा लागि यज्ञकर्म सम्पन्न गर्दछन् । तिमीले आफूसित रहने वज्रलाई प्रकट रूपमा प्रयोग गरेका छौ ।

विदुष्टे अस्य विर्यस्य पूरवः पुरो यदिन्द्र शारदीरवातिरः सासहानो अवातिरः । शासस्तमिन्द्र मर्त्यमयज्युं शवसस्पते । महीममुष्णाः पृथिवीमिमा अपो मन्दसान इमा अपः ॥२॥

हे इन्द्रदेवता ! जब तिमीले शत्रुको सामर्थ्यलाई पददलित तथा उनका शरद् कालीन आवासीय नगरहरूलाई विध्वंस गरायौ, त्यस बेला प्रजाहरूमा तिम्रो शक्ति विख्यात भयो । हे शक्तिका सन्निधि इन्द्रदेवता ! तिमीले मानिसको कल्याणका लागि यज्ञ विध्वंसक राक्षसलाई दण्डित गरी पृथ्वी एवं जलमा उनको प्रभुत्व समाप्त गरेका थियौ ।

आदित् ते अस्य वीर्यस्य चर्किरन्मदेषु वृषन्नुशिजो यदाविथ सखीयतो यदाविथ । चकर्थ कारमेभ्यः पृतनासु प्रवन्तवे । ते अन्यामन्यां नद्यं सनिष्णत श्रवस्यन्तः सनिष्णत ॥३॥

हे शक्तिशाली इन्द्रदेवता ! आनन्दित हुँदा हुँदै तिमीले यजमान तथा मित्र भाव राख्नेहरूलाई रक्षा गरेका थियौ । उनीहरूकै कारण तिम्रो शक्ति चारै तिर विस्तारित गरिएको थियो । तिमीले नै धन आदि वितरण गरेर सङ्ग्राममा वीरहरूलाई प्रोत्साहित गर्‍यौ । तिमीले नै आपसको सहयोगका माध्यमबाट धन लाभ गराउँदै अन्न आदिको इच्छा गर्नेहरूलाई अन्न प्राप्त गरायौ ।

## सूक्त— ७६

**ऋषि—** वसुक्र । **देवता—** इन्द्र । **छन्द—** त्रिष्टुप् ।

वने न वा यो न्यधायि चाकञ्छुचिर्वां स्तोमो भुरणावजीगः । यस्येदिन्द्रः पुरुदिनेषु होता नृणां नर्यो नृतमः क्षपावान् ॥१॥

जसरी फल आदिको आहार खोज्ने पक्षीले आफ्ना बच्चालाई जतनसाथ रुखको गुँडमा राख्दछ, त्यसरी अति पवित्र स्तोत्र तिम्रा लागि समर्पित छ । हामीले धेरै दिनदेखि नै इन्द्रदेवतालाई यिनै स्तोत्रले आह्वान गरेका छौँ । ती इन्द्रदेवता नेतृत्व प्रदान गर्नेहरूमा सर्वश्रेष्ठ, पराक्रमशाली, नायक

तथा रात्रिकालमा पनि सोमपाने गर्ने गर्दछन् ।

**प्र ते अस्या उषसः प्रापरस्या नृतौ स्याम नृतमस्य नृणाम् । अनु त्रिशोकः शतमावहन्नृन् कुत्सेन रथो यो असत् ससवान् ॥२॥**

हे मानिसलाई नेतृत्व प्रदान गर्ने ! यस उषामा र अन्य उषामा तिम्रो अर्चना गरेर हाम्रो पनि श्रेष्ठता जागृत होस् । हे इन्द्रदेवता ! त्रिशोक नामका ऋषिले तिम्रो स्तुति र प्रार्थना गरेकाले तिमीबाट उनले सयौँ मानिसको सहायता प्राप्त गरे । त्यसका साथै कुत्स ऋषि जुन रथमा आरोहण गर्दछन् त्यो पनि तिम्रै कृपाको प्रतिफल हो ।

**कस्ते मद इन्द्र रन्त्यो भूद् दुरो गिरो अभ्युग्रो वि धाव । कद् वाहो अर्वागुप मा मनीषा आ त्वा शक्यामुपमं राधो अन्नैः ॥३॥**

हे इन्द्रदेवता ! हाम्रो स्तोत्रवाणी सुनेर यज्ञस्थलका ढोकातर्फ तिमी शीघ्रताका साथ आऊ । कस्ता खालको हर्षप्रदायक सोम तिमीलाई अति प्रसन्नतापूर्वक रुच्ने गर्दछ ? हामीलाई कहिले श्रेष्ठ वाहन प्राप्त हुन्छ ? हाम्रा मनको रहर कहिले पूरा हुन्छ ? हामी तिम्रा स्तोता हौँ, अन्न र धन प्राप्त गर्नका लागि कुन खालका साधनाले तिमीलाई प्रसन्न गर्न सक्छौँ ?

**कदु द्युम्नमिन्द्र त्वावतो नृन् कया धिया करसे कन्न आगन् । मित्रो न सत्या उरुगाय भृत्या अन्ने समस्य यदसन्मनीषाः ॥४॥**

हे इन्द्रदेवता ! तिमी कुन समयमा हाम्रा ध्यानमा प्रकट हुन्छौ र कुन समयमा हामीलाई साधनको सिद्धि प्राप्त हुन्छ ? कुन खालका स्तोत्र र सत्कर्मले हामी मानिसलाई आफूजस्तै सामर्थ्यवान् बनाउँछौ ? हे यशस्वी इन्द्रदेवता ! तिमी त सबैका सच्चा सखाजस्तै हितैषि छौ, सबै साधकहरूलाई अन्नले पालनपोषण गर्नमा तिमी सधैँ तत्पर रहने हुनाले यो कुरो सिद्ध भएकै छ ।

**प्रेरय सूरो अर्थं न पारं ये अस्य कामं जनिधा इव ग्मन् । गिरश्च ये ते तुविजात पूर्वीर्नर इन्द्र प्रतिशिक्षन्त्यन्नैः ॥५॥**

तेजस्वी देवताका लागि पवित्र जल उचित किसिमले प्रवाहित होस् । हे ऋत्विक्हरू हो ! मित्र र वरुणदेवताका लागि श्रेष्ठ अन्नरूपी सोमरस सफा गरेर तयार पार । त्यसपछि महावेगशाली इन्द्रदेवताका लागि श्रेष्ठ रीतिले स्तुति गर्न स्तोत्र उच्चारण गर ।

**मात्रे नु ते सुमिते इन्द्र पूर्वी द्यौर्मज्मना पृथिवी काव्येन । वराय ते घृतवन्तः सुतासः स्वाद्मन् भवन्तु पीतये मधूनि ॥६॥**

हे इन्द्रदेवता ! तिम्रा विशेष कृपाले प्राचीन समयमा बनाइएका जुन द्युलोक र पृथ्वी छन्, विभिन्न लोकहरूका निर्माता तिनै हुन् । तिम्रा लागि घिउसहितको सोम प्रस्तुत गरिँदै छ । त्यो मधुर रस पान गरेर तिमी हर्षित होऊ ।

**आ मध्वो अस्मा असिचन्नमत्रमिन्द्राय पूर्णं स हि सत्यराधाः । स वावृधे वरिमन्ना पृथिव्या अभि क्रत्वा नर्यः पौंस्यैश्च ॥७॥**

इन्द्रदेवता निश्चित रूपमा नै ऐश्वर्यप्रदाता हुन् । त्यसैले यस्ता देवताका लागि मधुपर्कले परिपूर्ण सोमपात्र सादर समर्पित गर । उनी मनुष्यका हितकारी पनि हुन् र पृथ्वीका व्यापक क्षेत्रमा आफ्ना पराक्रमले सबै तरिकाले उन्नति पनि गर्दै छन् ।

**व्यानडिन्द्रः पृतनाः स्वोजा आस्मै यतन्ते सख्याय पूर्वीः । आ स्मा रथं न पृतनासु तिष्ठ यं भद्रया सुमत्या चोदयासे ॥८॥**

अत्यन्त शक्तिशाली इन्द्रदेवताले शत्रुको सेनालाई छेकारो हालेका छन् । भयङ्कर शत्रुको सेना पनि इन्द्रदेवतासित मैत्रीसन्धि गर्नका लागि सधैँ प्रयत्नशील रहेको हुन्छ । हे इन्द्रदेवता ! जसरी संसारको हित गर्ने सत्प्रेरणाले तिमी समरभूमिमा रथमा चढेर जान्छौ, उसै गरी यस समयमा पनि रथमा चढेर प्रस्थान गर ।

## सूक्त– ७७

**ऋषि–** वामदेव । **देवता–** इन्द्र । **छन्द–** त्रिष्टुप् ।

**आ सत्यो यातु मघवाँ ऋजीषी द्रवन्त्वस्य हरय उप नः । तस्मा इदन्धः सुषुमा सुदक्षमिहाभिपित्वं करते गृणानः ॥१॥**

व्यवहारमा कुशल, सत्यनिष्ठ तथा धनवान् इन्द्रदेवता हाम्रा नजिकै आऊन् । उनलाई लिएर उनका ...दिरहेका अश्व हाम्रा नजिक चाँडै आइपुगून् । उनै इन्द्रदेवताका निमित्त हामी याजकहरू अन्नरूपी ...मरस पेलेर तयार गर्दछौँ । उनी त्यसबाट सन्तुष्ट भएर हाम्रो मनकामना पूर्ण गराऊन् ।

**अव स्य शूराध्वरो नान्तेऽस्मिन् नो अद्य सवने मन्दध्यै । शंसात्युक्थमुशनेव वेधाश्चिकितुषे असुर्याय मन्म ॥२॥**

... शूरवीर इन्द्रदेवता ! जसरी लक्ष्यमा पुगिसकेका अश्वलाई फुकाउने गरिन्छ, उसै गरी हामीलाई ...नि तिमी मुक्त गर । त्यसो भएपछि हामी तिमीलाई यज्ञमा हर्षित गराउनका लागि उचित ...किसिमले सेवासुसार गर्न सकौँ । हे इन्द्रदेवता ! तिमी सर्वज्ञाता हुनुका साथै असुर संहारक पनि ... । याजकहरू तिम्रा निम्ति उशना ऋषिका जस्तै उत्तम स्तोत्र उच्चारण गर्दछन् ।

**कविर्न निण्यं विदथानि साधन् वृषा यत् सेकं विपिपानो अर्चात् । दिव इत्था जीजनत् सप्त कारूनह्ना चिच्चक्रुर्वयुना गृणन्तः ॥३॥**

...ब यज्ञलाई सम्पन्न गराउँदै र सोमपान ग्रहण गर्दै ती इन्द्रदेवताको पूजा गरिन्छ, त्यस बेला उनी ...लोकबाट सात किसिमको रश्मि उत्पन्न गराउँछन् । विद्वान्ले जसरी गूढ अर्थ खोतल्न जान्दछन्, ...सै गरी कामनाको वर्षा गराउने इन्द्रदेवता समस्त कार्यहरूलाई जान्दछन् । उनका रश्मिका ...हयातले याजकहरू आआफ्नो कर्म सम्पन्न गर्दछन् ।

**स्व१र्यद् वेदि सुदृशीकमर्कैर्महि ज्योती रुरुचुर्यद्ध वस्तोः । अन्धा तमांसि दुधिता विचक्षे नृभ्यश्चकार नृतमो अभिष्टौ ॥४॥**

...ब विस्तृत तथा तेजयुक्त द्युलोक प्रकाशित भएर दर्शनीय बन्दछ, त्यस बेला सबैका आवासहरू ...नि आलोकित हुने गर्दछन् । संसारका नायक सूर्यदेवता उदाएर मानिसले देख्न सकून् भनी ...बिलएको कुहिरो विनाश गर्दछन् ।

**ववक्ष इन्द्रो अमितमृजीष्यु१भे आ पप्रौ रोदसी महित्वा । अतश्चिदस्य महिमा वि रेच्यभि यो विश्वा भुवना बभूव ॥५॥**

...परिमित महिमा धारण गर्ने इन्द्रदेवताले समस्त भुवनहरूमा आफ्नो अधिकार बनाइसकेका छन् । ...मरस पान गर्ने ती इन्द्रदेवता आफ्ना महिमाले द्यावापृथिवी दुवैलाई पूर्ण गराउँछन् । त्यसैले ...को महिमा कसैसित तुलना गर्न पनि सकिँदैन ।

**विश्वानि शक्रो नर्याणि विद्वानपो रिरेच सखिभिर्निकामैः । अश्मानं चिद् ये बिभिदुर्वचोभिर्व्रजं गोमन्तमुशिजो वि वव्रुः ॥६॥**

...द्रदेवता मानिसहरूका लागि सबै खालका कल्याणकारी कार्यका ज्ञाता हुन् । कामना गर्ने र ...त्राभावले युक्त मरुत्‌रुका निम्ति उनले जलको वर्षा गरे । जुन मरुत्‌हरूले आफ्नै ध्वनिद्वारा ...लाई पनि विदीर्ण गरेका छन्, उनै आकाङ्क्षा गर्ने मरुत्‌हरूले किरणको भण्डाररूपी गाईको ...लाई फुक्का गराए ।

**अपो वृत्रं वव्रिवांसं पराहन् प्रावत् ते वज्रं पृथिवी सचेताः । प्रार्णांसि समुद्रियाण्यैनोः पतिर्भवञ्छवसा शूर धृष्णो ॥७॥**

... इन्द्रदेवता ! सुरक्षा गर्ने तिम्रो वज्रले जब पानीलाई अवरुद्ध गरिराखेका मेघलाई विनाश गरेको ...यो, त्यसपछि नै पानी बर्सिएर धर्ती चेतनायुक्त भयो । हे शत्रुलाई संहार गर्ने पराक्रमी ...द्रदेवता ! तिमी आफ्नै शक्तिले संसारको अधिपति भएका छौ र आकाशको बादलमा रहेका ...लाई धर्तीतर्फ प्रेरित गरेका छौ ।

**अपो यदद्रिं पुरुहूत दर्दराविर्भुवत् सरमा पूर्व्यं ते । स नो नेता वाजमा दर्षि भूरिं गोत्रा रुजन्नङ्गिरोभिर्गृणानः ॥८॥**

धेरै तिरबाट अनेक किसिमले बोलाइने गरेका हे इन्द्रदेवता ! जब सरमाले तिम्रा लागि किरणरूपी गाई प्रकट गरिन् तब जलले परिपूर्ण मेघलाई तिमीले विदीर्ण गरायौ । तिमी अङ्गिराका वंशमा उत्पन्न ऋषिहरूबाट स्तुत्य भएर हामीलाई प्रचुर अन्न प्रदान गर ।

## सूक्त– ७८

**ऋषि–** शंयु । **देवता–** इन्द्र । **छन्द–** गायत्री ।

**तद् वो गाय सुते सचा पुरुहूताय सत्वने । शं यद् गवे न शाकिने ॥१॥**

स्तुति गर्नमा लागेका हे स्तोताहरू हो ! तिमीहरू शत्रुलाई जित्ने इन्द्रदेवताका यशको गुणगान गर । जसरी राम्रो घाँस पाएर गाईहरू प्रसन्न हुने गर्दछन्, उसै गरी तयार गरिएको सोमरससहित स्तुति गर्नाले इन्द्रदेवताले सुख पाउने गर्दछन् ।

**न घा वसुर्नि यमते दानं वाजस्य गोमतः । यत् सीमुप श्रवद् गिरः ॥२॥**

सबैलाई आश्रय प्रदान गर्ने ती इन्द्रदेवताले हाम्रो स्तुति सुनिसकेपछि हामीलाई धनधान्यका रूपमा अपार वैभव प्रदान गर्नका लागि पर्खिएर बस्दैनन् ।

**कुवित्सस्य प्र हि व्रजं गोमन्तं दस्युहा गमत् । शचीभिरप नो वरत् ॥३॥**

हे इन्द्रदेवता ! हिंसा गर्ने, गोठबाट गाई चोर्ने र तिनलाई लगेर लुकाउनेहरूलाई तिमी चाँडै नै खोजेर दण्डित गर र त्यसरी अपहरित भएका गाईलाई तुरुन्त मुक्त गराऊ ।

## सूक्त– ७९

**ऋषि–** शक्ति वा वसिष्ठ । **देवता–** इन्द्र । **छन्द–** प्रगाथ ।

**इन्द्र क्रतुं न आ भर पिता पुत्रेभ्यो यथा । शिक्षा णो अस्मिन् पुरुहूत यामनि जीवा ज्योतिरशीमहि ॥१॥**

हे इन्द्रदेवता ! हामीलाई यज्ञरूपी उत्तम कर्मको फल प्राप्त होस् । पिताले जसरी पुत्रलाई धन आदि प्रदान गरेर पालनपोषण गर्दछन्, उसरी नै हामीलाई तिमी पालनपोषण गर । सहायताका लागि धेरैले बोलाउने गरेका हे इन्द्रदेवता ! तिमी हामीलाई यज्ञमा दिव्य तेज प्रदान गर ।

**मा नो अज्ञाता वृजना दुराध्यो३ माशिवासो अव क्रमुः । त्वया वयं प्रवतः शश्वतीरपोऽति शूर तरामसि ॥२॥**

हे इन्द्रदेवता ! हामीले नचिनेका पापी, दुष्ट, कुटिल, अमङ्गलकारी मानिसहरूले हामीमाथि आक्रमण गर्न नसकून् । हे श्रेष्ठ वीर ! तिम्रा संरक्षणमा रहेर हामी बाधाविघ्न आदिका भेलबाट सजिलै पार पाउन सकौं ।

## सूक्त– ८०

**ऋषि–** शंयु । **देवता–** इन्द्र । **छन्द–** प्रगाथ ।

**इन्द्र ज्येष्ठं न आ भरँ ओजिष्ठं पपुरि श्रवः । येनेमे चित्र वज्रहस्त रोदसी ओभे सुशिप्र प्राः ॥१॥**

हातमा वज्र लिने गरेका हे देवताका राजा इन्द्र ! हामीलाई ओज र बल प्रदान गर्ने खालको पोषक तत्त्वले सम्पन्न अन्न प्रदान गर । जुन पोषक अन्नले द्युलोक र पृथ्वी दुवैलाई पोषण प्रदान गर्दछ त्यसलाई हामी आफूसितै राख्न पाऔँ भनेर कामना गर्दछौँ ।

**त्वामुग्रमवसे चर्षणीसहं राजन् देवेषु हूमहे । विश्वा सु नो विथुरा पिब्दना वसोऽमित्रान् सुषहान् कृधि ॥२॥**

हे इन्द्रदेवता ! हामी आफ्नो रक्षाका लागि तिमीलाई आह्वान गर्दछौँ । तिमी महाबली र शत्रु विजेता हौ । तिमी सबै असुरबाट हाम्रो रक्षा गर । सङ्ग्राममा हामी विजयी हुन सकौं भन्ने खालका हामीमाथि तिमी कृपा गर ।

## सूक्त– ८१

ऋषि– पुरुहन्मा । देवता– इन्द्र । छन्द– प्रगाथ ।

**यद् द्याव इन्द्र ते शतं शतं भूमीरुत स्युः । न त्वा वज्रिन्त्सहस्रं सूर्या अनु न जातमष्ट रोदसी ॥१॥**

हे इन्द्रदेवता ! सयौँ वटा देवलोक, सयौँ वटा पृथ्वी र हजारौँ वटा सूर्य यदि उत्पन्न भए भने पनि तिनले तिमीलाई समानता गर्न सक्दैनन् । द्यावापृथिवीमा कसैले पनि तिमीसित बराबरी गर्न सक्दैन ।

**आ पप्राथ महिना वृष्ण्या वृषन् विश्वा शविष्ठ शवसा । अस्माँ अव मघवन् गोमति व्रजे वज्रिञ्चित्राभिरूतिभिः ॥२॥**

हे बलशाली इन्द्रदेवता ! तिमी आफ्ना सामर्थ्यले सबैको इच्छा पूरा गराउँछौँ । हे बलवान्, धनवान् तथा वज्रधारी इन्द्रदेवता ! हामीलाई तिमी पोषण पदार्थ प्रदान गर्ने गाईका साथमा संरक्षण पनि प्रदान गर ।

## सूक्त– ८२

ऋषि– वशिष्ठ । देवता– इन्द्र । छन्द– प्रगाथ ।

**यदिन्द्र यावतस्त्वमेतावदहमीशीय । स्तोतारमिद् दिधिषेय रदावसो न पापत्वाय रासीय ॥१॥**

हे सम्पत्तिले सम्पन्न इन्द्रदेवता ! हामी पनि तिमीजस्तै सम्पत्तिका अधिपति हुन पाऔँ भनेर कामना गर्दछौँ । स्तोताहरूलाई धन प्रदान गर्ने हाम्रो पनि अभिलाषा छ; तर पापीलाई होइन ।

**शिक्षेयमिन्महयते दिवदिवे राय आ कुहचिद्विदे । नहि त्वदन्यन्मघवन् आप्यं वस्यो अस्ति पिता चन ॥२॥**

हामी जहाँ रहेर भए पनि तिमीलाई यजन गर्ने धन आर्जन गर्दछौँ । हे देवताका राजा इन्द्र ! तिमीबाहेक मेरो अरू कुनै दाजुभाइ नै छैन र बाबुजस्तो संरक्षक पनि कोही छैन ।

## सूक्त– ८३

ऋषि– शंयु । देवता– इन्द्र । छन्द– प्रगाथ ।

**इन्द्र त्रिधातु शरणं त्रिवरूथं स्वस्तिमत् । छर्दिर्यच्छ मघवद्भ्यश्च मह्यं च यावया दिद्युमेभ्यः ॥१॥**

हे इन्द्रदेवता ! ऐश्वर्यले सम्पन्नहरूलाई जसरी नै त्रिधातुयुक्त तीन ऋतुहरूमा हितकारी हुने शरीर या घरको आश्रय हामीलाई पनि प्रदान गर । यसबाट संसारी भ्रमले भरिएको रमझम र चमक पर हट्न सकोस् ।

**ये गव्यता मनसा शत्रुमादभुरभिप्रघ्नन्ति धृष्णुया । अध स्मा नो मघवन्निन्द्रि गिर्वणस्तनूपा अन्तमो भव ॥२॥**

हे इन्द्रदेवता ! गाई लुट्नका लागि जुन शत्रुहरू आउँछन् उनीहरूमाथि घर्षण शक्तिले सम्पन्न भएका अस्त्रले प्रहार गर । हे धनवान् तथा प्रशंसनीय इन्द्रदेवता ! नजिकै रहेका शत्रुबाट तिमी हाम्रो रक्षा गर । हाम्रा शरीरको रक्षा गर ।

## सूक्त– ८४

ऋषि– मधुच्छन्दा । देवता– इन्द्र । छन्द– गायत्री ।

**इन्द्रा याहि चित्रभानो सुता इमे त्वायवः । अण्वी भिस्तना पूतासः ॥१॥**

हे अद्भुत दीप्तिले सम्पन्न इन्द्रदेवता ! औँलाका सहायताले चुहाइएको, श्रेष्ठ पवित्रताले भरिएको यो सोमरस तिम्रा लागि नै तयार गरिएको हो । तिमी आऊ र यो सोमरस पान गर ।

**इन्द्रा याहि धियेषितो विप्रजूतः सुतावतः । उप ब्रह्माणि वाघतः ॥२॥**

हे इन्द्रदेवता ! श्रेष्ठ बुद्धिले मात्रै जान्न सकिने तिमीलाई सोमरस प्रस्तुत गरिरहेका याजकहरूले

बोलाएका छन् । उनका स्तुतिको आधारमा तिमी यज्ञशालामा आऊ ।

**इन्द्रा याहि तूतुजान उप ब्रह्माणि हरिवः । सुते दधिष्व नश्चनः ॥३॥**

हे अश्वले सम्पन्न इन्द्रदेवता ! तिमी स्तुति सुन्नका लागि र यस यज्ञमा हामीले प्रदान गरेको हवि सेवन गर्नका लागि यज्ञशालाभित्र तुरुन्तै आऊ ।

## सूक्त– ८५

**ऋषि–** प्रगाथ, मेध्यातिथि । **देवता–** इन्द्र । **छन्द–** प्रगाथ ।

**मा चिदन्यद् वि शंसत सखायो मा रिषण्यत । इन्द्रमित् स्तोता वृषणं सचा सुते मुहुरुक्था च शंसत ॥१॥**

हे मित्रहरू हो ! इन्द्रदेवतालाई छोडेर अन्य कुनै पनि देवताको स्तुति लाभप्रद छैन । त्यसमा शक्ति नाश नगर । सोम शोधित गरेर, एकत्र भएर, संयुक्त रूपमा बलशाली इन्द्रदेवतालाई नै बारम्बार प्रार्थना गर ।

**अवक्रक्षिणं वृषभं यथाजुरं गां न चर्षणीसहम् । विद्वेषणं संवननोभयंकरं मंहिष्ठमुभयाविनम् ॥२॥**

हे स्तोताहरू हो ! तिमीहरू सशक्त साँढेजस्ता सङ्घर्षशील नबुढिने, शत्रुलाई विरोध गर्ने र तिनलाई संहार गर्ने महान् दैविक र भौतिक ऐश्वर्यका प्रदाता इन्द्रदेवतालाई नै स्तुति गर ।

**यच्चिद्धि त्वा जना इमे नाना हवन्त ऊतये । अस्माकं ब्रह्मेदमिन्द्र भूतु तेहा विश्वा च वर्धनम् ॥३॥**

हे इन्द्रदेवता ! आफ्नो रक्षाका लागि यद्यपि सबै मानिसले तिमीलाई आह्वान गर्दछन्, तर पनि हाम्रा स्तुतिले नै तिम्रो गौरव निरन्तर वृद्धि गराउँछ ।

**वि तर्तूर्यन्ते मघवन् विपश्चितोऽर्यो विपो जनानाम् । उप क्रमस्व पुरुरूपमा भर वाजं नेदिष्ठमूतये ॥४॥**

ऐश्वर्यवान्, ज्ञानी, श्रेष्ठ तथा मानिसका पालक हे इन्द्रदेवता ! तिम्रो कृपाले स्तोताहरू समस्त विपत्तिहरूबाट जोगिने गर्दछन् । तिमी हाम्रा नजिक आऊ र पोषणका लागि विभिन्न खालका बल प्रदान गर ।

## सूक्त– ८६

**ऋषि–** विश्वामित्र । **देवता–** इन्द्र । **छन्द–** त्रिष्टुप् ।

**ब्रह्मणा ते ब्रह्मयुजा युनज्मि हरी सखाया सधमाद आशू । स्थिरं रथं सुखमिन्द्राधितिष्ठन् प्रजानन् विद्वाँ उप याहि सोमम् ॥१॥**

हे इन्द्रदेवता ! मन्त्रले नियन्त्रण हुने गरेका, युद्धमा कीर्तिसम्पन्न, मित्रभावले सम्पन्न हरी नामका दुई वटा अश्वलाई हामी मन्त्रकै लागि योजित गर्दछौं । हे इन्द्रदेवता ! सुदृढ र सुखकारी रथमा बसेर तिमी सोमयागका नजिक आऊ । तिमी सबै खालका यज्ञका विषयमा जान्ने विद्वान् हौ ।

## सूक्त– ८७

**ऋषि–** वसिष्ठ । **देवता–** इन्द्र, बृहस्पति । **छन्द–** त्रिष्टुप् ।

**अध्वर्यवोऽरुणं दुग्धमंशुं जुहोतन वृषभाय क्षितीनाम् । गौराद् वेदीयाँ अवपानमिन्द्रो विश्वाहेद्याति सुतसोममिच्छन् ॥१॥**

हे अध्वर्युहरू हो ! पेलेर तयार पारिएको रातो आभाले सम्पन्न रहेको सोमरस मानिसहरूमा श्रेष्ठ इन्द्रदेवताका लागि हवन गर । पिउन योग्य सोम परैबाट चिनेपछि गौरमृगजस्तो तीव्र गतिमा कुदेर सोमयाग गर्ने यजमानका नजिकमा उनी पुग्दछन् ।

**यद् दधिषे प्रदिवि चार्वन्नं दिवेदिवे पीतिमिदस्य वक्षि । उत हृदोत मनसा जुषाण उशन्निन्द्र प्रस्थितान् पाहि सोमान् ॥२॥**

हे इन्द्रदेवता ! प्राचीन कालमा तिमी अन्नका रूपमा जुन सुन्दर सोमरसलाई पेटमा धारण गर्दथ्यौ,

त्यहाँ सोम तिमी प्रत्येक दिन पान गर्ने इच्छा गर । हृदय र मनदेखि नै हाम्रो कल्याण गर्ने इच्छा गर्दै सोमरस पान गर ।

**जज्ञानः सोमं सहसे पपाथ प्र ते माता महिमानमुवाच । एन्द्र पप्राथोर्व१न्तरिक्षं युधा देवेभ्यो वरिवश्चकर्थ ॥३॥**

हे इन्द्रदेवता ! जन्मका समयदेखि नै तिमीले शक्ति प्राप्त गर्नका लागि सोमपान गरेका थियौ । तिम्रा महिमाको वर्णन तिम्रै माता अदितिले गरेकी थिइन् । तिमीले आफ्ना बलवर्कतले विस्तृत अन्तरिक्षलाई पूर्ण गरायौ र युद्धका माध्यमबाट देवता अथवा स्तोताहरूका लागि धन एकत्र गरेका थियौ ।

**यद् योधया महतो मन्यमानान् साक्षाम तान् बाहुभिः शाशदानान् । यद्वा नृभिर्वृत इन्द्राभियुध्यास्तं त्वयाजिं सौश्रवसं जयेम ॥४॥**

हे इन्द्रदेवता ! अहङ्कारले भरिएका र आफूलाई ठूलो ठान्ने शत्रुसित जहिले हाम्रो युद्ध हुन्छ, त्यस बेला हामी आफ्ना पाखुराले नै हिंसक शत्रुलाई दमन गर्न सकौँ । यदि तिमी आफैं अन्न वा यशका लागि युद्ध गर्दछौ भने त्यस्ता बेलामा तिमीसँग रहेर हामी त्यस युद्धलाई जितौँ ।

**प्रेन्द्रस्य वोचं प्रथमा कृतानि प्र नूतना मघवा या चकार । यदेददेवीरसहिष्ट माया अथाभवत् केवलः सोमो अस्य ॥५॥**

प्राचीन अथवा आधुनिक कालमा इन्द्रदेवताले गरेका पराक्रमको हामी बयान गर्दछौँ । इन्द्रदेवताले जहिलेदेखि कुटि कपटी असुरलाई परास्त गरे, त्यस बेलादेखि नै सोम केवल इन्द्रदेवताकै लागि सुरक्षित रहेको छ ।

**तवेदं विश्वमभितः पशव्यं१ यत् पश्यसि चक्षसा सूर्यस्य । गवामसि गोपतिरेक इन्द्र भक्षीमहि ते प्रयतस्य वस्वः ॥६॥**

हे इन्द्रदेवता ! तिमी सूर्यका तेज प्रकाशले जसलाई हेर्दछौ, त्यो पशुप्राणीले युक्त विश्व तिम्रै हो । त्यहाँका गाईरूपी किरणका अधिपति तिमी नै हौ । तिमीले प्रदान गरेको धन नै उपभोग गरेर सम्पन्न भएका छौँ ।

**बृहस्पते युवमिन्द्रश्च वस्वो दिव्यस्येशाथे उत पार्थिवस्य । धत्तं रयिं स्तुवते कीरये चिद् यूयं पात स्वस्तिभिः सदा नः ॥७॥**

हे इन्द्र र बृहस्पतिदेवता ! तिमीहरू दुवै द्युलोक र पृथ्वीमा उत्पन्न धनका स्वामी हौ । तिमीहरू दुवै स्तुति गर्ने स्तोतालाई धन प्रदान गर र कल्याणकारी साधनले सधैं हामीलाई रक्षा गर ।

## सूक्त– ८८

**ऋषि–** वामदेव । **देवता–** बृहस्पति । **छन्द–** त्रिष्टुप् ।

**यस्तस्तम्भ सहसा वि ज्मो अन्तान् बृहस्पतिस्त्रिषधस्थो रवेण । तं प्रत्नास ऋषयो दीध्यानाः पुरो विप्रा दधिरे मन्द्रजिह्वम् ॥१॥**

तीनै लोकमा निवास गर्ने जुन बृहस्पतिदेवताले धर्तीका दसै दिशालाई निश्चल गराए, मिठो बोली बोल्ने उनै देवतालाई उहिलेका ऋषिहरू तथा तेजस्वी विद्वान्हरू अघिल्लो स्थान दिएर स्थापित गरेका छन् ।

**धुनेतयः सुप्रकेतं मदन्तो बृहस्पते अभि ये नस्ततस्रे । पृषन्तं सृप्रमदब्धमूर्वं बृहस्पते रक्षतादस्य योनिम् ॥२॥**

हे बृहस्पतिदेवता ! जसको गति शत्रुलाई थर्काउने खालको छ, जो तिमीलाई आनन्दित गराउँछन् र तिम्रो प्रार्थना गर्दछन् तिनका लागि तिमी फल प्रदान गर्ने, उन्नति गराउने र हिंसा नगर्ने खालका हुने गर्दछौ । तिनका विस्तृत यज्ञलाई सुरक्षा प्रदान गर ।

**बृहस्पते या परमा परावदत आ त ऋतस्पृशो नि षेदुः । तुभ्यं खाता अवता अद्रिदुग्धा मध्व श्चोतन्त्यभितो विरप्शम् ॥३॥**

हे बृहस्पतिदेवता ! दूरवर्ती प्रदेशमा जो अत्यधिक श्रेष्ठ स्थान छ, त्यहाँबाट तिम्रो अश्व यज्ञमा आउने गर्दछ । जसरी गहिरो जलकुण्डबाट जलको प्रवाह बग्ने गर्दछ, उसै किसिमले चारै तर्फबाट प्रार्थनका साथसाथै ढुङ्गाले पेलेर निचोरेको मधुर सोमरस प्रवाहित हुने गर्दछ ।

**बृहस्पतिः प्रथमं जायमानो महो ज्योतिषः परमे व्योमन् । सप्तास्यस्तुविजातो रवेण वि सप्तरश्मिरधमत् तमांसि ॥४॥**

सात किसिमका छन्दरूपी मुख हुने, धेरै किसिमबाट उत्पन्न हुने र सातै किसिमका रश्मिहरूले सम्पन्न बृहस्पतिदेवता महान् सूर्यदेवताकै जसरी परम आकाशमा सर्वप्रथम उत्पन्न हुने गर्दछन् । उनले आफ्ना ज्योतिद्वारा अन्धकारलाई नष्ट गराउँछन् ।

**स सुष्टुभा स ऋक्वता गणेन वलं रुरोज फलिगं रवेण । बृहस्पतिरुस्रिया हव्यसूदः कनिक्रदद् वावशतीरुदाजत् ॥५॥**

बृहस्पतिदेवताले आफ्नो तेजस्विता र प्रार्थना गर्ने ऋचाहरूका साथमा ध्वनि गर्दै मेघमा रहेको बल नामको असुरलाई वध गरे । उनले हविलाई प्रेरित गर्ने र कराउने वाणीरूपी गाईलाई कराउँदै गरेका अवस्थामा बाहिर निकालेका थिए ।

**एवा पित्रे विश्वदेवाय वृष्णे यज्ञैर्विधेम नमसा हविर्भिः । बृहस्पते सुप्रजा वीरवन्तो वयं स्याम पतयो रयीणाम् ॥६॥**

यस किसिमका सबैलाई पालन गर्ने, समस्त देवताका स्वामी तथा बलशाली बृहस्पतिदेवतालाई हामी यज्ञ, आहुति र प्रार्थनाले सेवा गर्दछौँ । हे बृहस्पतिदेवता ! उनका प्रभावले हामीहरू श्रेष्ठ सन्तान तथा पराक्रमले सम्पन्न ऐश्वर्यका स्वामी बन्न सकौँ ।

## सूक्त– ८९

**ऋषि–** कृष्ण । **देवता–** इन्द्र । **छन्द–** त्रिष्टुप् ।

**अस्तेव सु प्रतरं लायमस्यन् भूषन्निव प्र भरा स्तोममस्मै । वाचा विप्रास्तरत वाचमर्यो नि रामय जरितः सोम इन्द्रम् ॥१॥**

धनुर्धारीले जसरी उत्तम रीतिले लक्ष्यवेधी बाणलाई प्रहार गर्दछ अथवा जसरी आभूषणले मानिस सुसज्जित हुन्छ, उसै किसिमले नै इन्द्रदेवताका लागि श्रेष्ठ स्तुति प्रयोग गरौँ र त्यसबाट प्रतिस्पर्धा गर्नेहरू परास्त होऊन् । हे स्तोताहरू हो ! पराक्रमी इन्द्रदेवतालाई सोमपान गर्नतर्फ आकर्षित गर ।

**दोहेन गामुप शिक्षा सखायं प्र बोधय जरितर्जारमिन्द्रम् । कोशं न पूर्णं वसुना न्यृष्टमा च्यावय मघदेयाय शूरम् ॥२॥**

हे स्तुतिकर्ताहरू हो ! गाईलाई दोहन गरेर आफ्नो प्रयोजन पूरा गरेझैं इन्द्रदेवताबाट पनि आफूले रहर गरेको फल प्राप्त गरौँ र प्रशंसा गर्न योग्य इन्द्रदेवतालाई जागृत गरौँ । अन्नले भरिएका भाँडाको मुख तलतिर कोल्ट्याएर त्यसको अन्न बाहिर निकालिन्छ उसै गरी शूर इन्द्रदेवतालाई अभीष्ट सिद्धिका लागि आफ्नो अनुकूल बनाऔँ ।

**किमङ्ग त्वा मघवन् भोजमाहुः शिशीहि मा शिशयं त्वा शृणोमि । अप्नस्वती मम धीरस्तु शक्र वसुविदं भगमिन्द्रा भरा नः ॥३॥**

हे वैभवशाली इन्द्रदेवता ! तिमीलाई ज्ञानी मानिसहरू कामनापूरक किन भन्दछन् ? हामीलाई तिमी धनले सम्पन्न बनाऊ । हे इन्द्रदेवता ! हाम्रो विवेकबुद्धि जागृत गराऊ, कार्यकुशलता प्रदान गर र श्रेष्ठ ऐश्वर्यसम्पदाले सौभाग्ययुक्त बनाऊ ।

**त्वां जना ममसत्येष्विन्द्र संतस्थाना वि ह्वयन्ते समीके । अत्रा युजं कृणुते यो हविष्मान्नासुन्वता सख्यं वष्टि शूरः ॥४॥**

हे इन्द्रदेवता ! योद्धाहरू लडाइँका मैदानमा जाँदाखेरि सहयोगका लागि तिम्रो सम्झना गर्दछन् । जसले हविरूपी सोम समर्पित गर्दछन्, वीर इन्द्रदेवताले उनलाई सहयोग गर्दछन् । जसले हविरूपी सोम समर्पित गर्दैनन्, उनीहरू तिनको मैत्री भावनाबाट वञ्चित हुने गर्दछन् ।

**धनं न स्पन्द्रं बहुलं यो अस्मै तीव्रान्त्सोमाँ आसुनोति प्रयस्वान् । तस्मै शत्रून्त्सुतुकान् प्रातरह्नो नि स्वष्ट्रान् युवति हन्ति वृत्रम् ॥५॥**

जुन प्रयत्नशील साधकले सरस सम्पदाका रूपमा तीव्र सोमरस इन्द्रदेवका लागि समर्पित गर्दछन्, इन्द्रदेवताले तिनका लागि सामर्थ्यवान् एवं अनेकौँ आयुधले युक्त शत्रुलाई पनि परास्त गराउँछन् र उनैले वृत्र नामको छेकारो हाल्ने असुर शत्रुलाई पनि संहार गर्दछन् ।

**यस्मिन् वयं दधिमा शंसमिन्द्रे यः शिश्राय मघवा काममस्मे । आराच्चित् सन् भयतामस्य शत्रुर्न्यस्मै द्युम्ना जन्या नमन्ताम् ॥६॥**

जुन ऐश्वर्यवान् इन्द्रदेवतालाई स्तोत्रले हामी प्रार्थना गर्दछौँ र जसले हामीलाई अभीष्ट वैभव प्रदान गर्दछन्, उनका अगाडिबाट शत्रुहरू डराएर भागून् र शत्रुका भागको सम्पदा पनि उनैलाई प्राप्त होस् ।

**आराच्छत्रुमप बाधस्व दूरमुग्रो यः शम्बः पुरुहूत तेन । अस्मे धेहि यवमद् गोमदिन्द्र कृधी धियं जरित्रे वाजरत्नाम् ॥७॥**

प्रथम आवाहित हे इन्द्रदेवता ! आफ्ना तीक्ष्ण वज्रले तिमी हाम्रा नजिकमा रहेका शत्रुलाई धपाएर पर पुऱ्याऊ र हामीलाई जौ आदि अन्नका साथै गाई आदिले युक्त सम्पदा प्रदान गर । आफ्ना स्तोताहरूका प्रार्थनालाई रत्न उब्जाउने बनाऊ ।

**प्र यमन्तर्वृषसवासो अग्मन् तीव्राः सोमा बहुलान्तास इन्द्रम् । नाह दामानं मघवा नि यंसन् नि सुन्वते वहति भूरि वामम् ॥८॥**

खरो सोमरस, मधुरसका रूपमा विभिन्न धारा बनेर खस्दै जति बेला इन्द्रदेवताका शरीरमा पस्दछ, त्यस बेला वैभवसम्पन्न इन्द्रदेवता सोमरस प्रदाता यजमानको विरोध गर्दैनन्, बरु त्यसरी सोमरस प्रस्तुत गर्नेलाई प्रचुर मात्रामा इच्छित सम्पत्ति प्रदान गर्दछन् ।

**उत प्रहामतिदीवा जयति कृतमिव श्वघ्नी वि चिनोति काले । यो देवकामो न धनं रुणद्धि समित् तं रायः सृजति स्वधाभिः ॥९॥**

हारेका जुवाडेले जित्ने जुवाडेलाई खोजेर पहिलेका हारको बदला जसरी अर्को पटक उसलाई जितेर लिने गर्दछ, उसै गरीकन इन्द्रदेवता पनि अनिष्टकारी शत्रुमाथि जोडदार हमला गरेर उसलाई पराजित गराउँछन् । जुन साधकले देवपूजन यज्ञ आदि काममा कन्जुस्याइँ गर्दैनन्, ऐश्वर्यशाली इन्द्रदेवता त्यस्ता साधकलाई धनसम्पदाले सम्पन्न बनाउँछन् ।

**गोभिष्टरेमामतिं दुरेवां यवेन वा क्षुधं पुरुहूत विश्वे । वयं राजसु प्रथमा धनान्यरिष्टासो वृजनीभिर्जयेम ॥१०॥**

धेरै तिरबाट आह्वान गरिएका हे इन्द्रदेवता ! तिम्रा कृपादृष्टिले हामी गाईरूपी धनले दुःखदारिद्र्यबाट मुक्त होऔँ । जौ आदि अन्नले हाम्रो भोक शान्त गराओस् । हामी शासनाध्यक्षका साथमा अग्रसर हुँदै आफ्नो सामर्थ्यले शत्रुलको विपुल सम्पदालाई आफ्ना अधीनमा बनाउन सकौँ ।

**बृहस्पतिर्नः परि पातु पश्चादुतोत्तरस्मादधरादघायोः । इन्द्रः पुरस्तादुत मध्यतो नः सखा सखिभ्यो वरीयः कृणोतु ॥११॥**

दुष्ट पापी शत्रुबाट बृहस्पतिदेवताले हामीलाई पश्चिम, उत्तर तथा दक्षिणबाट संरक्षित गरून् । इन्द्रदेवताले पूर्व दिशा र मध्यभागबाट आउने शत्रुबाट हामीलाई जोगाऊन् । उनै इन्द्रदेवता सबैका

मित्र हुन् तथा हामी पनि उनका सखा हौं । उनले हाम्रो अभीष्ट सिद्ध गरून् ।

## सूक्त– ९०

**ऋषि–** भरद्वाज । **देवता–** बृहस्पति । **छन्द–** त्रिष्टुप् ।

**यो अद्रिभित् प्रथमजा ऋतावा बृहस्पतिराङ्गिरसो हविष्मान् । द्विबर्हज्मा प्राघर्मसत् पिता न आ रोदसी वृषभो रोरवीति ॥१॥**

बृहस्पतिदेवता सबैभन्दा पहिले उत्पन्न भए र उनैले पर्वतलाई ध्वस्त पारे । जुन अङ्गिरसहरू हविष्यान्नले युक्त छन्, जो स्वयंका तेजले तेजस्वी छन्, उनै उत्तम गुणले भूमिलाई सुरक्षा गर्ने बलवान् बृहस्पतिदेवता हाम्रा पालक हुन् र द्युलोक र भूलोकमा गर्जना गरिरहून् ।

**जनाय चिद् य ईवत उ लोकं बृहस्पतिर्देवहूतौ चकार । घ्नन् वृत्राणि वि पुरो दर्दरीति जयञ्छत्रूंरमित्रान् पृत्सु साहन् ॥२॥**

जुन बृहस्पतिदेवता स्तोतालाई स्थान दिने गर्दछन्, जो शत्रुलाई मार्ने र शत्रुविजयी हुन्, उनैले शत्रुलाई परास्त गरेर उनीहरूका सहर सबै ध्वस्त गराऊन् ।

**बृहस्पतिः समजयद् वसूनि महो व्रजान् गोमतो देव एषः । अपः सिषासन्त्स्व१रप्रतीतो बृहस्पतिर्हन्त्यमित्रमर्कैः ॥३॥**

बृहस्पतिदेवताले असुरहरूलाई परास्त गरेर गाईरूपी धन जितेका छन् । दिव्य प्रकाश एवं रसलाई धारण गर्ने बृहस्पतिदेवता स्वर्गका शत्रुलाई मन्त्रले नै विनाश गर्दछन् ।

## सूक्त– ९१

**ऋषि–** अयास्य । **देवता–** बृहस्पति । **छन्द–** त्रिष्टुप् ।

**इमां धियं सप्तशीर्ष्णीं पिता न ऋतप्रजातां बृहतीमविन्दत् । तुरीयं स्विज्जनयद् विश्वजन्योऽयास्य उक्थमिन्द्राय शंसन् ॥१॥**

हाम्रा सृष्टिकर्ता पिताले ऋत नामको सत्यबाट उत्पन्न सात शिर भएको यस विशाल बुद्धिलाई प्राप्त गरे । विश्वमा उत्पन्न भएका अयास्य नामका ऋषिले इन्द्रदेवताका लागि स्तोत्र उच्चारण गर्दै ईश्वरका निकटमा रहेको चौथो अवस्थाको सिर्जना गरे ।

**ऋतं शंसन्त ऋजु दीध्याना दिवस्पुत्रासो असुरस्य वीराः । विप्रं पदमङ्गिरसो दधाना यज्ञस्य धाम प्रथमं मनन्त ॥२॥**

अङ्गिरा ऋषिले यज्ञका श्रेष्ठ स्थलमा जाने निश्चय गरे । उनी सत्यको व्रत पालक, मनोभावनाले सरल, दिव्य पुत्र, महाबलवान् छन् र ज्ञानीहरूको जस्तै आचरणमा निष्ठापूर्वक रहेका छन् ।

**हंसैरिव सखिभिर्वावदद्भिरश्मन्मयानि नहना व्यस्यन् । बृहस्पतिरभिकनिक्रदद् गा उत प्रास्तौदुच्च विद्वाँ अगायत् ॥३॥**

बृहस्पतिदेवताका मित्र मरुत्हरूले हंसको जस्तै स्वर निकाले । उनका सहयोगले बृहस्पतिदेवताले ढुङ्गाले बनाइएको ढोका उघारिदिए । भित्र थुनिएर बसेका गाईहरू कराउन थाले । ती ज्ञानीले पनि देवताहरूका लागि तयार गरेको श्रेष्ठ स्तोत्र उच्च स्वरमा गाए ।

**अवो द्वाभ्यां पर एकया गा गुहा तिष्ठन्तीरनृतस्य सेतौ । बृहस्पतिस्तमसि ज्योतिरिच्छन्नुदुस्रा आकर्वि हि तिस्र आवः ॥४॥**

असत्रूपी अव्यक्त तथा गोप्य क्षेत्रमा प्रकाश अथवा वाणीरूपी गाईहरू लुकेर बसेका थिए । बृहस्पति नामका ज्ञान वा वाणीका अधिपति देवताले अन्धकाररूपी अज्ञानताबाट प्रकाशरूपी ज्ञानको कामना गरे र अन्तरिक्ष र पृथ्वी यी दुई तल्ला लोक तथा माथि रहेको एउटा द्युलोक गरी जम्मा तीन वटा लोकका ढोका खोलेर किरण वा वाणीरूपी गाईलाई प्रकट गराए ।

**विभिद्या पुरं शयथेमपाचीं निस्त्रीणि साकमुदधेरकृन्तत् । बृहस्पतिरुषसं सूर्यं गामर्कं विवेद स्तनयन्निव द्यौः ॥५॥**

गाईलाई थुनेर राखेको बल नामको असुरलाई उँधो मुन्टो पारेर लखेट्दै त्यसको सहर भेदन गर्ने

बृहस्पतिदेवताले एकै चोटिमा तीन वटा बन्धन काटिदिए । उनले मेघ वा प्रवाहित अवस्थामा रहेको जलाशयबाट उषा, सूर्य र किरणरूपी गाईलाई एकै चोटि प्रकट गराए । ती बृहस्पतिदेवताले विद्युत्‌झैँ गर्जना गर्ने अर्क नामको प्राणको स्रोतलाई जानेका छन् ।

**इन्द्रो वलं रक्षितारं दुघानां करेणेव वि चकर्ता रवेण । स्वेदाञ्जिभिराशिरमिच्छमानोऽरोदयत् पणिमा गा अमुष्णात् ॥६॥**

बल नामका जुन राक्षसले गाईलाई लुकाएको थियो, उसलाई इन्द्रदेवताले आफ्नो घातक हतियारको चोटिलो प्रहारले छिन्नभिन्न गराए । मरुत्‌हरूको सहायता प्राप्त गर्न इच्छुक उनले बलको अनुयायी पणीलाई नष्ट गराए र त्यसले चोरेर लगेका गाईलाई मुक्त गराए ।

**स ईं सत्येभिः सखिभिः शुभद्भिर्गोधायसं वि धनसैरदर्दः । ब्रह्मणस्पतिर्वृषभिर्वराहैर्घर्मस्वेदेभिर्द्रविणं व्यानट् ॥७॥**

बृहस्पतिदेवताले सत्यस्वरूप, मित्ररूप, तेजस्वी र ऐश्वर्ययुक्त मरुत्‌गणका सहयोगले गाईलाई थुनेर राख्ने त्यस बल नामका राक्षसलाई विनाश गरे । उनले वर्षणशील मेघले प्रज्ज्वलित र गतिशील मरुत्‌हरूका सहयोगले धनधान्य प्राप्त गरे ।

**ते सत्येन मनसा गोपतिं गा इयानास इषणयन्त धीभिः । बृहस्पतिर्मिथोअवद्यपेभिरुदुस्रिया असृजत स्वयुग्भिः ॥८॥**

किरणरूपी गाईसित प्रीति भएका मरुत्‌गणले सत्यनिष्ठ मन एवं श्रेष्ठ कर्मले बृहस्पतिदेवतालाई गाईका अधिपति बनाउनका लागि प्रेरित गरे । उनैले दुष्ट राक्षसबाट गाईलाई रक्षा गर्नका लागि एकत्रित भएका मरुत्‌हरूका सहयोगले गाईलाई मुक्त गराए ।

**तं वर्धयन्तो मतिभिः शिवाभिः सिंहमिव नानदतं सधस्थे । बृहस्पतिं वृषणं शूरसातौ भरेभरे अनु मदेम जिष्णुम् ॥९॥**

अन्तरिक्षमा बारम्बार गर्जना गर्ने, कामना पूरा गराउने र विजयशील उनै बृहस्पतिदेवतालाई प्रोत्साहित गर्नका लागि हामी मरुत्‌वीरहरूले भाग लिएका युद्धमा कल्याणकारी स्तुति गाएर उनीहरूलाई प्रार्थना गर्दछौँ ।

**यदा वाजमसनद् विश्वरूपमा द्यामरुक्षदुत्तराणि सद्म । बृहस्पतिं वृषणं वर्धयन्तो नाना सन्तो बिभ्रतो ज्योतिरासा ॥१०॥**

जुन समयमा बृहस्पतिदेवता सबै खालका सांसारिक अन्नहरूलाई सेवन गर्दछन् र आकाशभन्दा माथि गएर उत्तम लोकहरूमा प्रतिष्ठित हुन्छन्, त्यस बेला बलशाली बृहस्पतिदेवतालाई देवताको समूहले मुखको वाणीका रूपमा प्रोत्साहित गर्दछन् । उनले विभिन्न दिशामा रहेर उनीहरूलाई विभिन्न किसिमले उन्नतिशील बनाउँछन् ।

**सत्यामाशिषं कृणुता वयोधै कीरिं चिद्ध्यवथ स्वेभिरेवैः । पश्चा मृधो अप भवन्तु विश्वास्तद् रोदसी शृणुतं विश्वमिन्वे ॥११॥**

हे देवताहरू हो ! अन्न प्राप्त गर्नका लागि गरिएको हाम्रो प्रार्थनालाई तिमी सफलता प्रदान गर । तिमी आफ्ना आश्रयमा हामीजस्ता साधकहरूलाई संरक्षण गर र हाम्रा सबै किसिमका आपद्‌विपद्‌हरू निवारण गर । सम्पूर्ण विश्वलाई नै हर्षित गराउने हे द्युलोक र पृथिवी ! तिमीहरू दुईले हाम्रा निवेदनको अभिप्राय बुझ ।

**इन्द्रो मह्ना महतो अर्णवस्य वि मूर्धानमभिनदर्बुदस्य । अहन्नहिमरिणात् सप्त सिन्धून् देवैर्द्यावापृथिवी प्रावतं नः ॥१२॥**

सबैभन्दा पहिले बृहस्पतिदेवताले विशाल जलभण्डारका रूपमा रहेको मेघको शिर छिनाए । जललाई अवरोध गरेर राख्ने शत्रुलाई विनाश गरे । सात किसिमका धाराहरूलाई एकै पटक प्रवाहित र संयुक्त गराए । हे द्युलोक र पृथिवी ! देवताहरूका साथमा तिमीहरू आएर हामीलाई संरक्षण गर ।

## सूक्त– ९२

**ऋषि–** प्रियमेध, अयास्य, पुरुहन्मा । **देवता–** इन्द्र, विश्देवा, वरुण । **छन्द–** गायत्री, अनुष्टुप्, पङ्क्ति, पथ्याबृहती, प्रगाथ ।

**अभि प्र गोपतिं गिरेन्द्रमर्च यथा विदे । सूनुं सत्यस्य सत्पतिम् ॥१॥**

हे याजकहरू हो ! गाईको रक्षा गर्ने, सत्यनिष्ठ, सज्जनका संरक्षक इन्द्रदेवतालाई मन्त्रको उच्चारण गर्दै प्रार्थना गर । त्यसबाट उनका शक्तिको आभास हुन सकोस् ।

**आ हरयः ससृज्रिरेऽरुषीरधि बर्हिषि । यत्राभि संनवामहे ॥२॥**

जुन इन्द्रदेवतालाई हामी आफ्ना यज्ञमण्डपमा प्रार्थना गर्दछौं, उनलाई उत्तम अश्वले यज्ञशालातर्फ लिएर आऊन् ।

**इन्द्राय गाव आशिरं दुदुह्रे वज्रिणे मधु । यत् सीमुपह्वरे विदत् ॥३॥**

जब यज्ञस्थलका नजिकै नै इन्द्रदेवता मधुर रस पान गर्न लागेका हुन्छन्, त्यस बेला गाईहरू हातमा वज्र लिने इन्द्रदेवताले पान गर्नका लागि मिठो दुध प्रदान गर्दछन् ।

**यद् यद् ब्रध्नस्य विष्टपं गृहमिन्द्रश्च गन्वहि । मध्वः पीत्वा सचेवहि त्रिः सप्त सख्युः पदे ॥४॥**

जब हामीले इन्द्रदेवताका साथमा आकाशमा गमन गरेका थियौं, त्यस बेला आफ्ना साथीका रूपमा रहेका उनै इन्द्रदेवताका साथमा मधुर सोमपान गरेर हामी पनि सात गुणा तीन स्थानहरूमा उनीसँगै संयुक्त भयौं ।

**अर्चत प्रार्चत प्रियमेधासो अर्चत । अर्चन्तु पुत्रका उत पुरं न धृष्ण्वर्चत ॥५॥**

हे प्रियमेधका वंशज मानिसहरू हो ! यज्ञलाई प्रिय मान्ने, सन्तान एवं साधकको कामना पूरा गराउने र शत्रुलाई पराजित गर्ने इन्द्रदेवतालाई श्रद्धापूर्वक तिमीहरू सबैले सम्मान गर ।

**अव स्वराति गर्गरो गोधा परि सनिष्वणत् । पिङ्गा परि चनिष्कददिन्द्राय ब्रह्मोद्यतम् ॥६॥**

लडाइँको बाजाको जस्तो अथवा मेघको जस्तो गडगडाहट स्वर आइरहेको छ । हातले रक्षा गर्ने रक्षक वा किरण धारण गरेका अवरोधकहरूको आवाज सबै तिरबाट आइरहेको छ । धनुषको प्रत्यञ्चा अथवा विद्युत्को ध्वनि धनुषको टङ्कार वा मेघको गर्जनका रूपमा सबैतिर सुनिँदै छ । यस्ता अवस्थामा पराक्रमी संरक्षक अथवा वर्षाका देवताको रूपमा रहेका इन्द्रदेवताका लागि स्तोत्र पाठ गरौं ।

**आ यत् पतन्त्येन्यः सुदुघा अनपस्फुरः । अपस्फुरं गृभायत सोममिन्द्राय पातवे ॥७॥**

जति बेला सफा पानीका प्रवाहले नदीहरू बग्दछन् त्यस बेला इन्द्रदेवताले पिउनका लागि श्रेष्ठ गुणले सम्पन्न मधुर सोमरस लिएर उपस्थित होऔं ।

**अपादिन्द्रो अपादग्निर्विश्वे देवा अमत्सत । वरुण इदिह क्षयत् तमापो अभ्यनूषत वत्सं संशिश्वरीव ॥८॥**

अग्नि, इन्द्र तथा विश्वेदेवाहरू सोमपान गरेर हर्षित भए । वरुणदेवता पनि यहाँ उपस्थित रहून् । जसरी आफ्नो बाछो भेट्न लैनो गाई कराउँछ, उस्तै किसिमले हाम्रा स्तोत्रले वरुण देवताको प्रार्थना गर्दछ ।

**सुदेवो असि वरुण यस्य ते सप्त सिन्धवः । अनुक्षरन्ति काकुदं सूर्म्यं सुषिरामिव ॥९॥**

हे वरुणदेवता ! जसरी सूर्यतर्फ किरणले गति गर्दछ, उसै गरी तिम्रा ओजले सातै सरिताहरू समुद्रतर्फ प्रवाहित हुने गर्दछन् ।

**यो व्यतीँरफाणयत् सुयुक्ताँ उप दाशुषे । तक्वो नेता तदिद् वपुरुपमा यो अमुच्यत ॥१०॥**

जुन इन्द्रदेवताले द्रुतगामी अश्वलाई रथमा नियोजित गरेर हविप्रदाता यजमानका निकट जान्छन्, उनै विशाल शरीर भएका नायक इन्द्रदेवताले यज्ञशालामा प्रमुख स्थान प्राप्त गर्दछन् ।

**अतीदु शक्र ओहत इन्द्रो विश्वा अति द्विषः । भिनत् कनीन ओदनं पच्यमानं परो गिरा ॥११॥**

समर्थ इन्द्रदेवता सबै विद्वेषिरुलाई पर हटाउँछन् । उनले आफ्ना साना आवाजले नै बादललाई नष्ट गराए ।

**अर्भको न कुमारकोऽधि तिष्ठन्नवं रथम् । स पक्षन्महिषं मृगं पित्रे मात्रे विभुक्रतुम् ॥१२॥**

यी इन्द्रदेवता आफ्ना विशाल शरीरले नयाँ रथमा सुशोभित हुने गरेका छन् । उनले विविध श्रेष्ठ कर्महरू सम्पन्न गर्दै बादललाई जलको वर्षा गर्नका लागि प्रेरित गरेका छन् ।

**आ तू सुशिप्र दंपते रथं तिष्ठा हिरण्ययम् । अध द्युक्षं सचेवहि सहस्रपादमरुषं स्वस्तिगामनेहसम् ॥१३॥**

हे सुहाउँदो जोडीमा रहेका इन्द्रदेवता ! सहस्र किसिमका रश्मिले आलोकित, द्रुतगामी स्वर्णिम रथमा तिमी उचित किसिमले आरुढ होऊ र यहाँ आऊ; अनि हामी दुवैको भेटघाट होला ।

**तं घेमित्था नमस्विन उप स्वराजमासते । अर्थं चिदस्य सुधितं यदेतव आवर्तयन्ति दावने ॥१४॥**

त्यस्ता स्वयं प्रकाशित इन्द्रदेवताको वन्दना गर्ने याजकहरू साधना गर्दछन् । त्यसपछि उनी श्रेष्ठ सम्पत्ति तथा सद्बुद्धि ग्रहण गर्दछन् ।

**अनु प्रत्नस्यौकसः प्रियमेधास एषाम् । पूर्वामनु प्रयतिं वृक्तबर्हिषो हितप्रयस आशत ॥१५॥**

कुशको आसन फिँजाउने तथा यज्ञमा हविष्यान्न प्रदान गर्ने प्रियमेध ऋषि अथवा श्रेष्ठ बुद्धि अथवा यज्ञले युक्त साधकहरूले उहिलेको जस्तै शाश्वत निवासस्थलका रूपमा स्वर्गलोक प्राप्त गरे ।

**यो राजा चर्षणीनां याता रथेभिरध्रिगुः । विश्वासां तरुता पृतनानां ज्येष्ठो वो वृत्रहा गृणे ॥१६॥**

मानवको अधिपति, वेगवान, शत्रुको सेनालाई संहार गर्ने, वृत्रलाई समाप्त गर्ने, श्रेष्ठ इन्द्रदेवतालाई हामी स्तुति गर्दछौँ ।

**इन्द्रं तं शुम्भ पुरुहन्मन्नवसे यस्य द्विता विधर्तरि । हस्ताय वज्रः प्रति धायि दर्शतो महो दिवे न सूर्यः ॥१७॥**

हे साधकहरू हो ! आफ्नो रक्षा गर्नका लागि देवताहरूका राजा इन्द्रको उपासना गर । उनका संरक्षणमा देवत्वको रक्षा र असुरताको विनाश गर्ने दोहोरो शक्ति रहेको छ । ती इन्द्रदेवता, सूर्यको जस्तै तेजस्वी वज्र हातमा धारण गर्दछन् ।

**नकिष्टं कर्मणा नशद् यश्चकार सदावृधम् । इन्द्रं न यज्ञैर्विश्वगूर्तमृभ्वसमधृष्टं धृष्ण्वोजसम् ॥१८॥**

स्तुति गर्न योग्य, महाबलशाली, समृद्ध, अपराजित, शत्रुलाई दमन गर्ने इन्द्रदेवतालाई जुन साधकले यज्ञ आदि कर्म गरेर आफ्नो अनुकूल आचरण गर्ने सहचरजस्तो बनाउँछन् तिनका कर्मलाई कसैले पनि नष्ट गराउन सक्दैनन् ।

**अषाढहमुग्रं पृतनासु सासहिं यस्मिन् महीरुरुज्रयः । सं धेनवो जायमाने अनोनवुर्द्यावः क्षामो अनोनवुः ॥१९॥**

जुन इन्द्रदेवता प्रकट भएपछि महान् वेगशाली किरणरूपी गाईहरू र पृथ्वी तथा आकाश पनि उनका अगाडि झुकेर अभिवादन गर्दछन्, उनै उग्र शत्रुविजेता र पराक्रमी इन्द्रदेवतालाई हामी स्तुति गर्दछौँ ।

**यद् द्याव इन्द्र ते शतं शतं भूमीरुत स्युः । न त्वा वज्रिन्त्सहस्रं सूर्या अनु न जातमष्ट रोदसी ॥२०॥**

हे इन्द्रदेवता ! पृथ्वी एवं द्युलोक सयौँ गुणा विस्तृत होऊन्, सूर्य हजारौँ गुणा विस्तृत होऊन् तर पनि तिम्रो समानता गर्न सक्दैनन् । द्यावापृथिवीमा कोही पनि तिम्रो बराबर छैन ।

आ पप्राथ महिना वृष्ण्या वृषन् विश्वा शविष्ठ शवसा । अस्माँ अव मघवन् गोमति व्रजे वज्रिञ्चित्राभिरूतिभिः ॥२१॥

हे बलशाली इन्द्रदेवता ! तिमी आफ्ना सामर्थ्यले सबैको इच्छा पूरा गर्दछौ । हे बलवान्, धनवान्, वज्रधारी इन्द्रदेवता ! तिमी पोषक रसले युक्त गाईरूपी धन प्रदान गर्नुका साथै हाम्रो संरक्षण गर ।

## सूक्त– ९३

**ऋषि–** प्रगाथ, देवजामि इन्द्रमाता । **देवता–** इन्द्र । **छन्द–** गायत्री ।

**उत् त्वा मन्दन्तु स्तोमाः कृणुष्व राधो अद्रिवः । अव ब्रह्मद्विषो जहि ॥१॥**

हे इन्द्रदेवता ! तिमीलाई यी स्तोत्रले आनन्द प्रदान गर्दछन् । हे वज्रधारी इन्द्रदेवता ! हामीलाई तिमी ऐश्वर्य प्रदान गर र ज्ञानका साथ द्वेष गर्नेहरूलाई संहार गर ।

**पदा पणीँरराधसो न बाधस्व महाँ असि । नहि त्वा कश्चन प्रति ॥२॥**

हे इन्द्रदेवता ! तिमी महान् छौ । तिम्रो जति सामर्थ्य अरू कसैको पनि छैन । तिमी यज्ञ आदि कर्म नगर्ने कृपणहरूलाई दुःख देऊ ।

**त्वमीशिषे सुतानामिन्द्र त्वमसुतानाम् । त्वं राजा जनानाम् ॥३॥**

हे इन्द्रदेवता ! रसले युक्त र सिद्ध सोमरस आदि पदार्थ र निषिद्ध पदार्थहरूका स्वामी हौ । तिमी समस्त प्राणीका शासक हौ ।

**ईङ्खयन्तीरपस्युव इन्द्रं जातमुपासते । भेजानासः सुवीर्यम् ॥४॥**

इन्द्रदेवताका नजिकै गएर उनको सेवा गर्ने, यज्ञ आदि सत्कर्म गर्नमा संलग्न रहेका माताहरूले उनैको उपासना तथा अर्चना गर्दछन् । उनैबाट श्रेष्ठ सुखप्रदायक धन प्राप्त गर्दछन् ।

**त्वमिन्द्र बलादधि सहसो जात ओजसः । त्वं वृषन् वृषेदसि ॥५॥**

हे बलप्रदायक इन्द्रदेवता ! तिमी शत्रुलाई पराजित गर्नमा समर्थ र धैर्यका लागि प्रख्यात छौ । तिमी सबैभन्दा सामर्थ्यशाली र र साधकहरूको कामना पूरा गराउने हौ ।

**त्वमिन्द्रासि वृत्रहा व्य१न्तरिक्षमतिरः । वउद् द्यामस्तभ्ना ओजसा ॥६॥**

हे इन्द्रदेवता ! तिमी वृत्रहन्ता र अन्तरिक्षलाई विस्तृत गराउने हौ । तिमीले आफ्ना सामर्थ्यले द्युलोक अथवा स्वर्गलोकलाई स्थायित्व प्रदान गरेका छौ ।

**त्वमिन्द्र सजोषसमर्कं बिभर्षि बाह्वोः । वज्रं शिशान ओजसा ॥७॥**

हे इन्द्रदेवता ! आफ्ना कार्यमा सहयोगी सखा सूर्यलाई तिमीले दुवै हातले अन्तरिक्षमा स्थापित गरेका छौ । तिमी आफ्ना सामर्थ्यले वज्रलाई तीक्ष्णता प्रदान गर्दछौ ।

**त्वमिन्द्राभिभूरसि विश्वा जातान्योजसा । स विश्वा भुव आभवः ॥८॥**

हे इन्द्रदेवता ! तिमी आफ्ना शक्तिले सबै प्राणीलाई नियन्त्रणमा राख्दछौ । समस्त स्थानहरूमा तिम्रो प्रभुत्व रहेको छ ।

## सूक्त– ९४

**ऋषि–** कृष्ण । **देवता–** इन्द्रबृहस्पति । **छन्द–** त्रिष्टुप्, जगती ।

**आ यात्विन्द्रः स्वपतिर्मदाय यो धर्मणा तूतुजानस्तुविष्मान् । प्रत्वक्षाणो अति विश्वा सहांस्यपारेण महता वृष्ण्येन ॥१॥**

शारीरिक दृष्टिले जो स्थूल छन् र जो आफ्ना विशाल तथा पराक्रमी सामर्थ्यले सम्पूर्ण शक्तिशाली पदार्थलाई शक्तिहीन गराइदिन्छन्, त्यस्ता ऐश्वर्यसम्पन्न इन्द्रदेवता रथमा आरुढ भई यहाँ आएपछि हर्ष प्राप्त गर्दछन् ।

**सुष्ठामा रथः सुयमा हरी ते मिम्यक्ष वज्रो नृपते गभस्तौ । शीभं राजन्त्सुपथा याह्यर्वाङ् वर्धाम ते पपुषो वृष्ण्यानि ॥२॥**

हे मानिसको पालनकर्ता इन्द्रदेवता ! तिम्रो रथ विशेष किसिमले बनाइएको छ । तिम्रा रथका दुवै

अश्व उचित किसिमले नियन्त्रित छन् र तिमी हातमा वज्र धारण गरेका छौ । हे अधिकारसम्पन्न इन्द्रदेवता ! यसरी सजिएका तिमी श्रेष्ठ मार्गबाट शीघ्रतापूर्वक हाम्रा निकट आऊ । सोमरस पान गर्न रुचाउने तिम्रो वीरतालाई हामी वृद्धि गराउँछौँ ।

**एन्द्रवाहो नृपतिं वज्रबाहुमुग्रमुग्रासस्तविषास एनम् । प्रत्वक्षसं वृषभं सत्यशुष्ममेमस्मत्रा सधमादो वहन्तु ॥३॥**

मानिसका पालक, हातमा वज्र धारण गरेका, शत्रुको सैन्यबल क्षीण गराउने, अभीष्टको वर्षा गराउने र सत्यनिष्ठ वीर इन्द्रदेवताको रथ वहन गर्ने, उग्र, बलिष्ठ तथा अत्यन्त उत्साहित अश्वले उनलाई हाम्रा नजिक लिएर आऊन् ।

**एवा पतिं द्रोणसाचं सचेतसमूर्ज स्कम्भं धरुण आ वृषायसे । ओजः कृष्व सं गृभाय त्वे अप्यसो यथा केनिपानामिनो वृधे ॥४॥**

हे इन्द्रदेवता ! जुन सोमरसले शरीर परिपुष्ट हुने गर्दछ, जो कलशमा मिश्रित रूपमा रहेकाले बल सञ्चालन गर्ने खालको बनेको छ, त्यसलाई तिमी आफ्ना पेटभित्र थन्क्याऊ र हाम्रो सामर्थ्यशक्तिमा वृद्धि गराऊ । हामीलाई तिमी आफ्नै आफन्त बनाऊ किनभने ज्ञानीहरूलाई धनसम्पदाले समृद्ध गराउने तिमी नै हौ ।

**गमन्नस्मे वसून्या हि शंसिषं स्वाशिषं भरमा याहि सोमिनः । त्वमीशिषे सास्मिन्ना सत्सि बर्हिष्यनाधृष्या तव पात्राणि धर्मणा ॥५॥**

हे इन्द्रदेवता ! हामी स्तोताहरूलाई तिमी मनग्गे सम्पदा प्रदान गर । सोमसहितका हाम्रा यज्ञमा शुभाशीर्वाद प्रदान गर्दै आऊ किनभने तिमी सबैका स्वामी हौ । तिमी हाम्रा यज्ञमा आएर कुशका आसनमा विराजमान होऊ । तिमीले सेवन गर्नका लागि सजाइएको सोमपात्रलाई बलपूर्वक खोस्ने सामर्थ्य कसैमा पनि छैन ।

**पृथक् प्रायन् प्रथमा दवहूतयोऽकृण्वत श्रवस्यानि दुष्टरा । न ये शेकुर्यज्ञियां नावमारुहमीर्मैव ते न्यविशन्त केपयः ॥६॥**

हे इन्द्रदेवता ! जुन मानिसहरू उहिलेदेखि नै देवताहरूलाई आमन्त्रित गर्दछन्, उनीहरूले यशस्वी तथा दुष्कर कार्य सम्पन्न गर्दै भिन्नभिन्न खालका देवलोक प्राप्त गरेका थिए; तर जसले यज्ञ र उपासनारूपी नौकामा आरुढ हुन पाएनन्, तिनीहरू दुष्कृत्यरूपी पापमा फँसे र ऋणका भारीले थिचिएर दुर्गतिग्रस्तु भएर ढलिरहेका हुन्छन् ।

**एवैवापागपरे सन्तु दूढ्योऽ श्वा येषां दुर्युज आयुयुज्रे । इत्था ये प्रागुपरे सन्ति दावने पुरूणि यत्र वयुनानि भोजना ॥७॥**

यस्ता समयमा जसले दुर्बुद्धिग्रस्त, यज्ञविरोधी मानिसहरू छन्, जसको जीवनरूपी रथमा पतनमार्गतर्फ घच्याउने खालका अश्व नारिएका छन् उनीहरू नै अधोगामी हुने गर्दछन्, उनीहरू नै नरकगामी हुने गर्दछन् । जुन मानिसले उहिलेदेखि नै देवताहरूका लागि हविष्यान्न समर्पित गर्नमा लागेका हुन्छन्, उनीहरू वास्तवमा स्वर्गधाम प्राप्त गर्दछन्; जहाँ प्रचुर मात्रामा आश्चर्यप्रद उपभोग्य वस्तुहरू उपलब्ध हुने गर्दछन् ।

**गिरीँरज्रान् रेजमानाँ अधारयद् द्यौः क्रन्ददन्तरिक्षाणि कोपयत् । समीचीने धिषणे वि ष्कभायति वृष्णः पीत्वा मद उक्थानि शंसति ॥८॥**

जुन समयमा इन्द्रदेवता सोमपान गरेर आनन्दित हुने गर्दछन्, त्यस बेला उनी सबैतिर घुमिरहेको र काँपिरहेको बादललाई सुस्थिर गराउँछन् । उनले आकाशलाई पनि विचलित गराउँछन्; त्यसो गरेपछि त्यसले गर्जना गर्न थाल्दछ । जुन द्युलोक र पृथ्वी एकापसमा सम्बद्ध छन्, उनलाई त्यसै स्थितिमा धारण गर्दै उनी उत्तम वचन उच्चारण गर्दछन् ।

**इमं बिभर्मि सुकृतं ते अङ्कुशं येनारुजासि मघवञ्छफारुजः । अस्मिन्त्सु ते सवने अस्त्वोक्यं सुत इष्टौ मघवन् बोध्याभगः ॥९॥**

हे ऐश्वर्यवान् इन्द्रदेवता ! तिम्रो यो श्रेष्ठ तरिकाले बनाइएको अङ्कुशलाई हामी धारण गर्दछौं । तिमी यसैले दुष्टजनलाई दण्डित गर्दछौ । तिमी हाम्रा यस सोमयज्ञमा आएर आफ्ना स्थानमा विराजमान होऊ । हे इन्द्रदेवता ! तिमी श्रेष्ठ तरिकाले सम्पन्न गरिएको सोमयज्ञमा आएर हाम्रो प्रार्थनामा ध्यान देऊ ।

**गोभिष्टरेमामतिं दुरेवां यवेन क्षुधं पुरुहूत विश्वाम् । वयं राजभिः प्रथमा धनान्यस्माकेन वृजनेना जयेम ॥१०॥**

हे धेरै तिरबाट बोलाइने गरेका इन्द्रदेवता ! तिम्रा कृपादृष्टिले हामी गाईरूपी धन प्राप्त गरेर त्यसैले दुःखदारिद्र्यबाट मुक्त हुन सकौँ र जौ आदि अन्नले भोक शान्त गरौँ । प्रशासकहरूका स्नेहपात्र बनेर आफ्नो क्षमताले विपुल सम्पदा पाऔँ र त्यसैले हामी अधिकार लिन सकौँ ।

**बृहस्पतिर्नः परि पातु पश्चादुतोत्तरस्मादधरादघायोः । इन्द्रः पुरस्तादुत मध्यतो नः सखा सखिभ्यो वरिवः कृणोतु ॥११॥**

दुष्कर्मी पापीहरूबाट बृहस्पतिदेवताले हामीलाई पश्चिम, उत्तर तथा दक्षिणका दिशाहरूमा संरक्षित गरून् । इन्द्रदेवताले पूर्व दिशा र मध्य भागमा आएर प्रहार गर्ने शत्रुबाट हामीलाई बचाऊन् । इन्द्रदेवता हाम्रा सखा हुन् र हामी पनि उनका मित्र हौं । उनी हाम्रो अभीष्ट पूर्तिमा सहायक होऊन् ।

## सूक्त– ९५

**ऋषि–** गृत्समद, सुदा पैजवन । **देवता–** इन्द्र । **छन्द–** अष्टि, शक्वरी ।

**त्रिकद्रुकेषु महिषो यवाशिरं तुविशुष्मस्तृपत् सोममपिबद् विष्णुना सुतं यथावशत् । स ईं ममाद महि कर्म कर्तवे महामुरुं सैनं सश्चद् देवो देवं सत्यमिन्द्रं सत्य इन्दुः ॥१॥**

अत्यन्त बलशाली, पूजनीय इन्द्रदेवताले तीनै लोकमा व्याप्त, तृप्तिदायक दिव्य सोमलाई जौको सातुसँग मिसाएर विष्णुदेवतासँगै मन लागेजति पान गरे । त्यस सोमले महान् इन्द्रदेवतालाई श्रेष्ठ कार्य गर्नका लागि प्रेरित गर्‍यो । उत्तम दिव्य गुणले युक्त त्यस दिव्य सोमरसले इन्द्रदेवतालाई प्रसन्न गरायो ।

**प्रो ष्वस्मै पुरोरथमिन्द्राय शूषमर्चत । अभीके चिदु लोककृत् संगे समत्सु वृत्रहास्माकं बोधि चोदिता नभन्तामन्यकेषां ज्याका अधि धन्वसु ॥२॥**

हे स्तोताहरू हो ! यी इन्द्रदेवताका रथका सम्मुखमा रहने गरेका बलका प्रतीक अश्वको उपासना गर । शत्रुसेनाले आक्रमण गरेका बेला यी लोकपाल र शत्रुनाशक इन्द्रदेवता नै प्रेरणाका आधार हुन्छन् भन्ने निश्चित कुरो जानौँ । शत्रुका धनुषको ताँदो चुँडियोस् भन्ने हामी कामना गर्दछौँ ।

**त्वं सिन्धूँरवासृजोऽधराचो अहन्नहिम् । अशत्रुरिन्द्र जज्ञिषे विश्वं पुष्यसि वार्यं तं त्वा परि ष्वजामहे नभन्तामन्यकेषां ज्याका अधि धन्वसु ॥३॥**

हे इन्द्रदेवता ! नदीका प्रवाहमा आउने अवरोधहरूलाई तिमी मेटाउँछौ र मेघलाई भत्काउँछौ शत्रुविहीन अवस्थामा रहेका तिमी नै सम्पूर्ण वरणीय पदार्थलाई पोषण प्रदान गर्दछौ । तिमीलाई हामी हविष्यान्न दिएर हर्षित गर्दछौँ । शत्रुका धनुषको ताँदो चुँडियोस् भन्ने हामी कामना गर्दछौँ ।

**वि षु विश्वा अरातयोऽर्यो नशन्त नो धियः । अस्तासि शत्रवे वधं यो न इन्द्र जिघांसति या ते रातिर्ददिर्वसु नभन्तामन्यकेषां ज्याका अधि धन्वसु ॥४॥**

हामीमाथि आक्रमण गर्ने शत्रु विनाश होऊन् । हे इन्द्रदेवता ! हामीमाथि घात गर्ने जघन्य दुष्टलाई तिमी नै शस्त्रले मार्दछौ । हाम्रो बुद्धि तिमीतिर प्रेरित होस् । तिमीले दान गरेको धन आदि हामीलाई प्राप्त होस् । शत्रुका धनुषको ताँदो चुँडियोस् भन्ने हामी कामना गर्दछौँ ।

**ऋषि–** पूरण, रक्षोहा, ब्रह्मा, प्रचेता । **देवता–** इन्द्र, इन्द्राग्नी, यक्ष्मनाशन,गर्भसंस्राव प्रायश्चित्त, यक्ष्मनाशन, दुःस्वप्नघ्न । **छन्द–** त्रिष्टुप्, शक्वरीगर्भा जगती, अनुष्टुप्, *ककुम्मती अनुष्टुप्, चतुष्पदा भुरिक् उष्णिक्, उपरिष्टात् विराट् बृहती उष्णिग्गर्भा* निचृत् अनुष्टुप्, पथ्यापङ्क्ति ।

**तीव्रस्याभिवयसो अस्य पाहि सर्वरथा वि हरी इह मुञ्च । इन्द्र मा त्वा यजमानासो अन्ये नि रीरमन् तुभ्यमिमे सुतासः ॥१॥**

हे इन्द्रदेवता ! तीव्र प्रभाव भएको यस सोमरसलाई तिमी सेवन गर । गतिशील रथमा जोतिएको अश्वलाई यहाँ आइपुगेर खोलिदेऊ । अन्य यजमानले तिमीलाई हर्षित गर्न नसकून् । हामीले नै स्वयं तिमीलाई सन्तुष्ट गरौँ । *तिम्रा लागि नै यो सोमरस पेलेर तयार पारिएको छ ।*

**तुभ्यं सुतास्तुभ्यमु सोत्वासस्त्वां गिरः श्वात्र्या आ ह्वयन्ति । इन्द्रेदमद्य सवनं जुषाणो विश्वस्य विद्वाँ इह पाहि सोमम् ॥२॥**

हे इन्द्रदेवता ! तिम्रा लागि नै यो सोमरस तयार पारिएको छ, यसपछि पनि तिम्रा लागि नै प्रस्तुत गरिनेछ । यी सबै खालका स्तुतिहरूले तिमीलाई नै आह्वान गर्दछन् । हे इन्द्रदेवता ! चाँडै उपस्थित भएर तिमी हाम्रा यस यज्ञमा सोमपान गर ।

**य उशता मनसा सोममस्मै सर्वहृदा देवकामः सुनोति । न गा इन्द्रस्तस्य परा ददाति प्रशस्तमिच्चारुमस्मै कृणोति ॥३॥**

जुन साधकले मनको भावनालाई पूर्ण रूपमा लगाएर इन्द्रदेवताका लागि सोमरस पेल्ने काम गर्दछन्, इन्द्रदेवताले उनीहरूका गाई आदिलाई पनि क्षीण हुन दिँदैनन् । उनीहरूलाई श्रेष्ठ र प्रशंसनीय ऐश्वर्य प्रदान गर्दछन् ।

**अनुस्पष्टो भवत्येषो अस्य यो अस्मै रेवान् न सुनोति सोमम् । निररत्नौ मघवा तं दधाति ब्रह्मद्विषो हन्त्यनानुदिष्टः ॥४॥**

जुन धनी मानिसहरू इन्द्रदेवताका लागि सोमरस प्रस्तुत गर्दछन्, उनलले तिनलाई प्रत्यक्ष रूपमा लाभ हुने अवसर प्रदान गर्दछन् । इन्द्रदेवताका आफ्नै भुजाले तिनलाई संरक्षण प्रदान गर्दछन् । उत्तम कर्मसित विद्वेष गर्नेहरूलाई कसैले नभने पनि इन्द्रदेवताले विनाश गरिदिन्छन् ।

**अश्वायन्तो गव्यन्तो वाजयन्तो हवामहे त्वोपगन्तवा उ । आभूषन्तस्ते सुमतौ नवायां वयमिन्द्र त्वा शुनं हुवेम ॥५॥**

हे सुखदाता इन्द्रदेवता ! अश्व, गाई र ऐश्वर्यको अभिलाषाले प्रेरित भएर हामी तिम्रो आगमनको प्रतीक्षा गर्दछौँ । तिम्रा लागि नवीन र श्रेष्ठ स्तोत्रको रचना गरेर तिमीलाई आह्वान गर्दछौँ ।

**मुञ्चामि त्वा हविषा जीवनाय कमज्ञातयक्ष्मादुत राजयक्ष्मात् । ग्राहिर्जग्राह यद्येतदेनं तस्या इन्द्राग्नी प्र मुमुक्तमेनम् ॥६॥**

हे रोगी ! यज्ञका हविर्द्रव्यले हामी तिमीलाई राजयक्ष्मा आदि अनेकौँ अज्ञात रोगबाट मुक्त गराउँछौँ । यसरी ग्रस्त गर्ने राक्षसरूपी व्याधीका कीटाणुहरूबाट हामीलाई इन्द्रदेवता र अग्निदेवताले मुक्त गराऊन् ।

**यदि क्षितायुर्यदि वा परेतो यदि मृत्योरन्तिकं नी त एव । तमा हरामि निर्ऋतेरुपस्थादस्पार्शमेनं शतशारदाय ॥७॥**

यदि यी रोगीहरूको आयु सकिँदै गएको हो भने, यदि यिनको मृत्यु नजिकिँदै आएको हो भने पनि हामी उनलाई निर्ऋति नामका मृत्युदेवताका नजिकबाट फिर्ता ल्याउन सक्दछौँ । हामीले रोगनिवारणको विद्या सिकेर यिनलाई छोएका छौँ । यसो भएपछि यिनीहरू सय वर्षसम्म जीवित रहनेछन् ।

सहस्राक्षेण शतवीर्येण शतायुषा हविषाहार्षमेनम् । इन्द्रो यथैनं शरदो नयात्यति विश्वस्य दुरितस्य पारम् ॥८॥

हजारौँ किसिमका आँखा, शयौँ किसिमको वीरताले सम्पन्न तथा सय वर्षको आयु बनाइदिने आहुति हामीले तिमीलाई प्रदान गरेका छौँ । त्यस्तै आहुतिले जीवनलाई सुरक्षित गरेको छ । सम्पूर्ण दुःखलाई निवारण गरेर इन्द्रदेवताले सय वर्षको आयु प्रदान गरून् ।

शतं जीव शरदो वर्धमानः शतं हेमन्ताञ्छतमु वसन्तान् । शतं त इन्द्रो अग्निः सविता बृहस्पतिः शतायुषा हविषाहार्षमेनम् ॥९॥

हे रोगबाट मुक्त भएका मानिस ! सधैँ नै वृद्धिशाली भएर तिमी एक सय वटा शरद्, एक सय वटा हेमन्त र एक सय वटा वसन्तसम्म सुखपूर्वक बाँचिराख । इन्द्रदेवता, अग्निदेवता, सवितादेवता र बृहस्पतिदेवताले हविष्यान्नद्वारा सन्तुष्ट भएर तिमीलाई सय वर्षसम्मका लागि जीवन बाँच्ने शक्ति प्रदान गरून् ।

आहार्षमविदं त्वा पुनरागाः पुनर्णवः । सर्वाङ्ग सर्वं ते चक्षुः सर्वमायुश्च तेऽविदम् ॥१०॥

हे रोगी मानिस ! हामी तिमीलाई मृत्युका नजिकबाट फिर्ता गरेर ल्याएका छौँ । यो तिम्रा लागि पुनर्जीवन हो । हे सर्वाङ्ग स्वस्थ मानिस ! तिमीहरूका लागि हामीले स्वस्थ आँखा र आयु हामीले उपलब्ध गरेका छौँ ।

ब्रह्मणाग्निः संविदानो रक्षोहा बाधतामितः । अमीवा यस्ते गर्भं दुर्णामा योनिमाशये ॥११॥

हाम्रा स्तोत्रले प्रसन्न भएर अग्निदेवताले शरीरका सबै खालका रोग आदि बाधाहरूलाई निवारण गरिदिऊन् । हे नारी ! तिम्रा शरीरमा जेजति विकार र विकृतिहरू देखिएका वा नदेखिएका अवस्थामा छन्, ती सबैलाई अग्निदेवताले पर हटाइदिऊन् ।

यस्ते गर्भममीवा दुर्णामा योनिमाशये । अग्निष्टं ब्रह्मणा सह निष्क्रव्यादमनीनशत् ॥१२॥

हे नारी ! रोगरूपी असुरहरू जुनजुनले तिमीलाई पीडित गरेका छन् र तिम्रो सृजन एवं धारण गर्ने क्षमतालाई विनाश गरेका छन्, अग्निदेवताले ती सबैलाई समाप्त गरिदिऊन् भनेर हामी उनको स्तुति गर्दछौँ ।

यस्ते हन्ति पतयन्तं निषत्स्नुं यः सरीसृपम् । जातं यस्ते जिघांसति तमितो नाशयामसि ॥१३॥

हे स्त्री ! विभिन्न रोगका रूपमा जेजति पैशाचिक शक्तिहरू तिम्रा गर्भलाई दुःख दिन खोज्दछन्, जसले तिम्रा सन्तानलाई दुःख दिने गर्दछन्, ती सबैलाई अग्निदेवताले तिमीबाट धेरै पर पुऱ्याइदिनेछन् ।

यस्त ऊरू विहरत्यन्तरा दम्पती शये । योनिं यो अन्तरारेढिह तमितो नाशयामसि ॥१४॥

हे नारी ! जानेर वा नजानीकन तिम्रा शरीरभित्र जेजस्ता विकारविकृतिहरू प्रवेश गरिसेकका छन् र तिम्रा सन्तानलाई नष्ट गर्न चाहन्छन्, ती सबैलाई नै अग्निदेवताले विनाश गरिदिऊन् ।

यस्त्वा भ्राता पतिर्भूत्वा जारो भूत्वा निपद्यते । प्रजां यस्ते जिघांसति तमितो नाशयामसि ॥१५॥

हे स्त्री ! जुन रोगहरू दाजुभाइ वा पति वा उपपतिका रूपमा छलपूर्वक आउँछन् र तिम्रा सन्तानहरूलाई विनाश गर्ने विचार गर्दछन् ती सबैलाई अग्निदेवताले विनाश गरिदिऊन् ।

यस्त्वा स्वप्नेन तमसा मोहयित्वा निपद्यते । प्रजां यस्ते जिघांसति तमितो नाशयामसि ॥१६॥

हे नारी ! जुन रोगहरू स्वप्नका रूपमा र निदाएका अवस्थामा तिमीलाई मोहित पारेर वा लट्याएर नजिक आउँछन् र जसले तिम्रा सन्तानलाई विनाश गर्न खोजेका हुन्छन्, ती सबैलाई हामी विनाश गरिदिन्छौँ ।

**अक्षीभ्यां ते नासिकाभ्यां कर्णाभ्यां छुबुकादधि । यक्ष्मं शीर्षण्यं मस्तिष्काज्जिह्वाया वि वृहामि ते ॥१७॥**

हे रोगी ! तिम्रा दुवै आँखा, दुवै कान, नाकका दुवै प्वाल, चिउँडो, टाउको, निधार र जिब्राबाट हामी रोगलाई पर हटाइदिन्छौं ।

**ग्रीवाभ्यस्त उष्णिहाभ्यः कीकसाभ्यो अनूक्यात् । यक्ष्मं दोषण्य१मंसाभ्यां बाहुभ्यां वि वृहामि ते ॥१८॥**

हे रोगी ! तिम्रा गर्धनबाट, छाला-नसाबाट, हड्डीबाट, जोर्नीहरूबाट, काँधबाट, पाखुराबाट र भित्री अङ्गप्रत्यङ्गबाट यक्ष्म आदि रोगलाई निवारण गर्दछौं ।

**हृदयात् ते परि क्लोम्नो हलीक्ष्णत् पार्श्वाभ्याम् । यक्ष्मं मनस्नाभ्या प्लीह्नो यक्नस्ते वि वृहामसि ॥१९॥**

हे रोगी मानिस ! हामी तिम्रा मुटु, फोक्सो, ग्रन्थिहरू, पित्तथैली, दुवै कोखाका मिर्गौला, कलेजो आदिबाट रोग हटाइदिन्छौं ।

**आन्त्रेभ्यस्ते गुदाभ्यो वनिष्ठोरुदरादधि । यक्ष्मं कुक्षिभ्यां प्लाशेर्नाभ्या वि वृहामि ते ॥२०॥**

तिम्रो आँत, गुदा, नाडी, हृदयस्थान, मूत्राशय, यकृत् र अन्यान्य पाचनतन्त्रका अवयवहरूबाट हामी तिम्रो रोग निवारण गर्दछौं ।

**ऊरुभ्यां ते अष्ठवद्भ्यां पार्ष्णिभ्यां प्रपदाभ्याम् यक्ष्मं भसद्यं१ श्रोणिभ्यां भासदं भंससो वि वृहामि ते ॥२१॥**

हे रोगी मानिस ! तिम्रा दुवै तिघ्रा, घुँडा, कुर्कुच्चा, हत्केला, नितम्ब भाग, कम्मर गुदद्वारबाट हामी यक्ष्म आदि रोगलाई निवारण गर्दछौं ।

**अस्थिभ्यस्ते मज्जभ्यः स्नावभ्यो धमनिभ्यः । यक्ष्मं पाणिभ्यामङ्गुलिभ्यो नखेभ्यो वि वृहामि ते ॥२२॥**

हे रोगी मानिस ! तिम्रो अस्थि, मज्जा, नाडी र शरीरका प्रत्येक सन्धिभागमा जहाँजहाँ रोगको निवास छ, त्यहाँबाट रोगलाई भगाउँछौं ।

**अङ्गे अङ्गे लोम्निलोम्नि यस्ते पर्वणिपर्वणि । यक्ष्मं त्वचस्यं ते वयं कश्यपस्य वीबर्हेण विष्वञ्चं वि वृहामसि ॥२३॥**

शरीरका प्रत्येक अङ्ग, रौं, रौँका छिद्र, शरीरका सबै जोर्नी आदि जुनजुन ठाउँमा रोगको प्रभाव परेको छ, ती सबै स्थानमा हामी त्यस्ता रोग निवारण गर्दछौं ।

**अपेहि नमसस्पतेऽ प क्राम परश्चर । परो निर्ऋत्या आ चक्ष्व बहुधा जीवतो मनः ॥२४॥**

हे दुःस्वप्न ! तिमीले हाम्रा मनलाई आफ्ना अधीनमा बनाइसकेका छौ । तिमी यहाँबाट पर भाग । दूर देशमा गएर आफ्नो इच्छाअनुसार विचरण गर । निर्ऋति देवता यहाँबाट धेरै पर बसेका छन् । जीवित मानिसको मनोरथ विस्तृत हुने गर्दछ, त्यसैले त्यस्ता मानिसका रहरलाई विनाश गर्ने दुःस्वप्नहरूलाई विनाश गरिदेऊ भन्ने कुरो उनीसित गएर भन ।

## सूक्त— ९७

**ऋषि—** कलि । **देवता—** इन्द्र । **छन्द—** प्रगाथ, वृशती ।

**वयमेनमिदा ह्योपीपेमेह वज्रिणम् । तस्मा उ अद्य समना सुतं भरा नूनं भूषत श्रुते ॥१॥**

हामी याजकहरूले इन्द्रदेवतालाई हिजो सोमरसले तृप्त गराएका थियौं । उनलाई आजका यज्ञमा पनि समर्पण गर्दछौं । हे याजक हो ! अब स्तोत्र गाएर इन्द्रदेवतालाई विभूषित गराओ ।

**वृकश्चिदस्य वारण उरामथिरा वयुनेषु भूषति । सेमं न स्तोमं जुजुषाण आ गहीन्द्र प्र चित्रया धिया ॥२॥**

व्वाँसाजस्ता क्रूर शत्रु पनि इन्द्रदेवताका नजिकमा अनुकूल हुन पुग्दछन् । इन्द्रदेवताले हाम्रो प्रार्थना स्वीकार गर्दै हामीलाई उत्कृष्ट चिन्तन, विवेक र बुद्धि प्रदान गरून् ।

**कदू न्व१स्याकृतमिन्द्रस्यास्ति पौंस्यम् । केनो नु कं श्रोमतेन न शुश्रुवे जनुषः परि वृत्रहा ॥३॥**

इन्द्रदेवताले प्रभावित नगरेको त्यस्तो व्यक्ति को होला ? इन्द्रदेवताको वीरताको गाथा कसले सुनेको छैन होला ? वृत्रलाई संहार गर्ने इन्द्रदेवता बालक कालदेखि नै विख्यात छन् ।

## सूक्त— ९८

**ऋषि—** शंयु । **देवता—** इन्द्र । **छन्द—** प्रगाथ ।

**त्वामिद्धि हवामहे साता वाजस्य कारवः । त्वां वृत्रेष्विन्द्र सत्पतिं नरस्त्वां काष्ठास्वर्वतः ॥१॥**

हे इन्द्रदेवता ! हामी स्तोताहरू अन्न आदि प्राप्त गर्ने कामनाले तिमीलाई आह्वान गर्दछौँ । तिमी सज्जनका रक्षक हौ । शत्रुलाई जित्नका लागि तिमीलाई आह्वान गर्दछौँ ।

**स त्वं नश्चित्र वज्रहस्त धृष्णुया मह स्तवानो अद्रिवः । गामश्वं रथ्यमिन्द्र सं किर सत्रा वाजं न जिग्युषे ॥२॥**

विपुल पराक्रमी, वज्रधारी, बल धारण गरेका हे इन्द्रदेवता ! आफ्नो असुरविजयी शक्तिले महान भएका तिमी हाम्रो स्तुतिले प्रसन्न भएर हामी साधकलाई पशुधन र ऐश्वर्य प्रदान गर ।

## सूक्त— ९९

**ऋषि—** मेध्यातिथि । **देवता—** इन्द्र । **छन्द—** प्रगाथ ।

**अभि त्वा पुर्वपीतय इन्द्र स्तोमेभिरायवः । समीचीनास ऋभवः समस्वरन् रुद्रा गृणन्त पूर्व्यम् ॥१॥**

हे इन्द्रदेवता ! प्राचीन कालदेखि नै ऋभुगण तथा रुद्रगणले तिम्रो स्तुति गर्दै आएका छन् । याजकहरू स्तुति गर्दै सोमपान गर्नका लागि सर्वप्रथम तिमीलाई नै बोलाउने गर्दछन् ।

**अस्येदिन्द्रो वावृधे वृष्ण्यं शवो मदे सुतस्य विष्णवि । अद्या तमस्य महिमानमायवोऽनु ष्टुवन्ति पूर्वथा ॥२॥**

इन्द्रदेवता सोमरस सेवन गरेर अत्यधिक आनन्दित हुन्छन् र यजमानको बल र पराक्रम बढाउँछन् । त्यसैले स्तोतागण आज पनि उनको महिमा बयान गर्दछन् ।

## सूक्त— १००

**ऋषि—** नृमेध । **देवता—** इन्द्र । **छन्द—** उष्णिक् ।

**अधा हीन्द्र गिर्वण उप त्वा कामान् महः ससृज्महे । उदेव यन्त उदभिः ॥१॥**

स्तोत्रले पूजा गरिएका हे इन्द्रदेवता ! तिम्रा सामु हामी साह्रै ठुलठुला कामना लिएर उसै किसिमले आउँछौँ, जसरी जल स्वभावतः उसको भण्डारका रूपमा रहेका नाला, नदी र समुद्रतर्फ प्रवाहित हुने गर्दछ ।

**वार्ण त्वा यव्याभिर्वर्धन्ति शूर ब्रह्माणि । वावृधवांसं चिदद्रिवो दिवेदिवे ॥२॥**

वज्र धारण गरेका, शूरवीर हे इन्द्रदेवता ! जसरी नदीका पानीले समुद्रको गरिमा बढ्ने गर्दछ, उसै गरी हामी आफ्नो स्तुतिले तिम्रो महिमा विस्तार गराउँछौँ ।

**युञ्जन्ति हरी इषिरस्य गाथयोरौ रथ उरुयुगे । इन्द्रवाहा वचोयुजा ॥३॥**

गमनशील इन्द्रदेवताको महान् रथमा सङ्केत गर्नासाथ दुई वटा श्रेष्ठ घोडाहरू नारिने गर्दछन् स्तोताहरू तिनलाई स्तोत्रले नै नार्ने गर्दछन् ।

## सूक्त— १०१

**ऋषि—** मेध्यातिथि । **देवता—** अग्नि । **छन्द—** गायत्री ।

**अग्निं दूतं वृणीमहे होतारं विश्ववेदसम् । अस्य यज्ञस्य सुक्रतुम् ॥१॥**

हे सर्वज्ञाता अग्निदेवता ! तिमी यज्ञका विशेषज्ञ हौ । समस्त देवशक्तिलाई सन्तुष्ट गर्ने सामर्थ्य तिमीमा छ । तिमी यज्ञको विधि र व्यवस्थाका स्वामी हौ । यस्ता समर्थ भएकाले हामीले

देवदूतका रूपमा तिमीलाई स्वीकार गरेका छौं ।

**अग्निमग्निं हवीमभिः सदा हवन्त विश्पतिम् । हव्यवाहं पुरुप्रियम् ॥२॥**

प्रजापालक, देवताहरूकहाँ हवि पुऱ्याउने, परमप्रिय, कुशल नेतृत्व प्रदान गर्ने हे अग्निदेवता ! हामी याजकहरू हवनीय मन्त्रले तिमीलाई सधैँ बोलाउने गर्दछौँ ।

**अग्ने देवाँ इहा वह जज्ञानो वृक्तबर्हिषे । असि होता न ईड्यः ॥३॥**

हे स्तुति गर्न योग्य अग्निदेवता ! तिमी अरणी मन्थनबाट उत्पन्न भएका हौ । विस्तृत कुशमा बसेका यजमानमाथि अनुग्रह गर्नका लागि तिमी यज्ञको हवि ग्रहण गर्ने देवताहरूलाई यस यज्ञमा बोलाऊ ।

## सूक्त— १०२

**ऋषि—** विश्वामित्र । **देवता—** अग्नि । **छन्द—** गायत्री ।

**ईडेन्यो नमस्य स्तिरस्तमांसि दर्शतः । समग्निरिध्यते वृषा ॥१॥**

स्तुत्य, प्रणाम गर्न योग्य, अन्धकार नाशक, दर्शनीय र शक्तिशाली हे अग्निदेवता ! तिमीलाई आहुतिले उचित किसिमले प्रज्वलित तथा संवर्द्धित गर्दछौँ ।

**वृषो अग्निः समिध्यतेऽश्वो न देववाहनः । तं हविष्मन्त ईडते ॥२॥**

बलशाली अश्वले जसरी राजाको वाहन तानेर लैजान्छन्, उसै गरी अग्निदेवताले देवताहरूकहाँ हवि पुऱ्याउँछन् । उत्तम किसिमले प्रदीप्त अग्निदेवताले यजमानको स्तुति प्राप्त गर्दछन् ।

**वृषणं त्वा वयं वृषन् वृषणः समिधीमहि । अग्ने दीद्यतं बृहत् ॥३॥**

हे अग्निदेवता ! घिउ आदिले युक्त हवि प्रदान गर्ने शक्तिशाली, तेजस्वी र महान् हुनाले तिमीलाई हामी प्रदीप्त गराउँछौँ ।

## सूक्त— १०३

**ऋषि—** सुदीति र पुरुमीढ, भर्ग । **देवता—** अग्नि । **छन्द—** बृहती, प्रगाथ ।

**अग्निमीडिष्वावसे गाथाभिः शीरशोचिषम् । अग्निं राये पुरुमीढह श्रुतं नरोऽग्निं सुदीतये छर्दिः ॥१॥**

हे स्तोताहरू हो ! विस्तृत विकराल ज्वाला भएका अग्निदेवतालाई स्तुति गर । उद्गाताहरू उनै प्रसिद्ध अग्निदेवतासित धन र श्रेष्ठ प्रकाशयुक्त आवास प्राप्त गर्नका लागि प्रार्थना गर्दछन् ।

**अग्न आ याह्यग्निभिर्होतारं त्वा वृणीमहे । आ त्वामनक्तु प्रयता हविष्मती यजिष्ठं बर्हिरासदे ॥२॥**

हे अग्निदेवता ! तिमी देवताहरूलाई बोलाउँछौ । हाम्रो प्रार्थना सुनेर आफ्नो अग्निरूपी विशिष्ट शक्तिसहित यहाँ आऊ । हे पूज्य अग्निदेवता ! अध्वर्युहरूले प्रदान गरेको आसनमा तिमी प्रतिष्ठित भएपछि हामी तिम्रो पूजा गर्दछौँ ।

**अच्छा हि त्वा सहसः सूनो अङ्गिरः स्रुचश्चरन्त्यध्वरे । ऊर्जो नपातं घृतकेशमीमहेऽग्निं यज्ञेषु पूर्व्यम् ॥३॥**

बलबाट उत्पन्न सर्वत्र गमनशील हे अग्निदेवता ! तिमीसम्म हविष्यान्न पुऱ्याउनका लागि यो हविपात्र सक्रिय रहेको छ । ह्रास हुनबाट शक्तिलाई जोगाउने, अभीष्ट प्रदान गराउने, तेजस्वी, ज्वालाहरूले युक्त तिमीलाई हामी यज्ञस्थलमा प्रार्थना गर्दछौँ ।

## सूक्त— १०४

**ऋषि—** मेध्यातिथि, नृमेध । **देवता—** इन्द्र । **छन्द—** प्रगाथ ।

**इमा उ त्वा पुरूवसो गिरो वर्धन्तु या मम । पावकवर्णाः शुचयो विपश्चितोऽभि स्तोमैरनूषत ॥१॥**

हे ऐश्वर्यवान् इन्द्रदेवता ! हाम्रा स्तुतिले तिम्रो कीर्ति बढाओस् । अग्निको जस्तै प्रखर पवित्रात्मा र विद्वान् साधकहरूले स्तोत्र गाएर तिम्रो प्रार्थना गर्दछन् ।

**अयं सहस्रमृषिभिः सहस्कृतः समुद्र इव पप्रथे । सत्यः सो अस्य महिमा गृणे शवो यज्ञेषु विप्रराज्ये ॥२॥**

यी इन्द्रदेवता हजारौं ऋषिका स्तुतिको बल पाएर प्रख्यात र समुद्रजस्तै विस्तृत भएका छन् । यिनको सत्यनिष्ठा र शक्ति प्रसिद्ध छ । यज्ञमा स्तोत्र गाउँदै यिनलाई सम्मान गरिन्छ ।

**आ नो विश्वासु हव्य इन्द्रः समत्सु भूषतु । उप ब्रह्माणि सवनानि वृत्रहा परमज्या ऋचीषमः ॥३॥**

सङ्ग्राममा रक्षा गर्नका लागि बोलाउन योग्य, वृत्रहन्ता, धनुषको श्रेष्ठ प्रत्यञ्चाजस्तै, उत्तम मन्त्रले स्तुति गर्न योग्य हे इन्द्रदेवता ! हाम्रा यज्ञको तीनै सवन एवं तिनका स्तोत्रले तिमीलाई सुशोभित गराऊन् ।

**त्वं दाता प्रथमो राधसामस्यसि सत्य ईशानकृत् । तुविद्युम्नस्य युज्या वृणीमहे पुत्रस्य शवसो महः ॥४॥**

हे इन्द्रदेवता ! तिमी सबैभन्दा पहिले त धन प्रदाता हौ, ऐश्वर्य प्रदाता हौ । हामी तिमीबाट पराक्रमी एवं श्रेष्ठ सन्तानको कामना गर्दछौँ ।

## सूक्त– १०५

**ऋषि–** नृमेध, पुरुहन्मा । **देवता–** इन्द्र । **छन्द–** प्रगाथ, बृहती ।

**त्वमिन्द्र प्रतूर्तिष्वभि विश्वा असि स्पृधः । अशस्तिहा जनिता विश्वतूरसि त्वं तूर्य तरुष्यतः ॥१॥**

हे इन्द्रदेवता ! तिमी सङ्ग्राममा शत्रुलाई पराजित गराउने खालका छौ । सबैका जन्मदाता तिमी नै हौ र पालन नगर्ने असुरहरू विनाश गर्ने पनि तिमी नै हौ ।

**अनु ते शुष्मं तुरयन्तमीयतुः क्षोणी शिशुं न मातरा । विश्वास्ते स्पृधः श्नथयन्त मन्यवे वृत्रं यदिन्द्र तूर्वसि ॥२॥**

हे इन्द्रदेवता ! जसरी मातापिता आफ्ना शिशुको रक्षा गर्न हरदम तयार रहन्छन् आकाश र पृथ्वी उसै गरी शत्रुसंहार गर्ने तिम्रो बलका संरक्षक भएका छन् । जब तिमी वृत्रासुरको वध गर्दछौ, त्यस बेला तिम्रा क्रोधका सामु युद्ध गर्न तयार भएको शत्रुको पक्ष कमजोर हुन पुग्दछ ।

**इत ऊती वो अजरं प्रहेतारमप्रहितम् । आशुं जेतारं हेतारं रथीतममतूर्तं तुग्र्यावृधम् ॥३॥**

हे साधकहरू हो ! शत्रुसंहारक, सर्वप्रेरक, वेगवान्, यज्ञस्थलमा जाने गरेका, उत्तम रथमा बस्ने, अहिंसनीय, जलको वर्षा गराउने तथा अजरअमर इन्द्रदेवतालाई आफ्ना संरक्षकणका लागि आह्वान गर ।

**यो राजा चर्षणीनां याता रथेभिरध्रिगुः विश्वासां तरुता पृतनानां ज्येष्ठो यो वृत्रहा गृणे ॥४॥**

मानिसका अधिपति, वेगवान्, शत्रुसेनाका संहारक, वृत्रहन्ता, श्रेष्ठ इन्द्रदेवतालाई हामी स्तुति गर्दछौँ ।

**इन्द्रं तं शुम्भ पुरुहन्मन्नवसे यस्य द्विता विधर्तरि । हस्ताय वज्रः प्रति धायि दर्शतो महो दिवे न सूर्यः ॥५॥**

हे साधकहरू हो ! आफ्नो रक्षका लागि देवराज इन्द्रको उपासना गर । जसका संरक्षणमा देवत्वको रक्षा एवं असुरताको विनाश गर्ने दोहोरो शक्ति छ, उनै इन्द्रेदवता सूर्यको जस्तै तेज भएको वज्र हातमा धारण गर्दछन् ।

## सूक्त– १०६

**ऋषि–** गोषूक्ति, अश्वसूक्ति । **देवता–** इन्द्र । **छन्द–** उष्णिक् ।

**तव त्यदिन्द्रियं बृहत् तव शुष्ममुत क्रतुम् । वज्रं शिशाति धिषणा वरेण्यम् ॥१॥**

हे इन्द्र ! हाम्रा प्रार्थनाले तिम्रो शौर्य, सामर्थ्य, कुशलता, पराक्रम र श्रेष्ठ वज्रलाई तेजस्वी बनाउँछ ।

**तव द्यौरिन्द्र पौंस्यं पृथिवी वर्धति श्रवः । त्वामापः पर्वतासश्च हिन्विरे ॥२॥**

हे इन्द्रदेवता ! अन्तरिक्षबाट तिम्रो शक्तिसामर्थ्यको र पृथ्वीबाट तिम्रा यशस्वी स्वरूपको विस्तार हुने गरेको छ । जलको प्रवाह र पर्वत तिमीलाई आफ्नो अधिपति मानेर तिम्रा नजिकै पुग्ने गर्दछन् ।

**त्वां विष्णुर्बृहन् क्षयो मित्रो गृणाति वरुणः । त्वां शर्धो मदत्यनु मारुतम् ॥३॥**

हे इन्द्रदेवता ! महान् आश्रयदाता मानेर विष्णु, मित्र र वरुण आदि देवताले तिम्रो स्तुति गाउने गर्दछन् । मरुत्हरूका बलले तिमी हर्षित हुने गर्दछौ ।

## सूक्त– १०७

**ऋषि–** वत्स, बृहद्दिव, अथर्व, ब्रह्मा, कुत्स । **देवता–** इन्द्र, सूर्य । **छन्द–** गायत्री, त्रिष्टुप्, भुरिक् परातिजागता त्रिष्टुप्, आर्षी पङ्क्ति ।

**समस्य मन्यवे विशो विश्वा नमन्त कृष्टयः । समुद्रायेव सिन्धवः ॥१॥**

समस्त प्रजाहरू उग्र इन्द्रदेवतालाई नमस्कार गर्दै उनीतर्फ उसरी नै आकर्षित हुन्छन्, जसरी सिन्धु आदि सबै नदीहरू समुद्रमा मिसिनका लागि वेगपूर्वक कुदेका हुन्छन् ।

**ओजस्तदस्य तित्विष उभे यत् समवर्तयत् । इन्द्रश्चर्मेव रोदसी ॥२॥**

इन्द्रदेवताको त्यो ओजयुक्त बल अत्यन्त प्रभावशाली छ, जसले उनी द्युलोकदेखि पृथ्वीलोकसम्म आवरणजस्तै भएर फैलिएर सुरक्षा गर्दछन् ।

**वि चिद् वृत्रस्य दोधतो वज्रेण शतपर्वणा । शिरो बिभेद वृष्णिना ॥३॥**

संसारलाई भयभीत तथा कम्पित गराउने वृत्रासुरको शिरलाई शक्तिसम्पन्न इन्द्रदेवताले आफ्ना तीक्ष्ण प्रहारयुक्त वज्रले हानेर छुट्याइदिए ।

**तदिदास भुवनेषु ज्येष्ठं यतो जज्ञ उग्रस्त्वेषनृम्णः । सद्यो जज्ञानो नि रिणाति शत्रूननु यदेनं मदन्ति विश्व ऊमाः ॥४॥**

संसारको कारणभूत ब्रह्म स्वयं नै सबै लोकहरूका प्रकाशका रुमपा व्याप्त रहेका छन् र त्यसबाट प्रचण्ड तेजस्वी बलले युक्त इन्द्रदेवता प्रकट भए । जुन इन्द्रदेवता प्रकट हुनासाथ सबै शत्रुहरू नष्ट हुन्छन्, उनलाई देखेपछि सबै प्राणीहरू नै हर्षित हुने गर्दछन् ।

**वावृधानः शवसा भूर्योजाः शत्रुर्दासाय भियसं दधाति । अव्यनच्च व्यनच्च सस्नि सं ते नवन्त प्रभृता मदेषु ॥५॥**

आफ्ना सामर्थ्यले वृद्धि प्राप्त गरेका अनन्त शक्तिले युक्त, दुष्टका शत्रु इन्द्रदेवता शत्रुका अन्तःकरणमा भय उत्पन्न गराउँछन् । उनले सबै चरअचर प्राणीलाई सञ्चालन गर्दछन् । यस्ता देवतालाई हामी याजकहरू एकत्रित भएर एकै साथमा स्तुति गर्दै उनलाई र आफूलाई पनि आनन्दित बनाउँछौं ।

**त्वे क्रतुमपि पृञ्चन्ति भूरि द्विर्यदेते त्रिर्भवन्त्यूमाः । स्वादोः स्वादीयः स्वादुना सृजा समदः सु मधु मधुनाभि योधीः ॥६॥**

हे इन्द्रदेवता ! सबै यजमान तिम्रै लागि अनुष्ठान गर्दछन् । जब यजमान विवाहपछि दुई हुन्छन् र त्यसपछि एक सन्तान भएर तीन जना हुन्छन्, त्यस बेला प्रिय लाग्ने सन्तानलाई प्रिय धन वा प्रिय गुणले सम्पन्न बनाऊ । त्यसपछि यस प्रिय सन्तानलाई पनि पुत्रपौत्रादि प्रदान गरेर मधुरताले युक्त गराऊ ।

**यदि चिन्नु त्वा धना जयन्तं रणेरणे अनुमदन्ति विप्राः । ओजीयः शुष्मिन्त्स्थिरमा तनुष्व मा त्वा दभन् दुरेवासः कशोकाः ॥७॥**

कहिल्यै पराजित नहुने हे इन्द्रदेवता ! युद्धमा तिमी सधैं आफ्ना पराक्रमले धनसम्पदामाथि विजय प्राप्त गर्दछौ । ब्रह्मनिष्ठ साधक या याजकहरू यस्ता अवसरमा तिमीलाई स्तुति गर्दछन् । तिमी स्तोतालाई तेजस्विता प्रदान गर । दुस्साहसी असुरले तिमीलाई जित्न नसकोस् ।

**त्वया वयं शाशद्महे रणेषु प्रपश्यन्तो युधेन्यानि भूरि । चोदयामि त आयुधा वचोभिः सं ते शिशामि ब्रह्मणा वयांसि ॥८॥**

हे इन्द्रदेवता ! तिम्रा सहयोगले हामी रणभूमिमा दुष्ट शत्रुमाथि विजय प्राप्त गर्दछौं । युद्धको इच्छाले प्रेरित अनेकौं शत्रुमाथि हामी दृष्टि राख्दछौं । तिम्रा वज्र आदि आयुधलाई हामी स्तोत्रले प्रोत्साहित गर्दछौं । स्तुतिमन्त्रले हामी तिम्रो तेजस्वितालाई अझै तीक्ष्ण गराउँछौं ।

**नि तद् दधिषेऽवरे परे च यस्मिन्नाविथावसा दुरोणे । आ स्थापयत मातरं जिगत्नुमत इन्वत कर्वराणि भूरि ॥८॥**

हे इन्द्रदेवता ! तिमी जुन यजमानका घरमा हविरूपी अन्नले सन्तुष्ट हुन्छौ उसलाई दिव्य र भौतिक सम्पदा पनि प्रदान गर्दछौ । समस्त प्राणीका सृष्टिकर्ता, गतिशील, द्युलोक र पृथ्वीलाई तिमीले नै अड्याएका छौ । त्यस अवस्थामा तिमीलाई अनेकौं कार्य निर्वाह गर्नुपरेको हुन्छ ।

**स्तुष्व वर्ष्मन् पुरुवर्त्मानं समृभ्वाणमिनतममाप्तमाप्त्यानाम् । आ दर्शति शवसा भूर्योजाः प्र सक्षति प्रतिमानं पृथिव्याः ॥१०॥**

स्तुति गर्न योग्य, विभिन्न स्वरूप भएको, दीप्तिमान्, सर्वेश्वर र सर्वश्रेष्ठ इन्द्रदेवतालाई हामी स्तुति गर्दछौं । उनले आफ्ना सामर्थ्यले आसुरी वृत्तिको विनाश गरून् र पृथ्वीमाथि यज्ञीय कर्मका मर्यादाहरूलाई प्रतिष्ठित गराऊन् ।

**इमा ब्रह्म बृहद्दिवः कृणवदिन्द्राय शूषमग्रियः स्वर्षाः । महो गोत्रस्य क्षयति स्वराजा तुरश्चिद् विश्वमर्णवत् तपस्वान् ॥११॥**

ऋषिहरूमा श्रेष्ठ र स्वर्गलोकको आकाङ्क्षा भएका बृहद् आकाशसम्म गति भएका बृहद्दिव नामका ऋषिले इन्द्रदेवतालाई सुख प्रदान गर्नका लागि नै यी वैदिक मन्त्रको पाठ गरेका छन् । उनै तेजस्वी, दीप्तिमान् इन्द्रदेवता विशाल पर्वतले उत्पन्न गरेको अवरोध हटाउँछन् र शत्रुका सहरहरूका सबैतिरका ढोकाहरू खोल्ने गर्दछन् ।

**एवा महान् बशृहद्दिवो अथर्वावोचत् स्वां तन्व१मिन्द्रमेव । स्वसारौ मातरिभ्वरी अरिप्रे हिन्वन्ति चैने शवसा वर्धयन्ति च ॥१२॥**

अथर्वा ऋषिका पुत्र महाप्राज्ञ बृहद्दिवले इन्द्रदेवताका लागि आफ्ना बृहत् स्तुतिहरूलाई उच्चारण गरे । माताजस्तै भूमिमाथि उत्पन्न भएका पवित्र नदीहरू, आपसमा दिदीबहिनीझैं भएर स्नेहपूर्वक जल प्रवाहित गराउँछन् र अन्नबलले मानिसलाई कल्याण गर्ने गर्दछन् ।

**चित्रं देवानां केतुरनीकं ज्योतिष्मान् प्रदिशः सूर्य उद्यन् । दिवाकरोऽति द्युम्नैस्तमांसि विश्वातारीद् दुरितानि शुक्रः ॥१३॥**

वीर, पराक्रमी, पूजनीय, तेजस्वी प्रकाशका किरणले युक्त, सबै दिशाहरूलाई प्रकाशित गराउने र अन्धकारलाई पर हटाउने सूर्यरूपी इन्द्रदेवताले समस्त पापलाई विनाश गरिदिनेछन् ।

**चित्रं देवानामुदगादनीकं चक्षुर्मित्रस्य वरुणस्याग्नेः । आप्राद् द्यावापृथिवी अन्तरिक्षं सूर्य आत्मा जगतस्तस्थुषश्च ॥१४॥**

स्थावरजङ्गम जगत्का आत्माको रूपमा रहेका सूर्यदेवता, दैवी शक्तिका अद्भुत तेजको समूह लिएर उदाएका छन् । मित्र, वरुण आदिको चक्षुका रूपमा रहेर यी सूर्यदेवताले उदाउनासाथ द्युलोक, पृथ्वीलोक र अन्तरिक्षलाई आफ्नै तेजले भरिपूर्ण गराएका छन् ।

**सूर्यो देवीमुषसं रोचमानां मर्यो न योषामभ्येति पश्चात् । यत्रा नरो देवयन्तो युगानि वितन्वते प्रति भद्राय भद्रम् ॥१५॥**

प्रथम दीप्तिले सम्पन्न र तेजस्वितले युक्त भएकी देवी उषालाई सूर्यदेवता उसै किसिमले पछ्याउँछन् जसरी नारीका पछि पुरुष लाग्दछ । जुन ठाउँमा देवत्वको उच्च लक्ष्य प्राप्त गर्नका लागि साधकहरूले यज्ञ आदि श्रेष्ठ कर्म गर्दछन्, त्यहीं ती साधक एवं कल्याणकारी यज्ञीय कर्मलाई सूर्यदेवताले आफ्ना प्रकाशले प्रकाशित गराउँछन् ।

## सूक्त– १०८

**ऋषि–** नृमेध । **देवता–** इन्द्र । **छन्द–** गायत्री, ककुप् उष्णिक्, पुर उष्णिक् ।

**त्वं न इन्द्रा भरँ ओजो नृम्णं शतक्रतो विचर्षणे । आ वीरं पृतनाषहम् ॥१॥**

अनेकौँ किसिमका कार्यहरूलाई सम्पन्न गराउने, ज्ञानी हे इन्द्रदेवता ! हामीलाई तिमी शक्ति एवं ऐश्वर्यले परिपूर्ण गराऊ र शत्रुलाई जित्न सक्ने बालकका पुत्र पनि प्रदान गर ।

**त्वं हि नः पिता वसो त्वं माता शतक्रतो बभूविथ । अधा ते सुम्नमीमहे ॥२॥**

सबैलाई आश्रय प्रदान गर्ने हे सयौँ किसिमका असल कर्म गर्ने इन्द्रदेवता ! तिमी पिताले झैँ पालन गर्ने र माताले झैँ धारण गर्ने हौ । तिम्रा सामु हामी सुखको माग गर्न आउँछौँ ।

**त्वां शुष्मिन् पुरुहूत वाजयन्तमुप ब्रुवे शतक्रतो । स नो रास्व सुवीर्यम् ॥३॥**

असङ्ख्य मानिसले स्तुति गर्न योग्य, बलवान्, प्रशंसा प्राप्त गरेका, शक्तिशाली हे इन्द्रदेवता ! हामी तिम्रो स्तुति गर्दै हामीलाई तिमी उत्तम तेजस्वी सामर्थ्य प्रदान गर भन्ने कामना गर्दछौँ ।

## सूक्त– १०९

**ऋषि–** गोतम । **देवता–** इन्द्र । **छन्द–** पथ्यापङ्क्ति ।

**स्वादोरित्था विषूवतो मध्वः पिबन्ति गौर्यः । या इन्द्रेण सयावरीर्वृष्णा मदन्ति शोभसे वस्वीरनु स्वराज्यम् ॥१॥**

भक्तमाथि कृपादृष्टि राख्ने सूर्यरूपी इन्द्रदेवतासित किरणरूपी गाईहरू आनन्दका साथ शोभायमान भएका हुन्छन् । उनले भूमिमा स्वराज्यको मर्यादाअनुसार उत्पन्न भएको मिठो स्वादले युक्त मधुर रस पान गर्दछन् ।

**ता अस्य पृशनायुवः सोमं श्रीणन्ति पृश्नयः । प्रिया इन्द्रस्य धेनवो वज्रं हिन्वन्ति सायकं वस्वीरनु स्वराज्यम् ॥२॥**

सूर्यरूपी इन्द्रदेवतालाई स्पर्श गर्ने सफा वर्णका किरणरूपी गाईहरू दुधरूपी पोषण प्रदान गर्दछन् र उनको वज्रलाई प्रेरणा प्रदान गर्दै स्वराज्यमैं रहने गरेका छन् ।

**ता अस्य नमसा सहः सपर्यन्ति प्रचेतसः । व्रतान्यस्य सश्चिरे पूरूणि पूर्वचित्तये वस्वीरनु स्वराज्यम् ॥३॥**

ज्ञानरूपी ती किरणहरू इन्द्रदेवताको प्रभावलाई पूजन गर्दछन् । उहिले नै भइसकेजस्तो लाग्ने ती कामहरूको स्मरण तिनै किरणले गराउँछन् । ती कार्य इन्द्रदेवताले सम्पन्न गरेका हुन् र तिनीहरू स्वराज्यकै मर्यादामा सम्पन्न भएका हुन् ।

## सूक्त– ११०

**ऋषि–** श्रुतकक्ष, सुकक्ष । **देवता–** इन्द्र । **छन्द–** गायत्री ।

**इन्द्राय मद्वने सुतं परि ष्टोभन्तु नो गिरः । अर्कमर्चन्तु कारवः ॥१॥**

हामी स्तोताहरू स्तुति गरेर इन्द्रदेवताका लागि तयार पारिएको आनन्दमयी प्रकृतिले युक्त दिव्य सोमरसको प्रशंसा गर्दछौँ ।

**यस्मिन् विश्वा अधि श्रियो रणन्ति सप्त संसदः । इन्द्रं सुते हवामहे ॥२॥**

उनै कान्तिमान् इन्द्रदेवतालाई हामी सोमयज्ञमा आह्वान गर्दछौँ, जसको स्तुति यज्ञका सात ऋत्विक्हरूले गर्दछन् ।

**त्रिकद्रुकेषु चेतनं देवासो यज्ञमत्नत । तमिद् वर्धन्तु नो गिरः ॥३॥**

प्रेरणादायी, उत्साह बढाउने, तीन चरणमा सम्पन्न हुने गरेका यज्ञलाई देवताहरूले विस्तार गर्दछन् । साधकहरू त्यस्ता यज्ञको प्रशंसा गर्दछन् ।

## सूक्त– १११

**ऋषि–** पर्वत । **देवता–** इन्द्र । **छन्द–** उष्णिक् ।

**यत् सोममिन्द्र विष्णवि यद्वा घ त्रित आप्त्ये । यद्वा मरुत्सु मन्दसे समिन्दुभिः ॥१॥**

हे इन्द्रदेवता ! यज्ञमा विष्णु उपस्थित भएपछि तिमीले सोमपान गरेका थियौ । त्रितआप्त्य एवं

मरुत्‌गणका साथमा सोमरस पान गरेर आनन्दित हुने तिमी हाम्रा यज्ञमा पनि सोमपान गरेर आनन्दित होऊ ।

**यद्वा शक्र परावति समुद्रे अधि मन्दसे । अस्माकमित् सुते रणा समि समिन्दुभिः ॥२॥**

हे इन्द्रदेवता ! जसरी सुदूर क्षेत्रमा सोमरस पान गरेर तिमी हर्षित हुन्छौ, उसै गरी हाम्रा यज्ञमा पनि सोमपान गरेर तिमी हर्षित होऊ ।

**यद्वासि सुन्वतो वृधो यजमानस्य सत्पते । उक्थे वा यस्य रण्यसि समिन्दुभिः ॥३॥**

हे सत्यका पालक इन्द्रदेवता ! तिमी जुन याजकका यज्ञमा विधिपूर्वक सोमपान गरेर आनन्दित हुन्छौ, उसै याजकको उन्नति गराउँछौ ।

## सूक्त— ११२

**ऋषि—** सुकक्ष । **देवता—** इन्द्र । **छन्द—** गायत्री ।

**यदद्य कच्च वृत्रहन्नुदगा अभि सूर्य । सर्वं तदिन्द्र ते वशे ।**

हे वृत्रसंहारक इन्द्रदेवता ! तिम्रा कारणले प्रकाशित हुने गरेका सम्पूर्ण जगत्‌का सबै कुराहरू तिम्रै अधिकारमा रहेका छन् ।

**यद्वा प्रवृद्ध सत्पते न मरा इति मन्यसे । उता तत् सत्यमित् तव ॥२॥**

प्रगति गर्ने र सज्जनलाई पालन गर्ने हे इन्द्रदेवता ! तिमी स्वयंलाई अमर मान्ने गर्दछौ र तिमीले यस्तो मान्नु यथार्थ पनि हो ।

**ये सोमासः परावति ये अर्वावति सुन्विरे । सर्वांस्ताँ इन्द्र गच्छसि ॥३॥**

हे इन्द्रदेवता ! सोमरस पेल्नका लागि जुन दूर या निकटका स्थान निश्चित गरिएको छ, तिमी ती सबै स्थानमा जाने गर्दछौ ।

## सूक्त— ११३

**ऋषि—** भर्ग । **देवता—** इन्द्र । **छन्द—** प्रगाथ ।

***उभयं शृणवच्च न इन्द्रो अर्वागिदं वचः । सत्राच्या मघवा सोमपीतये धिया शविष्ठ आ गमत् ॥१॥***

धन र बल दुवै गुणले सम्पन्न हे इन्द्रदेवता ! तिमी हाम्रा यी दुवै किसिमका प्रार्थनालाई नजिकै आएर सुन । सामूहिक उपासनाले प्रसन्न भएर तिमी सोमपान गर्नका लागि यहाँ आऊ ।

**तं हि स्वराजं वृषभं तमोजसे धिषणे निष्टतक्षतुः । उतोपमानां प्रथमो नि षीदसि सोमकामं हि ते मनः ॥२॥**

आकाश र पृथ्वीले वर्षा गराउने, समर्थ र तेजस्वी इन्द्रदेवतालाई प्रकट वा नियुक्त गरे । हे इन्द्रदेवता ! उपमा दिनुपर्नेहरूमा तिमी सर्वश्रेष्ठ छौ । तिमी सोमपान गर्ने इच्छाले यज्ञवेदीमा विराजमान हुने गर्दछौ ।

## सूक्त— ११४

**ऋषि—** सौभरि । **देवता—** इन्द्र । **छन्द—** गायत्री ।

**अभ्रातृव्यो अना त्वमनापिरिन्द्र जनुषा सनादसि । युधेदापित्वमिच्छसे ॥१॥**

हे इन्द्रदेवता ! तिमी जन्मदेखि नै दाजुभाइको कलहबाट मुक्त छौ । तिमीमाथि शासन गर्ने अर्को कोही पनि छैन र सहायता गर्न सक्ने खालको कुनै मित्र नै छ । तिमी युद्ध परेका अवस्थामा आफ्ना लागि सहयोगी मित्र र भक्तहरू प्राप्त गर्ने कामना गर्दछौ ।

**नकी रेवन्तं सखाय विन्दसे पीयन्ति ते सुराश्वः । यदा कृणोषि नदनुं समूहस्यादित् पितेव हूयसे ॥२॥**

हे इन्द्रदेवता ! तिमी यज्ञको दान आदिले रहित धनको अभिमान गर्नेलाई मित्र बनाउँदैनौ । सुरापान गरेर मदान्ध हुने व्यक्तिलाई देखेर तिमी दुःखी हुन्छौ । ज्ञान एवं गुणले सम्पन्न व्यक्तिलाई

मित्र बनाएर तिमी उन्नतिपथमा लाग्दछौ, त्यसो भएपछि तिमी पिताको जस्तै सम्मान प्राप्त गर्दछौ ।

## सूक्त– ११५

**ऋषि–** वत्स । **देवता–** इन्द्र । **छन्द–** गायत्री ।

**अहमिद्धि पितुष्परि मेधामृतस्य जग्रभ । अहं सूर्य इवाजनि ॥१॥**

हामीले यज्ञका रूपमा रहेका इन्द्रको बुद्धिलाई आफूतर्फ आकर्षित गरेका छौँ, यसो हुँदा हामी सूर्यझैँ तेजस्वी भएका छौँ ।

**अहं प्रत्नेन मन्मना गिरः शुम्भामि कण्ववत् । येनेन्द्रः शुष्ममिद् दधे ॥२॥**

कण्व ऋषिका जस्तै स्तोत्रले हामीले इन्द्रलाई सुशोभित गराएका छौँ, त्यसका प्रभावले उनी शक्तिसम्पन्न बनेका छन् ।

**ये त्वामिन्द्र न तुष्टुवुर्ऋषयो ये च तुष्टुवुः । ममेद् वर्धस्व सुष्टुतः ॥३॥**

हे इन्द्रदेवता ! तिम्रो स्तुति नगर्ने र तिम्रा लागि स्तुति गर्ने ऋषिहरूका बीचमा पनि हाम्रो स्तोत्र प्रशंसनीय रहेको छ । त्यस स्तोत्रका प्रभावले तिमी उचित रूपमा परिपुष्ट होऊ ।

## सूक्त– ११६

**ऋषि–** मेध्यातिथि । **देवता–** इन्द्र । **छन्द–** बृहती ।

**मा भूम निष्ट्या इवेन्द्र त्वदरणा इव । वनानि न प्रजाहितान्यद्रिवो दुरोषासो अमन्महि ॥१॥**

हे इन्द्रदेवता ! तिम्रा कृपाले हाम्रो पतन नहोस् र हामी दुःखी हुनु नपरोस् । शिशिरमा पात झरेका रुखका हाँगाझैँ हामीले सन्तानविहीन हुनु नपरोस् । हे इन्द्रदेवता ! हामी घरैमा सुरक्षित रहेर तिम्रो स्तुति गर्दछौँ ।

**अमन्महीदनाशवोऽनुग्रासश्च वृत्रहन् । सुकृत् सु ते महता शूर राधसानु स्तोमं मुदीमहि ॥२॥**

हे वृत्रहन्ता इन्द्रदेवता ! हामी हतार वा रिसबाट मुक्त भएर तिम्रो स्तुति गरौँ । हे वीर इन्द्रदेवता ! तिम्रा लागि हामीले जीवनमा एकै पटकमात्रै यज्ञ गरे पनि प्रचुर मात्रामा धनधान्यले सम्पन्न भएर गर्न पाऔँ ।

## सूक्त– ११७

**ऋषि–** वसिष्ठ । **देवता–** इन्द्र । **छन्द–** वीराट् गायत्री ।

**पिबा सोममिन्द्र मन्दतु त्वा यं ते सुषाव हर्यश्वाद्रिः । सोतुर्बाहुभ्यां सुयतो नार्वा ॥१॥**

हे खैरो रङ्गका अश्वले सम्पन्न इन्द्रदेवता ! तिमी आनन्ददायक सोमरस पान गर । सञ्चालकका पाखुराले उचित तरिकाले नियन्त्रण गरिएका घोडाजस्तै यज्ञशालामा सुरक्षित राखिएका ढुङ्गाका सहायताले तिम्रा निम्ति सोमरस निकाल्ने गरिन्छ ।

**यस्ते मदो युज्यश्चारुरस्ति येन वृत्राणि हर्यश्व हंसि । स त्वामिन्द्र प्रभूवसो ममत्तु ॥२॥**

हरि नामका अश्वका स्वामी हे समृद्धिशाली इन्द्रदेवता ! जुन सोमरसका उत्साहले तिमी वृत्रासुर नामका दुष्टलाई हनन गर्दछौ, त्यही श्रेष्ठ रसले तिमीलाई आनन्द प्रदान गरोस् ।

**बोधा सु मे मघवन् वाचमेमां यां ते वसिष्ठो अर्चति प्रशस्तिम् । इमा ब्रह्म सधमादे जुषस्व ॥३॥**

हे इन्द्रदेवता ! वसिष्ठ नामका विशिष्ट याजकले गुणगान गर्दै, जुन श्रेष्ठ वाणीले तिम्रो अर्चना गरिरहेका छन्, त्यसलाई तिमी उचित किसिमले विचार गरेर स्वीकार गर र यज्ञस्थलमा यस ज्ञानयुक्त हविलाई स्वीकार गर ।

## सूक्त– ११८

**ऋषि**– भर्ग, मेध्यातिथि । **देवता**– इन्द्र । **छन्द**– प्रगाथ ।

**शग्ध्यू३ षु शचीपत इन्द्र विश्वाभिरूतिभिः । भगं न हि त्वा यशसं वसुविदमनु शूर चरामसि ॥१॥**

हे शचीपति, शूरवीर इन्द्रदेवता ! सबै किसिमका रक्षा साधनका साथमा हामीलाई तिमी अभीष्ट फल प्रदान गर । सौभाग्ययुक्त धन प्रदान गर्ने तिमीलाई हामी आराधना गर्दछौं ।

**पौरो अश्वस्य पुरुकृद् गवामस्युत्सो देव हिरण्ययः । नकिर्हि दानं परिमर्धिषत् त्वे यद्यद्यामि तदा भर ॥२॥**

हे इन्द्रदेवता ! तिमी गाईरूपी इन्द्रिय तथा पोषक पदार्थ र अश्वरूपी पुरुषार्थले युक्त शक्ति प्रवाहलाई बढाउँछौ । स्वर्ण सम्पदाका स्रोत तिमी नै हौ । तिम्रा कृपापूर्ण सहयोगलाई बिर्सने सामर्थ्य कसैसित पनि छैन । हामीलाई तिमी अभीष्ट फलले परिपूर्ण गराऊ ।

**इन्द्रमिद् देवतातय इन्द्रं प्रयत्य ध्वरे । इन्द्रं समीके वनिनो हवामह इन्द्रं धनस्य सातये ॥३॥**

दैवी प्रयोजनले गरिएका यज्ञमा हामी याजकहरू जुन किसिमले यज्ञको प्रारम्भमा र समाप्तिमा इन्द्रदेवतालाई आह्वान गर्दछौं, त्यस्तै किसिमले धन प्राप्तिका कामनाले पनि बलशाली इन्द्रदेवतालाई आह्वान गर्दछौं ।

**इन्द्रो मह्ना रोदसी पप्रथच्छव इन्द्रः सूर्यमरोचयत् । इन्द्रे ह विश्वा भुवनानि येमिर इन्द्रे सुवानास इन्दवः ॥४॥**

ऐश्वर्यशाली इन्द्रदेवताले आफ्ना सामर्थ्यले द्युलोक र पृथ्वीलाई विस्तृत गराए । इन्द्रदेवताले नै सूर्यलाई आलोकमय बनाए । इन्द्रदेवताले नै सबै लोकहरूलाई आश्रय प्रदान गरे । उनै इन्द्रदेवताका लागि नै यो सोमरस समर्पित गरिएको छ ।

## सूक्त– ११९

**ऋषि**– आयु, श्रुष्टिगु । **देवता**– इन्द्र । **छन्द**– प्रगाथ ।

**अस्तावि मन्म पूर्व्यं ब्रह्मेन्द्राय वोचत । पूर्वीर्ऋतस्य बृहतीरनूषत स्तोतुर्मेधा असृक्षत ॥१॥**

हे ऋत्विक्हरू हो ! तिमीहरूले उहिलेका यज्ञमा बृहती छन्दमा सामगान गाएका थियौ । अब तिमीहरू इन्द्रदेवताका लागि कण्ठस्थ रहेका सनातन स्तोत्रहरू पाठ गर । यसबाट स्तोताहरूमा मेधाशक्तिको वृद्धि हुनेछ ।

**तुरण्यवो मधुमन्तं घृतश्चुतं विप्रासो अर्कमानृचुः । अस्मे रयिः पप्रथे वृष्ण्यं शवोऽस्मे सुवानास इन्दवः ॥२॥**

शीघ्र कार्य गर्ने विप्रहरू मधुर घिउले सेचन गरिएको भावयुक्त तथा तेजस्वी पूजनीय मन्त्रको उच्चारण गर्दछन् । यसबाट हामीलाई धन, पराक्रम र सोमको सिद्धि हुने गर्दछ ।

## सूक्त– १२०

**ऋषि**– देवातिथि । **देवता**– इन्द्र । **छन्द**– प्रगाथ ।

**यदिन्द्र प्रागपागुदङ्न्यग्वा हूयसे नृभिः । सिमा पुरू नृषूतो अस्यानवेऽसि प्रशर्ध तुर्वशे ॥१॥**

हे इन्द्रदेवता ! तिमी स्तोताहरूको सहायताका लागि पूर्व, पश्चिम, उत्तर र दक्षिण यी चारै तर्फबाट बोलाइने गर्दछौ । हे शत्रुनाशक इन्द्रदेवता ! अनु र तुर्वशका लागि तिमीलाई प्रार्थनापूर्वक बोलाइएको छ ।

**यद्वा रुमे रुशमे श्यावके कृप इन्द्र मादयसे सचा । कण्वासस्त्वा ब्रह्मभि स्तोमवाहस इन्द्रा यच्छन्त्या गहि ॥२॥**

हे इन्द्रदेवता ! तिमी, रुम, रुशम, श्यावक र कृप नामका ज्ञानी, शूर, धनी र परिश्रमीका लागि

प्रसन्न गराइन्छौ । कण्ववंशीय ऋषिहरू तिमीलाई विभिन्न स्तोत्रले प्रभावित गर्ने प्रयास गर्दछन् । हे इन्द्रदेवता ! तिमी यज्ञका लागि आऊ ।

## सूक्त– १२१

**ऋषि–** देवातिथि । **देवता–** इन्द्र । **छन्द–** प्रगाथ ।

**अभि त्वा शूर नोनुमोऽदुग्धा इव धेनवः । ईशानमस्य जगतः स्वर्दृमीशानमिन्द्र तस्थुषः ॥१॥**

हे शूरवीर इन्द्रदेवता ! तिमी यस स्थावरजङ्गम संसारका स्वामी हौ । दिव्य दृष्टिले सम्पन्न तिमीलाई भेट्न हामी उसै किसिमले हतारिएका छौँ, जसरी नदुहिएको गाई आफ्नो बाछो भेट्नका लागि हतारिएको हुन्छ ।

**न त्वावाँ अन्यो दिव्यो न पार्थिवो न जातो न जनिष्यते । अश्वायन्तो मघवन्निन्द्र वाजिनो गव्यन्तस्त्वा हवामहे ॥२॥**

हे ऐश्वर्यवान् इन्द्रदेवता ! यस पृथ्वीलोकमा र दिव्यलोकमा तिमीजस्तो अर्को कोही पनि छैन, न त पहिले कुनै थियो र न भविष्यमा नै हुनेछ । हे देवता ! अश्व, गाई, धनधान्य आदिको कामना गर्ने हामी स्तोताहरू तिमीलाई आह्वान गर्दछौँ ।

## सूक्त– १२२

**ऋषि–** शुनःशेप । **देवता–** इन्द्र । **छन्द–** गायत्री ।

**रेवतीर्नः सधमाद इन्द्रे सन्तु तुविवाजाः । क्षुमन्तो याभिर्मदेम ॥१॥**

जसको स्तुति गरेर हामी खुसी हुन्छौँ, उनै इन्द्रदेवताका लागि गरिएको हाम्रा प्रार्थनाले हामीलाई प्रचुर धनधान्य प्रदान गर्न सकोस् ।

**आ घ त्वावान् त्मनाप्त स्तोतृभ्यो धृष्णवियानः । ऋणोरक्षं न चक्र्योः ॥२॥**

हे धैर्यशाली इन्द्रदेवता ! तिमी कल्याणकारी बुद्धिले स्तुति गर्ने स्तोताहरूलाई अभीष्ट पदार्थ अवश्य प्रदान गर । तिमी स्तोतालाई धन दिनका लागि रथका पाङ्ग्रा जोड्ने धुराजस्तो सहायक हुनेछौ ।

**आ यद् दुवः शतक्रतवा कामं जरितॄणाम् । ऋणोरक्षं न शचीभिः ॥३॥**

हे इन्द्रदेवता ! स्तोताहरूले रुचाएको धन उनीहरूलाई प्रदान गर । जसरी रथका गतिले उनको अक्षलाई पनि गति प्राप्त हुन्छ, उसै गरी स्तुतिकर्ताहरूलाई पनि धन प्राप्त होस् ।

## सूक्त– १२३

**ऋषि–** कुत्स । **देवता–** सूर्य । **छन्द–** त्रिष्टुप् ।

**तत् सूर्यस्य देवत्वं तन्महित्वं मध्या कर्तोर्विततं सं जभार । यदेदयुक्त हरितः सधस्थादाद्रात्री वासस्तनुते सिमस्मै ॥१॥**

ती सबै महान् कार्यहरू सूर्यदेवताकै देवत्वका कारण सम्पन्न भएका हुन् । जब ती सूर्यदेवता आफ्ना हरणशील किरणलाई आकाशबाट छुट्याएर केन्द्रमा धारण गर्दछन्, त्यस बेला रात पर्दछ र यस संसारमा बाक्लो अन्धकारको बिर्को लागेको हुन्छ ।

**तन्मित्रस्य वरुणस्याभिचक्षे सूर्यो रूपं कृणुते द्योरुपस्थे । अनन्तमन्यद् रुशदस्य पाजः कृष्णमन्यद्धरितः सं भरन्ति ॥२॥**

द्युलोकका काखमा रहेका सूर्यदेवताले मित्र र वरुणदेवताको त्यो स्वरूप प्रकट गराउँछन्, जसबाट उनले मानिसलाई सबै तिरबाट देख्न पाउँछन् । उनको किरण अनन्त विश्वमा एकातर्फ प्रकाश र चेतना फिँजाउँदै हुन्छ भने अर्कातिर अन्धकार भरिइरहेको हुन्छ ।

## सूक्त– १२४

**ऋषि–** वामदेव । **देवता–** इन्द्र । **छन्द–** गायत्री, पाद निचृत् गायत्री, त्रिष्टुप् ।

**कया नश्चित्र आ भुवदूती सदावृधः सखा । कया शचिष्ठया वृता ॥१॥**

निरन्तर प्रगतिशील हे इन्द्रदेवता ! तिमी कुनकुन तृप्तिकारक पदार्थहरू भेट गर्नाले र कुन किसिमका पूजाविधिले प्रसन्न हुने गर्दछौ ? तिमी कुन दिव्य शक्तिका साथमा हाम्रो सहयोग गर्दछौ ?

**कस्त्वा सत्यो मदानां मंहिष्ठो मत्सदन्धसः । दृढहा चिदारुजे वसु ॥२॥**

सत्यनिष्ठामा रहेकाहरूलाई आनन्द प्रदान गर्नेहरूमध्ये सोम सर्वोपरि रहेको छ । किनभने हे इन्द्रदेवता ! यसले तिमीलाई दुर्धर्ष शत्रुको ऐश्वर्य विनाश गर्नका लागि प्रेरणा प्रदान गर्दछ ।

**अभी षु णः सखीनामविता जरितृणाम् । शतं भवास्यूतिभिः ॥३॥**

स्तुतिहरूले प्रसन्न गर्ने हाम्रा मित्रहरूका रक्षक हे इन्द्रदेवता ! अनेकौं किसिमले हाम्रो रक्षा गर्नका लागि तिमी उच्च कोटिको तयारीसहित प्रस्तुत होऊ ।

**इमा नु भुवना सीषधामेन्द्रश्च विश्वे च देवाः । यज्ञं च नस्तन्वं च प्रजां चादित्यैरिन्द्रः सह चीक्लृपाति ॥४॥**

हामी यी सबै लोकहरूलाई नै शीघ्र प्राप्त गरौं । इन्द्रदेवता र अरू सबै देवगण हाम्रा लागि सुखशान्ति प्राप्त गर्नका लागि सहायक होऊन् । इन्द्रदेवता र आदित्यगणले हाम्रो यज्ञलाई सफल बनाऊन् । शरीरलाई निरोगी बनाइदिऊन् र हाम्रा सन्तानहरूलाई सद्व्यवहारका लागि प्रेरित गरून् ।

**आदित्यैरिन्द्रः सगणो मरुद्भिरस्माकं भूत्वविता तनूनाम् । हत्वाय देवा असुरान् यदायन् देवा देवत्वमभिरक्षमाणाः ॥५॥**

आदित्यहरू र मरुत्गणका साथमा इन्द्रदेवता आएर हाम्रा शरीरलाई सुरक्षा प्रदान गरून् । जुन समयमा देवगणले वृत्र आदि असुरहरूको संहार गरेर आफ्ना स्थानमा फिर्ता गए, उसै बेला अमर देवत्वको सुरक्षा हुन सकेको हो ।

**प्रत्यञ्चमर्कमनयञ्छचीभिरादित् स्वधामिषिरां पर्यपश्यन् । अया वाजं देवहितं सनेम मदेम शतहिमाः सुवीराः ॥६॥**

इन्द्रदेवताले शक्तिहरूका साथमा सूर्यलाई प्रकट गराए । त्यस बेला सबैले वर्षाको तृप्तिदायक प्रक्रियाका रूपमा रहेकी स्वधालाई देखे । यसै किसिमले देवताहरूका हितमा बल आर्जन गरियो । हामी याजकहरू श्रेष्ठ वीरहरूका साथमा सयौं वर्षसम्म हर्षित भइरहन सकौं ।

## सूक्त– १२५

**ऋषि–** सुकीर्ति । **देवता–** इन्द्र, अश्विनीकुमार । **छन्द–** पत्रिष्टुप्, अनुष्टुप् ।

**अपेन्द्र प्राचो मघवन्नमित्रानपापाचो अभिभूते नुदस्व । अपोदीचो अप शूराधराच उरौ यथा तव शर्मन् मदेम ॥१॥**

हे ऐश्वर्यवान् तथा शत्रुलाई पराजित गर्ने इन्द्रदेवता ! हाम्रा पूर्व, पश्चिम, उत्तर र दक्षिणबाट आउने शत्रुलाई तिमी पर हटाइदेऊ । हामी तिम्रा नजिकै सुखपूर्वक रहन सकौं ।

**कुविदङ्ग यवमन्तो यवं चिद् यथा दान्त्यनुपूर्वं वियूय । इहेहैषां कृणुहि भोजनानि ये बर्हिषो नमोवृक्तिं न जग्मुः ॥२॥**

हे इन्द्रदेवता ! जसरी जौको खेती गर्ने किसानले बारम्बार जौ काट्ने गर्दछ, उसै गरी देवताहरूका प्रिय तिमीले दुष्टलाई दमन गरेर बारम्बार श्रेष्ठ जनलाई पोषण प्रदान गर्दै उनीहरूको रक्षा गरेका

छौं ।

**नहि स्यूर्युता यातमस्ति नोत श्रवो विविदे संगमेषु । गव्यन्त इन्द्रं सख्याय विप्रा अश्वायन्तो वृषणं वाजयन्तः ॥३॥**

एउटा मात्रै पाङ्ग्रो भएको गाडा कहिल्यै पनि उचित समयमा लक्ष्यमा पुग्दैन । युद्धकालमा त्यसबाट अन्नलाभ पनि हुँदैन । त्यसैले हामी गाई, वृषभ, अश्व, अन्न र बलको कामना गर्दै इन्द्रदेवताको मित्रता प्राप्त गर्नका लागि उनलाई पनि आह्वान गर्दछौँ ।

**युवं सुराममश्विना नमुचावासुरे सचा । विपिपाना शुभस्पती इन्द्रं कर्मस्वावतम् ॥४॥**

हे अश्विनीकुमारहरू हो ! नमुची नामको असुरका अधिकारमा रहेको श्रेष्ठ, मधुर सोमरस उचित किसिमले हात पारेर त्यसलाई पान गर्दै त्यस नमुचीलाई वध गर्नमा तिमीहरू दुवैले इन्द्रदेवतालाई सहायता गर्‍यौ ।

**पुत्रमिव पितरावश्विनोभेन्द्रावथुः काव्यैर्दंसनाभिः । यत् सुरामं व्यपिबः शचीभिः सरस्वती त्वा मघवन्नभिष्णक् ॥५॥**

हे इन्द्रदेवता ! राक्षसहरूको संसर्गले अशुद्ध भएको सोमरस पान गरेर आफूलाई सङ्कटमा पार्दै तिमीलाई त्यसरी नै सुरक्षा गरेर जसरी पिताले पुत्रको रक्षा गर्दछन् । तिमीले नमुचीलाई वध गरेर जब प्रसन्नता प्रदान गर्ने सोमरस पान गरेका थियौ, त्यस बेला सरस्वतीदेवी पनि तिम्रो अनुकूल भएकी थिइन् ।

**इन्द्रः सुत्रामा स्ववाँ अवोभिः सुमृडीको भवतु विश्ववेदाः । बाधतां द्वेषो अभयं नः कृणोतु सुवीर्यस्य पतयः स्याम ॥६॥**

उचित किसिमले संरक्षण प्रदान गर्ने सामर्थ्यले सम्पन्न उनै इन्द्रदेवताले हामीलाई सुरक्षा गरून् । ती सर्वज्ञ परमेश्वर हाम्रा लागि शत्रुका संहारकर्ता होऊन् । हामीमा निर्भीकता स्थापित गरून्, जसले गर्दा हामी उत्तम बलका स्वामी बन्न सकौँ ।

**स सुत्रामा स्ववाँ इन्द्रो अस्मदाराच्चिद् द्वेषः सनुतर्युयोतु । तस्य वयं सुमतौ यज्ञियस्यापि भद्रे सौमनसे स्याम ॥७॥**

हामी यज्ञीय पुरुषको श्रेष्ठ बुद्धिमा वास गरौँ र कल्याणकारी श्रेष्ठ मनले पनि सम्पन्न हुन सकौँ । श्रेष्ठ, संरक्षक र ऐश्वर्यवान् उनै इन्द्रदेवताले हाम्रा नजिकै रहेका र पर गएर लुकेका सबै शत्रुलाई सधैँका लागि पर भगाइदिऊन् ।

## सूक्त— १२६

**ऋषि—** इन्द्राणी, वृषाकपि । **देवता—** इन्द्र । **छन्द—** पङ्क्ति ।

**वि हि सोतोरसृक्षत नेन्द्रं देवममंसत । यत्रामदद् वृषाकपिरर्यः पुष्टेषु मत्सखा विश्वस्मादिन्द्र उत्तरः ॥१॥**

इन्द्रदेवताले स्तोताहरूलाई सोम पेल्ने वा अन्य कुनै कामका लागि प्रेरित गरेका थिए तथापि स्तुतिकर्ताहरूले इन्द्रदेवताको प्रार्थना गरेनन् बरु वृषाकपीको प्रार्थना गरे । जहाँ सोमप्रवृद्ध यज्ञमा आर्य वृषाकपी नै हाम्रा मित्र बनेर सोमपान गरेर हर्षित भए । निश्चय पनि इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् ।

**परा हीन्द्र धावसि वृषाकपेरति व्यथिः । नो अह प्र विन्दस्यन्यत्र सोमपीतये विश्वस्मादिन्द्र उत्तरः ॥२॥**

हे इन्द्रदेवता ! तिमी व्यथित भएर वृषाकपीका नजिक दौडँदै जान्छौ । तिमी सोमपान गर्नका लागि अर्को ठाउँमा जाँदैनौ । निश्चय पनि इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् ।

**किमयं त्वा वृषाकपिश्चकार हरितो मृगः । यस्मा इरस्यसीदु न्व१र्यो वा पुष्टिमद् वसु विश्वस्मादिन्द्र उत्तरः ॥३॥**

हे इन्द्रदेवता ! यो हरियो वर्णको भूमिमा वृषाकपीले आउँदा के हित भएको छ र तिमी यति उदार

भएर उनलाई पौष्टिक ऐश्वर्य प्रदान गर्दछौ ? निश्चय नै इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् ।

**यमिमं त्वं वृषाकपिं प्रियमिन्द्राभिरक्षसि । श्वा न्वस्य जम्भिषदपि कर्णे वराहयुर्विश्वस्मादिन्द्र उत्तरः ॥४॥**

हे इन्द्रदेवता ! तिमी जुन प्रिय वृषाकपीलाई सुरक्षित गराउँछौ, बँदेलमाथि आक्रमण गर्ने कुकुरले उनका कानमा टोकोस् । निश्चय पनि इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् ।

**प्रिया तष्यनि मे कपिर्व्यक्ता व्य दूदुषत् । शिरो न्वस्य राविषं न सुगं दुष्कृते भुवं विश्वस्मादिन्द्र उत्तरः ॥५॥**

तिमीलाई सन्तुष्ट गराउने पदार्थलाई वृषाकपीले दूषित गराएका छन् । मलाई त यिनको टाउको छिनाइदिऊँजस्तो लागेको छ । यस्तो दुष्कर्म गर्नमा लागेका वृषाकपीकी हितैषि म हुन सक्दिनँ । निश्चय पनि इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् ।

**न मत्स्त्री सुभसत्तरा न सुयाशुतरा भुवत् । न मत् प्रतिच्यवीयसी न सक्थ्युद्यमीयसी विश्वस्मादिन्द्र उत्तरः ॥६॥**

कुनै अर्को स्त्री मभन्दा बढी सौभाग्यशालिनी हुनै सक्दिन र अरू कोही पनि मभन्दा बढी सुखी वा असल सन्तानकी आमा हुन सक्दिन । आफ्ना पतिलाई सुख दिनमा मभन्दा बढी सक्षम पनि कुनै स्त्री हुनै सक्दैनन् । निश्चय पनि इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् । यस किसिमका कुरा इन्द्राणीले भनिन् ।

**उवे अम्ब सुलाभिके यथेवाङ्ग भविष्यति । भसन्मे अम्ब सक्थि मे शिरो मे वी व हृष्यति विश्वस्मादिन्द्र उत्तरः ॥७॥**

हे माता इन्द्राणी ! तिमी सबै सुखको लाभ प्राप्त गर्नमा सक्षम छ्यौ । तिम्रा अङ्ग, जङ्घा, मस्तक आदि आवश्यकताअनुसार स्वरूप धारण गर्न र कार्य गर्नमा सक्षम छन् । तिमी पिता इन्द्रका लागि स्नेहले युक्त र सुखप्रदायक छ्यौ । निश्चय पनि इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् भन्ने कुरो वृषाकपीले गरे ।

**किं सुबा हो स्वङ्गुरे पृथुष्टे पृथुजाघने । किं शूरपत्नि नस्त्वमभ्य मीषि वृषाकपिं विश्वस्मादिन्द्र उत्तरः ॥८॥**

हे वीर पत्नी इन्द्राणी ! तिमी श्रेष्ठ भुजाले युक्त, सुन्दर औँला भएकी, श्रेष्ठ केश भएकी र विशाल जङ्घा भएकी छ्यौ । तिमी वृषाकपीमाथि किन रिस गरिरहेकी छ्यौ ? निश्चय पनि इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् । इन्द्रदेवताले इन्द्राणीसित भने ।

**अवीरामिव मामयं शरारुरभि मन्यते । उताहमस्मि वीरिणीन्द्रपत्नी मरुत्सखा विश्वास्मादिन्द्र उत्तरः ॥९॥**

यी घातक वृषाकपीले मलाई पति र पुत्र आदि नै नभएकी जस्तै मान्दछन्, तर इन्द्रकी पत्नी सन्तान आदिले सम्पन्न छु र मरुत्‌गण पनि मेरै सहायक छन् । निश्चय पनि इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् । भनेर इन्द्राणीले भनिन् ।

**संहोत्रं स्म पुरा नारी समनं वाव गच्छति । वधा ऋतस्य वीरिणीन्द्रपत्नी महीयते विश्वस्मादिन्द्र उत्तरः ॥१०॥**

प्राचीन कालदेखि नै नारीले श्रेष्ठ यज्ञ र महोत्सवमा भाग लिँदै आएका छन् । यज्ञको विधान सम्पन्न गर्ने र वीर पुत्र जन्माउने हुनाले इन्द्रकी पत्नी इन्द्राणीका रूपमा मेरो स्तुति सबै ठाउँमा हुने गर्दछ । निश्चय पनि इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् ।

**इन्द्राणीमासु नारिषु सुभगामहमश्रवम् । नह्य स्या अपरं चन जरसा मरते पतिर्विश्वस्मादिन्द्र उत्तरः ॥११॥**

सबै स्त्रीहरूमध्ये म इन्द्राणीलाई नै सर्वाधिक सौभाग्यशालिनी मान्दछु । अरू स्त्रीहरूको जस्तै इन्द्राणीका पति इन्द्र वृद्ध पनि हुँदैनन् र उनको मृत्यु पनि हुँदैन । बरु त इन्द्र अमर छन् र निश्चय

पनि इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् ।

**नाहमिन्द्राणि रारण सख्युर्वृषाकपेर्ऋते । यस्येदमप्यं हविः प्रियं देवेषु गच्छति विश्वस्मादिन्द्र उत्तरः ॥१२॥**

हे इन्द्राणी ! हाम्रा मित्र मरुत्गण वृषाकपीको अभावमा हर्षित हुन सक्दैनन् । वृषाकपीको अति प्रिय द्रव्य हवि आदिका रूपमा देवताका नजिकै पुग्ने गर्दछ । निश्चय पनि इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् ।

**वृषाकपायि रेवति सुपुत्र आदु सुस्नुषे । घसत् त इन्द्र उक्षणः प्रियं काचित्करं हविर्विश्वस्मादिन्द्र उत्तरः ॥१३॥**

हे वृषाकपीकी माता वा पत्नी ! तिमी धनले सम्पन्न, पुत्रवती र सुन्दर पुत्रवधू हौ । तिम्रो उक्षा नामको पुष्टिवर्धक औषधि इन्द्रदेवताले शीघ्र सेवन गरून् । तिम्रो प्रिय र सुखदायक हविष्यान्न पनि उनले सेवन गरून् । निश्चय पनि इन्द्रदेवता नै त्यहाँ सर्वश्रेष्ठ छन् ।

**उक्ष्णो हि मे पञ्चदश साकं पचन्ति विंशतिम् । उताहमद्मि पीव इदुभा कुक्षी पृणन्ति मे विश्वस्मादिन्द्र उत्तरः ॥१४॥**

मेरा लागि शचीले प्रदान गरेको उक्षा एकै साथमा परिपक्व हुने गर्दछन् । तिनलाई सेवन गरेर म पुष्ट हुने गर्दछु । मेरा दुवै पाखुरा त्यसैले परिपुष्ट हुन्छन् । निश्चय पनि इन्द्रदेवता सर्वश्रेष्ठ छन् । भन्ने कथन इन्द्रले सुनाए ।

**वृषभो न तिग्मशृङ्गोऽन्तर्यूथेषु रोरुवत् । मन्थस्त इन्द्र शं हृदे यं ते सुनोति भावयुर्विश्वस्मादिन्द्र उत्तरः ॥१५॥**

गाईको बथानमा जसरी तिखा सिङ भएको साँढे डुक्रिँदै विचरण गर्दछ, उसै गरी तिमी पनि हामीसँगै रमण गर । हे इन्द्र ! तिम्रा मनका भावनाहरू कल्याणकारी होऊन् । तिमीलाइ प्राप्त गर्नका लागि भावपूर्वक आकाङ्क्षा गर्ने इन्द्राणी जुन सोम तयार गर्दछिन्, त्यो पनि कल्याणकारी होस् । निश्चय पनि इन्द्रदेवता सर्वश्रेष्ठ छन् । भनेर इन्द्राणीले भनिन् ।

**न सेशे यस्य रम्बतेऽन्तरा सक्थ्या३ कपृत् । सेदीशे यस्य रोमशं निषेदुषो विजृम्भते विश्वस्मादिन्द्र उत्तरः ॥१६॥**

प्राणीहरूका सन्दर्भमा भन्नुपर्दा जसका भारी वहन गर्ने दुई वटा अवयवका बीचमा कुख्याति प्रदायक विकृतिहरूले शब्द गर्दै आफ्नो अभिव्यक्ति प्रकट गर्दछन्, त्यस्ताले शासन गर्न सक्दैनन् । जसका रौँका छिद्रबाट त्यस्ता विकारलाई क्षरण गर्न समर्थ हुन्छन् त्यस्ताले शासन गर्न सक्दछन् । निश्चय पनि इन्द्रदेवता सर्वश्रेष्ठ छन् भनेर इन्द्राणीले भनिन् ।

**न सेशे यस्य रोमशं निषेदुषो विजृम्भते । सेदीशे यस्य रम्बतेऽन्तरा सक्थ्या३ कपृद् विश्वस्मादिन्द्र उत्तरः ॥१७॥**

प्रकृतिका सन्दर्भमा इन्द्रले भने— कुरूप तरिकाले विस्तार भएका मेघ आदि दुई धारक पृथ्वी र अन्तरिक्षका बीचमा जसका शब्द गरिरहेका हुन्छन् उसैले शासन गर्दछ । जसका विकिरणयुक्त अङ्ग वा अङ्कुरले विकार प्रकट हुन्छ, उसले शासन गर्दैन । निश्चय पनि इन्द्रदेवता सर्वश्रेष्ठ छन् ।

**अयमिन्द्र वृषाकपिः परस्वन्तं हतं विदत् । असिं सूनां नवं चरुमादेधस्यान आचितं विश्वस्मादिन्द्र उत्तरः ॥१८॥**

हे इन्द्रदेवता ! वृषाकपीले धेरै टाढाको र दुर्लभ पदार्थ पनि प्राप्त गर्न सकून् । विकार नाश गर्ने खड्ग, पकाउने स्थान, नयाँ चरु र काठदाउराले भरिएको यो गाडा तिमी ग्रहण गर । निश्चय पनि

इन्द्रदेवता सर्वश्रेष्ठ छन् ।

**अयमेमि विचाकशद् विचिन्वन् दासमार्यम् । पिबामि पाकसुत्वनोऽभि धीरमचाकशं विश्वस्मादिन्द्र उत्तरः ॥१९॥**

म इन्द्र हुँ, यजमानको निरीक्षण गर्दै, शत्रुहरूलाई पर हटाउँदै र आर्यहरूको खोजी गर्दै यज्ञमा उपस्थित भएको छु । सोम पेल्ने र हविष्यान्न तयार गर्ने मानिसहरूले समर्पित गरेको सोमलाई सेवन गर्दछु । बुद्धिमान् यजमानलाई उचित तरिकाले रक्षा गर्दछु । निश्चय पनि इन्द्रदेवता सर्वश्रेष्ठ छन् ।

**धन्व च यत् कृन्तत्रं च कति स्वित् ता वि योजना । नेदीयसो वृषाकपेस्तमेहि गृहाँ उप विश्वस्मादिन्द्र उत्तरः ॥२०॥**

पानीविनाको मरुभूमि र फाँडेर फ्याँक्नुपर्ने गरी बिकामे झारपात उम्रने ठाउँका बीचमा कति अन्तर हुन्छ ? त्यस्ता दुवैलाई मिलाउनुपर्ने हुन्छ । त्यसैले हे वृषाकपी ! नजिकै रहेका हाम्रा घरमा तिमी आश्रय ग्रहण गर । निश्चय पनि इन्द्रदेवता सर्वश्रेष्ठ छन् ।

**पुनरेहि वृषाकपे सुविता कल्पयावहै । य एष स्वप्ननंशनोऽस्तमेषि पथा पुनर्विश्वस्मादिन्द्र उत्तरः ॥२१॥**

हे वृषाकपी ! तिमी फर्केर फेरि आऊ । हामी इन्द्र र इन्द्राणी तिम्रा लागि सुखदायी श्रेष्ठ कर्महरू सम्पन्न गर्नेछौँ । तिमी निद्रा र स्वप्न हटाउने सूर्यको जस्तै सुगम मार्गबाट हाम्रा घरमा फर्किएर आऊ । निश्चय पनि इन्द्रदेवता सर्वश्रेष्ठ छन् ।

**यदुदञ्चो पृषाकपे गृहमिन्द्राजगन्तन । क्वऽस्य पुल्वघो मृगः कमगं जनयोपनो विश्वस्मादिन्द्र उत्तरः ॥२२॥**

हे वृषाकपी र इन्द्रदेवता ! तिमीहरू माथिबाट घुमफिर गर्दै हाम्रा घरमा प्रवेश गर । धेरै किसिमका भोक्ताहरूको हितका लागि तिमीहरू आनन्ददायक र विचरणशील हुँदै कता गएका थियौ ? निश्चय पनि इन्द्रदेवता सर्वश्रेष्ठ छन् ।

**पर्शुर्ह नाम मानवी साकं ससुव विंशतिम् । भद्रं भल त्यस्या अभूद् यस्या उदरमामयद् विश्वस्मादिन्द्र उत्तरः ॥२३॥**

मनुकी पुत्री स्पर्श अथवा पर्शु हुन् । उनले पाँच प्राण, पाँच तन्मात्रा र दस इन्द्रियका रूपमा एकै पटक बीस सन्तान जन्माएकी थिइन् । जुन पर्शुको पेट विशाल भएको थियो उनको सधैँ कल्याण होस् । निश्चय पनि इन्द्रदेवता सर्वश्रेष्ठ छन् ।

## सूक्त— १२७

**इदं जना उप श्रुत नराशंस स्तविष्यते । षष्टिं सहस्रा नवतिं च कौरम आ रुशमेषु दद्महे ॥१॥**

हे मानिसहरू हो ! इन्द्र आदि देवताको प्रशंसा र स्तुति गरिएका कुराहरू सुन । हे कर्मठ नायकका रूपमा रहेका कौरम ! हामी छ हजार नब्बे रुशम वीरहरूलाई पाउनासाथ नियुक्त गर्दछौँ ।

**उष्ट्रा यस्य प्रवाहणो वधूमन्तो द्विर्दश । वर्ष्मा रथस्य नि जिहीडते दिव ईषमाणा उपस्पृशः ॥२॥**

बीस वटा उँटले ती वीर र उनका पत्नीहरूलाई रथमा तान्दछन् । त्यस रथको शिर द्युलोक स्पर्श गर्ने इच्छा गरेझैँ गरी जाँदो छ ।

**एष इषाय मामहे शतं निष्कान् दश स्रजः । त्रीणि शतान्यर्वतां सहस्रा दश गोनाम् ॥३॥**

यस्ता श्रेष्ठ नरले मामह नामका ऋषिलाई सय स्वर्णमुद्रा, दस हार, तीन सय अश्व र दस हजार गाई दान गरेका थिए ।

**वच्यस्व रेभ वच्यस्व वृक्षे न पक्वे शकुनः । नष्टे जिह्वा चर्चरीति क्षुरो न भुरिजोरिव ॥४॥**
हे रेभ नामका स्तोता ! शब्द उच्चारण गरेर पाठ गर । पाठ गर्दाखेरि तिम्रो जिब्रो र ओठ पाकेका फलका हाँगामा चराको चुच्चो र कैँचीका फक्ल्याँटाभैँ अति चाँडो गतिमा चल्दछन् ।

**प्र रेभासो मनीषा वृषा गाव इवेरते । अमोतपुत्रका एषाममोत गा इवासते ॥५॥**
स्तोताहरू शक्तिसम्पन्न साँढेजस्तै गतिमान भइरहेका छन् । यिनीहरूका घर सुसन्तान र गाई आदिले भरिपूर्ण भएका छन् ।

**प्र रेभ धीं भरस्व गोविदं वसुविदम् । देवत्रेमां वाचं श्रीणीहीषुर्नावीरस्तारम् ॥६॥**
हे स्तोताहरू हो ! तिमीहरू गाईरूपी धन उपलब्ध गर्न र ऐश्वर्य सम्पदा प्राप्त गर्न प्रेरणा दिने खालको बुद्धि धारण गर । जसरी बाणको निसाना लगाउन जान्ने मानिस संरक्षण गर्न सक्ने हुन्छन्, उसै गरी वाणीले तिमीहरूलाई संरक्षण प्रदान गरोस् । देवताहरूका निकटमा तिमीहरूले यस्तै स्तोत्र गाउने गर ।

**राज्ञो विश्वजनीनस्य यो देवोऽमर्त्यौं अति । वैश्वानरस्य सुष्टुतिमा सुनोता परिक्षितः ॥७॥**
सर्वहितकारी, सबैमाथि शासन गर्ने र उचित किसिमले परीक्षण गरिएका राजाको श्रेष्ठ स्तुति सुन्ने गर, किनभने मानिसमध्येको श्रेष्ठ हुनाका कारण राजा देवतातुल्य हुने गर्दछन् ।

**परिच्छिन्नः क्षेममकरोत् तम आसनमाचरन् । कुलायन् कृण्वन् कौरव्यः पतिर्वदति जायया ॥८॥**
कौरव नामका कर्मठ पुत्रले घरको निर्माण गर्दै आफ्नी पत्नीसित तिमी सुन्दर राजसिंहासनमा विराजमान होऊ; अग्निको स्वरूप भएका परीक्षित राजाले हाम्रा लागि कल्याण गरेका छन् भन्दछन् ।

**कतरत् त आ हराणि दधि मन्थां परि श्रुतम् । जायाः पतिं वि पृच्छति राष्ट्रे राज्ञः परिक्षितः ॥९॥**
यज्ञको अग्निसमान विश्वस्त परीक्षित राजाका राष्ट्रमा स्त्रीले पतिलाई दही, मोही या रस आदिमा तिमीलाई कुन वस्तु तयार गरिदिऊँ भनेर सोध्ने गर्दछन् ।

**अभीवस्वः प्र जिहीते यवः पक्वः पथो बिलम् । जनः स भद्रेमेधति राष्ट्रे राज्ञः परिक्षितः ॥१०॥**
जसरी पाकेर तयार भएको जौ पेटरूपी थैलामा भरिन जान्छ, उसै गरी परीक्षितका राज्यमा सबै प्राणीका लागि कल्याण नै उपलब्ध हुन्छ ।

**इन्द्रः कारुमबूबुधदुत्तिष्ठ वि चरा जनम् । ममेदुग्रस्य चर्कृधि सर्व इत् ते पृणादरिः ॥११॥**
इन्द्रदेवताले स्तोताहरूलाई उठाऊन्, जनजागरणका निम्ति समाजमा विचरण गरून् र मजस्ता उग्र स्वभावका इन्द्रको स्तुति गरून् भनेर प्रेरित गरे । त्यसो भएमा सबै शत्रुले आएर आत्मसमर्पण गर्नेछन् ।

**इह गावः प्रजायध्वमिहाश्वा इह पूरुषाः । इहो सहस्रदक्षिणोऽपि पूषा नि षीदति ॥१२॥**
यहाँ मानिसका, अश्व र गाईले आफ्ना मनग्गे सन्तान जन्माएर वंशको वृद्धि गरून् । हजारौं किसिमका अनुदान सहयोग गर्ने पूषादेवता यसै ठाउँमा प्रतिष्ठित छन् ।

**नेमा इन्द्र गावो रिषन् मो आसां गोप रीरिषत् । मासाममित्रयुर्जन इन्द्र मा स्तेन ईशत ॥१३॥**
हे इन्द्रदेवता ! यस ठाउँमा गाईहरू हानीरहित होऊन् । गाई पाल्नेहरू पनि हानीरहित होऊन् र शत्रु तथा चोर यिनीहरूका स्वामी बन्न नपाऊन् ।

**उप नो न रमसि सूक्तेन वचसा वयं भद्रेण वचसा वयम् । वनादधिध्वनो गिरो न रिष्येम कदा चन ॥१४॥**
हे इन्द्रदेवता ! तिमीलाई हामी कल्याणकारी वाणीले हर्षित गराउँछौं । तिमीलाई हामी सूक्तहरूले

पनि हर्षित गराउँछौं । अन्तरिक्षबाट तिमी हाम्रो स्तोत्र सुन, हामी कहिल्यै विनाश नहोऔं ।

## सूक्त– १२८

**यः सभेयो विदथ्यः सुत्वा यज्वाथ पूरुषः । सूर्यं चामू रिशादसस्तद् देवाः प्रागकल्पयन् ॥१॥**

सभासद, विद्वत्सभाका सदस्य तथा सोम निष्पादक पुरुष जोजो छन्, तिनलाई र सूर्यलाई देवताका अगुवा बनाइएको छ ।

**यो जाम्या अप्रथयस्तद् यत् सखायं दुधूर्षति । ज्येष्ठो यदप्रचेतास्तदाहुरधरागिति ॥२॥**

बहिनीसित दुर्व्यवहार गर्ने, मित्रको हानी गर्ने, ठूलोबडो भईकन दुष्ट स्वभाव भएका जो हुन्छन् तिनीहरू पतित कहलाउँछन् ।

**यद् भद्रस्य पुरुषस्य पुत्रो भवति दाधृषिः । तद् विप्रो अब्रवीदु तद् गन्धर्वः काम्यं वचः ॥३॥**

जुन भद्र पुरुषको पुत्र घोटिएर काममा लाग्ने खालको पराक्रमी छ, त्यस्तो विप्र अभीष्ट वाणी प्रयोग गर्नमा सक्षम हुन्छ भनेर गन्धर्वले भनेका छन् ।

**यश्च पण रघुजिष्ठ्यो यश्च देवाँ अदाशुरिः । धीराणां शश्वतामहं तदपागिति शुश्रुम ॥४॥**

जुन व्यापारी आफूले उपभोग गर्नुभन्दा परि देवतालाई हविष्यान्न चढाउने भावना नै नभएको हुन्छ, त्यो सबै धीर पुरुषहरूमध्ये निम्न कोटिको हुने गर्दछ भन्ने हामीले सुनेका छौं ।

**ये च देवा अयजन्ताथो ये च परादृदिः । सूर्यो दिवमिव गत्वाय मघवा नो वि रप्शते ॥५॥**

जुन स्तोताहरू देवताको यज्ञ आदि कार्य गर्दछन् र अर्कालाई पनि दान दिन्छन्, तिनीहरू सूर्यको जस्तै तेजस्वी भएर स्वर्गलोकमा जान्छन् र ऐश्वर्यवान् इन्द्रको जस्तै शोभा प्राप्त गर्छन् ।

**योनाक्ताक्षो अनभ्यक्तो अमणि वो अहिरण्यवः । अब्रह्मा ब्रह्मणः पुत्रस्तोता कल्पेषु संमिता ॥६॥**

काजलविनाका आँखा, सिँगार, रत्न एवं आभूषणविनाको शरीर, ब्रह्मज्ञानविनाको ब्राह्मणपुत्र यी सबै एकै खालका दोषपूर्ण हुन् ।

**य आक्ताक्षः सुभ्यक्तः सुमणिः सुहिरण्यवः । सुब्रह्मा ब्रह्मणः पुत्रस्तोता कल्पेषु संमिता ॥७॥**

काजल लगाएका आँखा, सिँगार, उत्तम रत्न सुवर्ण आदिका आभूषणले सुसज्जित शरीर र ब्रह्मज्ञानले सम्पन्न विप्रको पुत्र यी सबै कल्पजस्तै श्रेष्ठ हुन् भन्ने मानिन्छ ।

**अप्रपाणा च वेशन्ता रेवाँ अप्रतिदिश्ययः । अयभ्या कन्या कल्याणी तोता कल्पेषु संमिता ॥८॥**

पिउने पानीविनाको पोखरी, दानको भावनाविनाको धनी, गृहस्थी धर्मविनाका कन्याको सौन्दर्य यी सबै कल्पजस्तै दोषपूर्ण मानिएका छन् ।

**सुप्रपाणा च वेशन्ता रेवान्त्सुप्रतिदिश्यय । सुयभ्या कन्या कल्याणी तोता कल्पेषु संमिता ॥९॥**

पिउनयोग्य पानी भएको तलाउ, उचित किसिमले दान दिने स्वभावको धनी, सुन्दर भईकन गृहस्थधर्म निर्वाह गर्ने कन्या यी सबै कुराहरू कल्पको जस्तै श्रेष्ठ मानिन्छन् ।

**परिवृक्ता त महिषी स्वस्त्या च युधिंगमः । अनाशुरश्चायामी तोता कल्पेषु संमिता ॥१०॥**

महारानीलाई त्याग्नु, स्वस्थ हुँदाहुँदै पनि लडाइँमा नजानु, तीव्र गतिविनाको घोडा, कुद्नै नसक्ने घोडा यी सबै कुराहरू कल्पझैं दोषपूर्ण हुन् ।

**वावाता च महिषी स्वस्त्या च युधिंगमः । श्वाशुरश्चायामी तोता कल्पेषु संमिता ॥११॥**

महारानी प्रिय हुनु, स्वस्थ हुनेबित्तिकै लडाइँमा जानु र उचित गतिले युक्त भएका घोडा हुनु यी सबै कुरा कल्पमा असल मानिन्छ ।

**यदिन्द्रादो दाशराज्ञे मानुषं वि गाहथाः । विरूपः सर्वस्मा आसीत् सह यक्षाय कल्पते ॥१२॥**

हे इन्द्रदेवता ! दाशराजका युद्धमा प्रवेश गरेर तिमीले मानिसहरूलाई मिचिसकेका थियौ । यस किसिमका पराक्रमले तिमी सबैका लागि सम्मानित भयौ । तिमी यक्षका साथमा प्रकट भएका हौ ।

**त्वं वृषाक्षुं मघवन्नम्रं मर्याकरो रविः । त्वं रौहिणं व्या स्यो वि वृत्रस्याभिनच्छिरः ॥१३॥**

हे इन्द्रदेवता ! तिमी विजयशील छौ । तिमीले मानिसका लागि सूर्यलाई नम्र गरायौ । तिमीले नै माथि चढ्न लागेका वृत्रको शिर काटेर खसाल्यौ ।

**यः पर्वतान् व्यदधाद् यो अपो व्यगाहथाः । इन्द्रो यो वृत्रहान्महं तस्मादिन्द्र नमोऽस्तु ते ॥१४॥**

जसले पर्वतशृङ्खला स्थापित गरे र जललाई प्रवाहित गरे, जो वृत्रासुरलाई संहार गर्दछन्, ती इन्द्रदेवता नै हुन् । हे इन्द्रदेवता तिमीलाई नमस्कार गर्छौं ।

**पृष्ठं धावन्तं हर्योरौच्चैः श्रवसमब्रुवन् । स्वस्त्यश्व जैत्रायेन्द्रमा वह सुस्रजम् ॥१५॥**

अघि बढिरहेका उच्चैःश्रवा नामका इन्द्रका घोडासँग याजकहरूले भने— हे अश्व ! विजयी हुनका लागि तिमी माला लगाएका इन्द्रलाई तिमी यहाँ लिएर आऊ ।

**ये त्वा श्वेता अजैश्रवसो हार्यो युञ्जन्ति दक्षिणम् । पूर्वा नमस्य देवानां बिभ्रदिन्द्र महीयते ॥१६॥**

हे अनुकूलताले नारिने गरेका अजश्रवा नामका अश्व ! सबैभन्दा पहिले नमस्कार गर्नुपर्ने इन्द्रलाई बोकेको हुनाले तिम्रो शुभ्रता अझै महान् हुने गरेको छ ।

## सूक्त– १२९

**एता अश्वा आ प्लवन्ते ॥१॥** **प्रतीपं प्राति सुत्वनम् ॥२॥**

यी अश्वा प्रवृत्तिका शक्तिहरू यहाँ उर्लँदै छन् । यिनले नष्ट हुने खालको प्रतिकूल ऐश्वर्य प्राप्त गरिरहेका छन् ।

**तासामेका हरिक्निका ॥३॥** **हरिक्निके किमिच्छसि ॥४॥**

शक्तिहरूमा एक हरी उन्मुख छन् । हे हरि नामका शक्तिहरू हो ! तिमीहरू के खोज्दै छ्यौ ?

**साधुं पुत्रं हिरण्ययम् ॥५॥** **क्याहतं परास्यः ॥६॥**

म साधुसज्जन पुत्र हिरण्यको खोजीमा लागेकी छु । तिमीले त्यो कहाँ छोडेका छौ ?

**यत्रामूस्तिस्रः शिंशपाः ॥७॥** **परि त्रयः ॥८॥**

जुन ठाउँमा तीन वटा छायादार वृक्षहरू छन्, उनलाई ती तीनकै छत्रछायामा छोडेको छु ।

**पृदाकवः ॥९॥** **शृङ्गं धमन्त आसते ॥१०॥**

पृदाकु नामको डर लाग्दो अजिङ्गरले आफ्नो शृङ्गी नामको विजय बाजा बजाएर बसेको छ ।

**अयन्महा ते अर्वाहः ॥११॥** **स इच्छकं सघाघते ॥१२॥**

तिमीलाई बोकेर लैजाने अश्व आयो । रहर गर्नेहरूलाई यसले सहायता गर्नेछ ।

**सघाघते गोमीद्या गोगतीरिति ॥१३॥** **पुमां कुस्ते निमिच्छसि ॥१४॥**

गाईरूपी वाणीका शक्तिले इन्द्रियरूपी गाईलाई मदत गर्दछ । हे पुरुष ! तिमी कस्तो गति खोज्दै छौ ?

**पल्प बद्ध वयो इति ॥१५॥** **बद्ध वो अघा इति ॥१६॥**

आयु सीमामा बाँधिएको छ । सीमामा बाँधिनु तिम्रा लागि पाप हो ।

अजागार केविका ॥१७॥ अश्वस्य वारो गोशपद्यके ॥१८॥

अजा नामको प्रकृतिको यस घरमा इन्द्रियरूपी सेविकाहरू छन् । तिमी अश्वरूपी शक्तिमा सवार गरेर त्यसलाई नियन्त्रण गर्दछौ । गाईका खुर वा पाइलामा हराएका छौ ?

श्येनीपती सा ॥१९॥ अनामयोपजिह्विका ॥२०॥

यो बुद्धिरूपी प्रकृति गतिशील शक्तिकी स्वामिनी हो । आरोग्यलाई त्यसले नै जगाउँछ ।

## सूक्त– १३०

को अर्य बहुलिमा इषूनि ॥१॥

कुन आर्य श्रेष्ठले धेरै किसिमका बाणहरू लिएर राखेको छ ?

को असिद्याः पयः ॥२॥

असत्यरूपी असिद्को पोषक तत्त्व भनेको के हो ?

को अर्जुन्याः पयः ॥३॥

सत्यरूपी अर्जुनीको पोषक तत्त्व के हो ?

कः कार्ष्ण्याः पयः ॥४॥

कार्ष्णी अर्थात् तमोगुणलाई बढाउने त्यसको पोषक तत्त्व के हो ?

एतं पृच्छ कुहं पृच्छ ॥५॥

यस किसिमका विषयमा जानेका छैनौ भनेदेखि सोध ।

कुहाकं पक्वकं पृच्छ ॥६॥

कुनै अद्भुत कुशलता प्राप्त गरेका व्यक्तिसित सोध ।

यवानो यतिस्वभिः कुभिः ॥७॥

प्रयत्न गर्ने व्यक्तिसित र प्रचुर धनधान्यले सम्पन्न धर्तीसित सोधेर जान ।

अकुप्यन्तः कुपायकुः ॥८॥

प्रकृतिको गोप्य कुराको मर्म जान्ने व्यक्तिसित सोधेर जान ।

आमणको मणत्सकः ॥९॥

हे आमणक ! हे मणत्सक देवताहरू हो !

देव त्वप्रतिसूर्य ॥१०॥

तिमीहरू देवता हौ, तिमीहरू सूर्यका रूप हौ ।

एनश्चिपङ्क्तिका हविः ॥११॥

यो पाप नाश गर्ने हवि हो ।

प्रदुद्रुदो मघाप्रति ॥१२॥

यो ऐश्वर्य प्राप्त गर्नमा गति प्रदान गर्ने हवि हो ।

शृङ्ग उत्पन्न ॥१३॥

हे प्रकट भइसकेका सिङरूपी पीडादायक अस्त्र !

मा त्वाभि सखा नो विदन् ॥१४॥

हाम्रा मित्र वा आफन्तहरू तिमीहरूसित फेला नपरुन् ।

वशायाः पुत्रमा यन्ति ॥१५॥

वशारूपी प्रकृतिले पुत्र प्राप्त गराउँछिन् ।

इरावेदुमयं दत ॥१६॥

ज्ञानसम्पन्न इरारूपी वाणी या भूमि यसलाई प्रदान गर ।

अथो इयन्नियन्निति ॥१७॥

यो चलिरहने अवस्थामा रहोस् ।

**अथो इयन्निति ॥१८॥**
अभै यो चर्ली नै रहने किसिमको होस् ।
**अथो श्वा अस्थिरो भवन् ॥१९॥**
अब यो श्वानजस्तो अस्थिर भएको ... ।
**उयं यकांशलोकका ॥२०॥**
त्यसले निश्चय पनि कष्टदायक लोकको हुनुपर्छ ।

## सूक्त-- १३१

**आमिनोनिति भद्यते ॥१॥**
यो परम तत्त्व नै विभक्त भएको हो भन्ने गरिन्छ ।
**तस्य अनु निभञ्जनम् ॥२॥**
त्यस परम तत्त्वको फेरि पनि निरन्तर विभाजन नै भइरह्यो ।
**वरुणो याति वस्वभिः ॥३॥**
वरणशील वरुणदेवता धनसम्पत्तिका साथ गतिमान अवस्थामा चलिरहेका छन् ।
**शतं वा भारती शवः ॥४॥**
यस प्रक्रियामा सयौँ भारती विद्याहरूको बल संलग्न रहेको छ ।
**शतमाश्वा शिरण्ययाः । शतं रथ्या हिरण्ययाः शतं कुथा हिरण्ययाः । शतं निष्का हिरण्ययाः ॥५॥**
यसै प्रक्रियाबाट हिरण्य नामका तेजस् तत्त्वबाट सयौँ किसिमका अश्व, सयौँ वटा रथ, सयौँ खालका आसन गद्दीहरू र सयौँ किसिमका हिरण्ययुक्त हारहरू उत्पन्न भएका हुन् ।
**अलह कुश वर्त्तक ॥६॥**
हलो प्रयोग नगरे पनि त्यस परम तत्त्वसँग कुशका वर्तन आदि प्रयोग गर्ने सामग्री छन् ।
**शफेन इव ओहते ॥७॥**
त्यसले खुरले खोस्रिएभैँ सजिलै खन्ने काम गर्दछ ।
**आय वनेनती जनी ॥८॥**
हे परम तत्त्व ! बच्चालाई खेलाउन निहुरिने आमाभैँ तिमी आऊ ।
**वनिष्ठा नाव गृह्यन्ति ॥९॥**
निष्ठावान्हरू आफ्ना कर्तव्य देखेर अल्मलिँदैनन् वा रोकिँदैनन् ।
**इदं मह्यं मदूरिति ॥१०॥**
यस किसिमले बताइएको कुरो हाम्रा निम्ति आनन्ददायक छ ।
**ते वृक्षाः सह तिष्ठति ॥११॥**
बोटविरुवाका साथमा त्यसरी रहने गरेको छ त्यो को होला ?
**पाक बलिः ॥१२॥**
त्यो परिपक्व भएको बालीनाली हुनुपर्छ ।
**शक बलिः ॥१३॥**
त्यो बालीनाली पोषणशक्ति भएको होला ।
**अश्वत्थ खदिरो धवः ॥१४॥**
अश्वत्थजस्तो स्थिर र बलियो अधिकारसम्पन्न छ ।
**अरदुपरम ॥१५॥**
शौर्यहीन भएको जुन हुन्छ ... ।
**शयो शत इव ॥१६॥**
सुतेकै कारणले मृत्युको मुखमा पुगेको जस्तो हुन्छ; त्यसको दुर्गति हुन्छ ।

**व्याप पूरुषः ॥१७॥**

व्याप्त रहने पुरुषार्थीले ... ।

**अदूहमित्यां पूषकम् ॥१८॥**

दोहन नगरीकन पनि पोषण प्रदान गर्न सक्छ ।

**अत्यर्धर्च परस्वतः ॥१९॥**

त्यस्ता अत्यन्त स्तुति गर्न योग्य पालकलाई पूजाअर्चना गरौं ।

**दौव हस्तिनो दृती ॥२०॥**

हात्तीसित दुई खालका दृति अर्थात् दाँत वा छाला हुन्छ ।

## सूक्त– १३२

**आदलाबुकमेककम् ॥१॥** **अलाबुकं निखातकम् ॥२॥**

**कर्करिको निखातकः ॥३॥** **तद् वात उन्मथायति ॥४॥**

यो अलाबुक नामको नडुब्ने किसिमको तुम्बोजस्तो एउटै छ । यो एक खनिएको खाडलजस्तो छ । क्रियाशील परमात्माले नै त्यो खाडल खनेका हुन् । त्यस तुम्बालाई प्राणरूपी वायुले फुक्ने र हलचल गराउने गर्दछ ।

**कुलायं कृणवादिति ॥५॥** **उग्रं वनिषदाततम् ॥६॥**

**न वनिषदनाततम् ॥७॥** **क एषां कर्करी लिखत् ॥८॥**

यस्तो ब्रह्म या जीवले आफ्नो स्थान आफैँले निर्माण गर्दछ । त्यो उग्र तेजयुक्त र विस्तृत भएको देखिन्छ । जुनचाहिँ विस्तृत भएन त्यो देखिँदैन पनि । कसले यसलाई पानी छान्ने कर्करीजस्तो रूपमा बनायो ?

**क एषां दुन्दुभिं हनत् ॥९॥** **यदीयं हनत् कथं हनत् ॥१०॥**

कसले यसलाई दुन्दुभिको रूपमा तयार गरेको हो ? यदि यसलाई कसैले बजायो भने कसरी बजायो ?

**देवी हनत् कुहनत् ॥११॥** **पर्यागारं पुनः पुनः ॥१२॥**

दिव्य चेतनाले यस नगाडालाई बजायो भने कहाँ बजाउँछ ? यसलाई सबैका आवासमा चारैतिर बारम्बार बजाउँछ ।

**त्रीण्युष्ट्रस्य नामानि ॥१३॥** **हिरण्यं इत्येके अब्रवीत् ॥१४॥**

उँटका पनि तीन किसिमका नामहरू छन् । ती तीन नामहरूमध्ये एउटा हिरण्य पनि हो भन्छन् ।

**द्वौ वा ये शिशवः ॥१५॥** **नीलशिखण्डवाहनः ॥१६॥**

यी दुई वटा शिशु हुन् । नीलो शिखा भएको मयूर वा अग्नि नै यिनको वाहन हो ।

## सूक्त– १३३

**विततौ किरणौ द्वौ तावा पिनष्टि पूरुषः । न वै कुमारि तत् तथा यथा कुमारि मन्यसे ॥१॥**

फैलिएका दुई किरणहरूलाई यस पुरुषले पेलिरहेको हुन्छ । हे कुमारी ! तिमीले जस्तो ठानेकी छ्यौ यो त्यस्तो होइन ।

**मातुष्टे किरणौ द्वौ निवृत्तः पुरुषानृते । न वै कुमारि तत् तथा यथा कुमारि मन्यसे ॥२॥**

तिम्री माताबाट यी दुवै किरणहरू कुनै पुरुषविना नै पनि निवृत्त र निःसृत भएका छन् । हे कुमारी ! तिमीले जस्तो ठानेकी छ्यौ यो त्यस्तो होइन ।

**निगृह्य कर्णकौ द्वौ निरायच्छसि मध्यमे । न वै कुमारि तत् तथा यथा कुमारि मन्यसे ॥३॥**

हे मध्यम अवस्थामा रहेर जडचेतनलाई संयुक्त गराउने सत्ता ! तिमीहरू दुवै किनारालाई आफ्ना वशमा गरेर तिनलाई नियन्त्रित गराउँछौ । हे कुमारी ! तिमीले जस्तो ठानेकी छ्यौ यो त्यस्तो होइन ।

**उत्तानायै शयानायै निष्ठन्ती वाव गूहसि । न वै कुमारि तत् तथा यथा कुमारि मन्यसे ॥४॥**

यस प्रकृतिले उभिएका, सुतेका, पल्टेका वा सबै किसिममा रहेकालाई ढाकेर अडिएको छ । हे कुमारी ! तिमीले जस्तो ठानेकी छ्यौ यो त्यस्तो होइन ।

**श्लक्ष्णायां श्लक्ष्णिकायां श्लक्ष्णमेवाव गूहसि । न वै कुमारि तत् तथा यथा कुमारि मन्यसे ॥५॥**

यो स्नेहयुक्त प्रकृतिले स्नेह गर्नेहरूसित आफ्नो स्नेहलाई ढाकेर राखेको छ । हे कुमारी ! तिमीले जस्तो ठानेकी छ्यौ यो त्यस्तो होइन ।

**अवश्लक्ष्ममिव भ्रंशदन्तर्लोममति ह्रदे । न वै कुमारि तत् तथा यथा कुमारि मन्यसे ॥६॥**

तेलीय पदार्थजस्तो जो तल ओर्लिएर रौँले ढाकिएको हृदयमा समेटिने गर्दछ । हे कुमारी ! तिमीले जस्तो ठानेकी छ्यौ यो त्यस्तो होइन ।

## सूक्त– १३४

**इहेत्थ प्रागपागुदगधराग्–अरालागुदभर्त्सथ ॥१॥**

यहाँ यस संसारमा यस किसिमले पूर्व, पश्चिम, उत्तर एवं दक्षिण दिशाहरूमा द्वेष गर्नेलाई भर्त्सना गर्ने आदित्यदेवता रहेका छन् ।

**इहेत्थ प्रागपागुदगधराग्–वत्साः पुरुषन्त आसते ॥२॥**

यहाँ यस संसारमा यस किसिमले पूर्व, पश्चिम, उत्तर एवं दक्षिण दिशाहरूमा बालकहरू पुरुषार्थका लागि रहेका छन् ।

**इहेत्थ प्रागपागुदगधराग्–स्थालीपाको वि लीयते ॥३॥**

यहाँ यस संसारमा यस किसिमले पूर्व, पश्चिम, उत्तर एवं दक्षिण दिशाहरूमा स्थालीपाक अर्थात् पाकेको पदार्थ थालीमा भरिएर रहेको छ ।

**इहेत्थ प्रागपागुदगधराग्–स वै पृथु लीयते ॥४॥**

यहाँ यस संसारमा यस किसिमले पूर्व, पश्चिम, उत्तर एवं दक्षिण दिशाहरूमा त्यसरी पाकेको पदार्थ बढी मात्रामा प्राप्त हुने गर्दछ ।

**इहेत्थ प्रागपागुदगधराग्–आष्टे लाहणि लीशाथी ॥५॥**

यहाँ यस संसारमा यस किसिमले पूर्व, पश्चिम, उत्तर एवं दक्षिण दिशाहरूमा प्रेरक शक्ति वा बुद्धिले विस्तार पाउँछ ।

**इहेत्थ प्रागपागुदगधराग्–अक्ष्लिली पुच्छिलीयते ॥६॥**

यहाँ यस संसारमा यस किसिमले पूर्व, पश्चिम, उत्तर एवं दक्षिण दिशाहरूमा व्यावहारिक बुद्धिका विषयमा सोधखोज हुने गर्दछ ।

## सूक्त– १३५

**भुगित्यभिगतः शलित्यपक्रान्तः फलित्यभिष्ठितः । दुन्दुभिमाहननाभ्यां जरितरोऽथामो दैव ॥१॥**

भोक्ता प्रत्यक्ष रूपमा अगाडि रहन्छ । गतिशील जीव अपक्रान्त शरीरलाई छोडेर निस्केर जान्छ अनि कर्मफल नै त्यसको प्रतिफलका रूपमा अभितिष्ठित अवस्थामा चारैतिर रहन्छ । हे जरित स्तोता ! दैवरूपी नियन्तालाई दुन्दुभिको धुनका रूपमा प्रतिष्ठा बढाउनका लागि हामी वाणी र कर्म दुईको ध्वनि उत्पन्न गर्दछौँ ।

**कोशबिले रजनि ग्रन्थर्धानमुपानहि पादम् । उत्तमां जनिमां जन्यानुत्तमां जनीन् वर्त्मन्यात् ॥२॥**

कोशका अन्तःकरणमा राखेको धनजस्तो, उत्तम जननीको व्यवस्थामा, गाँठो बाँधिएको धनजस्तै उत्पन्न भएका मानिसमा तथा गोडामा जुताभैँ उत्पन्न भएका पदार्थहरूमा त्यो दिव्य चेतनारूपी

परमात्मा स्थित छ ।

**अलाबूनि पृषातकान्यश्वत्थपलाशम् । पिपीलिकावटश्वसो विद्युत्स्वापर्णशफो गोशफो जरितरोऽथामो दैव ॥३॥**

तुम्बी, घिउको थोपो, पिपल, पलाश, चिम्टी, बरको कोपिला, जलमा विजुलीको किरण, गाईको खुरको पाइलो आदि जसरी माथिल्लो सतहमा नै रहेका हुन्छन्, उसै गरी स्तोताहरू स्तोत्र पाठ गरेर देवशक्तिलाई माथि उठाइरहन्छन् ।

**वी मे देवा अक्रंसताध्वर्यो क्षिप्रं प्रचर । सुसत्यमिद् गवामस्यसि प्रखुदसि ॥४॥**

यज्ञका समयमा देवगण विशेष रीतिले सक्रिय हुने गर्दछन् । हे अध्वर्युहरू हो ! चाँडो गर । तिम्रो सुसत्य वाणीले यिनीहरूलाई र तिमीहरूलाई आनन्द प्रदान गर्नेछ ।

**पत्नी यदृशयते पत्नी यक्ष्यमाणा जरितरोऽथामो दैव । होता विष्टीमेन जरितरोऽथामो दैव ॥५॥**

यस बेला पत्नीका रूपमा रहेको पालनकर्त्री प्रकृति पोषिकाका रूपमा देखिँदै छिन् । हे स्तोताहरू हो ! देवताहरूलाई माथि उठाओ । परमात्मा यिनीभित्र प्रविष्ट गरेका छन् । हे होता ! देवताहरूलाई आहुति र स्तोत्रले माथि उठाओ ।

**आदित्या ह जरितरङ्गिरोभ्यो दक्षिणामनयन् । तां ह जरितः प्रत्यायंस्तामु ह जरितः प्रत्यायन् ॥६॥**

आदित्यले नै स्तुति गर्ने अङ्गिराहरूलाई दक्षिणा प्रदान गरे । त्यस दक्षिणालाई स्तोताहरूले प्राप्त गरे र त्यसलाई उनीहरूले स्वीकार गरे ।

**तां ह जरितर्नः प्रत्यगृभ्णंस्तामु ह जरितर्नः प्रत्यगृभ्णः । अहानेतरसं न वि चवेतनानि यज्ञानेतरसं न पुरोगवामः ॥७॥**

त्यस दक्षिणालाई जरिता नामका स्तोताहरूले हाम्रा निम्ति प्राप्त गरेर स्वीकार गरे । हामीले प्राप्त गरेको पदार्थमा बल सञ्चार गर्ने र यज्ञमा बल सञ्चार गर्ने चेतनालाई अघि सरेर स्वीकार गर्दछौँ ।

**उत श्वेत आशुपत्वा उतो पद्याभिर्यविष्ठः । उतेमाशु मानं पिपर्ति ॥८॥**

यो सेतो तेजस्वी बलवान् पदले शीघ्र गमन गर्दछ । यो निश्चित रूपले शीघ्रतापूर्वक कार्य या लक्ष्यको निर्धारित मात्रा पूरा गर्दछ ।

**आदित्या रुद्रा वसवस्त्वेनु त इदं राधः प्रति गृभ्णीह्यङ्गिरः । इदं राधो विभु प्रभु इदं राधो बृहत् पृथु ॥९॥**

हे अङ्गिरा ! आदित्य, वसु, रुद्र आदिले तिमीलाई अनुदान दिने गर्दछन् । तिमी यो धन स्वीकार गर । यो धन नै प्रभावयुक्त प्रभु, विभूतियुक्त विभु, बृहत् र विस्तृत हुने पृथु हो ।

**देवा ददत्वासुरं तद् वो अस्तु सुचेतनम् । युष्माँ अस्तु दिवेदिवे प्रत्येव गृभायत ॥१०॥**

हे अङ्गिराका रूपमा रहेका मानिसहरू हो ! देवताहरूले तिमीहरूलाई जुन बल प्रदान गर्नेछन्, त्यो सुचेतनासम्पन्न होस् र तिमीहरूलाई प्रत्येक दिन प्राप्त होस् । तिमीहरू त्यसलाई प्रत्यक्ष रूपमा स्वीकार गर ।

**त्वमिन्द्र शर्मरिणा हव्यं पारावतेभ्यः । विप्राय स्तुवते वसुवनिं दुरश्रवसे वह ॥११॥**

हे इन्द्रदेवता ! तिमीले प्राणीहरूका लागि आश्रय र हव्यरूपी आहार पुऱ्याउने गर्दछौ । याजक विप्रहरू र स्तोताहरूका लागि धन आदि वहन गर ।

**त्वमिन्द्र कपोताय च्छिन्नपक्षाय वञ्चते । श्यामाकं पक्वं पीलु च वारस्मा अकृणोर्बहुः ॥१२॥**

हे इन्द्रदेवता ! तिमीले पँखेटाले नै चल्ने गरेको परेवारूपी सहनशीलहरूका लागि पनि अनेकौं पटक दान, पाकेको अन्न, फल, जल आदि धेरै पटक उत्पन्न गरेका छौ ।

अरंगरो वावदीति त्रेधा बद्धो वरत्रया । इरामह प्रशंसतयनिरामप सेधति ॥१३॥
तीन किसिमले तीन पासामा बाँधिएका अङ्गिराले बारम्बार भन्दछन् कि उनी श्रेष्ठ अन्नको प्रशंसा गर्दछन् र निन्दित अन्नलाई पर हटाउँछन् ।

## सूक्त– १३६

यदस्या अंहुभेद्याः कृधु स्थूलमुपातसत् । मुष्काविदस्या एजतो गोशफे शकुलाविव ॥१॥
जब यस वेदिका वा धराको सूक्ष्म, तथा स्थूल भाग नष्ट गरिन्छ, त्यस बेला दोष निवारक विशेष ज्ञानले सम्पन्न व्यक्तिहरू गाईको खुरको पाइलो जति स्थानमा दुई वटा माछाभैँ कम्पित हुने गर्दछन् ।

यथा स्थूलेन पससाणौ मुष्का उपावधीत् । विष्वञ्चा वस्या वर्धतः सिकतास्वेव गर्दभौ ॥२॥
जब स्थूल पापनाशकले विषनाशक अणुलाई प्रहार गर्दछ, त्यस बेला धुलो भरिएका क्षेत्रमा गधाको जस्तै तिनका दुई किसिमका सन्तानहरूको विकास हुने गर्छ ।

यदल्पिकास्वल्पिका कर्कधूकेवपद्यते । वासन्तिकमिव तेजनं यन्त्यवाताय वित्पति ॥३॥
जब वयरको दानाभैँ र त्यसभन्दा अत्यन्त ससाना कणले गमन गर्दछन्, त्यस बेला वायुरहित क्षेत्रका लागि वसन्त ऋतुजस्तै तेजस्विता र उर्वरता प्राप्त गर्दछन् ।

यद् देवासो ललामगुं प्रविष्टीमिनमाविषुः । सकुला देदिश्यते नारी सत्यस्याक्षिभुवो यथा ॥४॥
जब देवतातुल्य प्रवाहि, प्रधानतायुक्त उत्तम या कोमल क्षेत्रमा प्रवेश गर्दछ, त्यस बेला नारीका आँखाले देखेको सत्यताजस्तै कुल सम्पन्न हुने गर्दछ ।

महानग्न्य तृम्नद्वि मोक्रददस्थानासरन् । शक्तिकानना स्वचमशकं सक्तु पद्यम ॥५॥
महान् अग्नि स्थिर भावले आएर दुवै नरनारी या पृथ्वी आकाशलाई तृप्त गरून् । हामी शक्तिका बगैँचाबाट आफ्ना चमस आदिमा खाद्य पदार्थ, सत्तु आदि प्राप्त गर्दछौँ ।

महानग्न्यु लूखलमतिक्रामन्त्यब्रवीत् । यथा तव वनस्पते निरघ्नन्ति तथैवति ॥६॥
महान् अग्निदेवताले ओखललाई अतिक्रमण गरिसकेर हे वनस्पति ! तिमीलाई जुन कारणले कुटिएको हो, त्यो यज्ञ सम्पन्न होस् भने ।

महानग्न्युप ब्रूते भ्रष्टोऽथाप्यभूभुवः । यथैव ते वनस्पते पिप्पति तथैवति ॥७॥
महान् अग्निदेवताले भने हे वनस्पति ! तिमी नष्ट भएपछि पनि फेरि उत्पन्न हुन्छौ । त्यसैले हामी तिमीलाई पिँध्ने गर्दछौँ । यस यज्ञमा यसरी नै प्रयोग गरिन्छ ।

महानग्न्युप ब्रूते भ्रष्टोऽथाप्यभूभुवः । यथा वयो विदाह्य स्वर्गे नमवदह्यते ॥८॥
महान् अग्निदेवताले भने हे वनस्पति ! तिमी नष्ट भएपछि पनि फेरि उत्पन्न हुन्छौ । जसरी जीवन समाप्त भएर स्वर्ग प्राप्त हुन्छ उसै गरी नमस्कारपूर्वक हविका रूपमा तिमीलाई होम्ने गरिन्छ ।

महानग्न्युप ब्रूते स्वसावेशितं पसः । इत्थं फलस्य वृक्षस्य शूर्पे शूर्पं भजेमहि ॥९॥
महान् अग्निदेवताले भने विश्व वा प्रत्येक शरीरमा विद्यमान अग्निले पापनाशक पसलाई आवेशित गरेका छन् । हामी यसै प्रक्रियामा उत्पन्न वृक्षका फललाई सेवन गर्दछौँ ।

महानग्री कृकवाकं शम्यया परि धावति । अयं न विद्म यो मृगः शीर्ष्णा हरति धाणिकाम् ॥१०॥
महान् अग्नि कृक जस्तै ध्वनि निकाल्दै शमी काठबाट निस्केर दौडन्छन् । कुन खालका भूचर मृगले आफ्ना शिरमा धाणिका नामको अन्नको भण्डार लिएको हुन्छ भन्ने कुरो थाहा छैन ।

महानग्री महानग्रं धावन्तमनु धावति । इमास्तदस्य गा रक्ष यभ मामद्ध्यौदनम् ॥११॥
महान् अग्नि दौडँदै महान अग्निकै पछि लागेका हुन्छन् । तिमी यी गाईरूपी इन्द्रिय, भूमि वा वाणीको रक्षा गर । हे नियमका अधिपति यम ! हामीलाई अन्न खुवाऊ ।

**सुदेवस्त्वा महानग्नीर्बबाधते महतः साधु खोदनम् । कुसं पीवरो नवत् ॥१२॥**

हे सुदेव ! तिमीलाई महान् अग्निले महत्त्वपूर्ण र प्रशंसनीय ऐश्वर्यका लागि बाध्य गराउँछन् । उनले ख्याउटे र ठूलो शरीर हुने सबै खालकालाई झुकाउँछन् ।

**वशा दग्धामिमाङ्गुरिं प्रसृजतोऽग्रतं परे । महान्न वै भद्रो यभ मामद्धयौदनम् ॥१३॥**

वशमा राखिएको जीवनशक्तिले जलेको औँलोजस्तो भएर उग्रतालाई पर हटाउँछ । यस्तो महान् कल्याणकारी यमको रूप नै हो । हामीलाई ओदनरूपी पाकेको अन्न खुवाऊ ।

**विदेवस्त्वा महानग्नीर्विबाधते महतः साधु खोदनम् । कुमारिका पिङ्गलिका कार्द भस्मा कु धावति ॥१४॥**

हे विशिष्ट देवता ! तिम्रो महान् अग्नि अत्यन्त प्रशंसनीय ऐश्वर्य प्राप्त गर्नका लागि बाध्य गराउँछ । कुमारी पिङ्गलिका सद्य, कार्द आदि भस्म गराउँदै पृथ्वीमा दौडन्छिन् ।

**महान् वै भद्रो बिल्वो महान् भद्र उदुम्बरः । महाँ अभिक्त बाधते महतः साधु खोदनम् ॥१५॥**

कल्याणकारी बेल अथवा भेदक अग्नि महान् छन । कल्याणकारी डुम्री या शक्तिशाली अग्नि पनि महान् छन् । यस्तो महान् प्रतिष्ठाले सम्पन्न ठूलो र प्रशंसनीय ऐश्वर्यका लागि बाध्य गराउँछन् ।

**यः कुमारी पिङ्गलिका वसन्तं पीवरी लभेत् । तैलकुण्डमिमाङ्गुष्ठं रोदन्तं शुदमुद्धरेत् ॥१६॥**

जुन कुमारी पिङ्गलिकाले वसन्तरूपी यौवनलाई प्राप्त गर्दछिन्, उनले तातेको तेलकुण्डरूपी व्यसनहरूमा पीडाको अनुभव गर्दै शुद्धतालाई उद्धार गर्दछिन् ।

## सूक्त– १३७

**ऋषि–** शिरिम्बिठि, बुध, वामदेव, ययाति, तिरश्चीराङ्गिरस, द्युतान, सुकक्ष । **देवता–** अलक्ष्मीनाशन, वैश्वदेवी, ऋत्विक्स्तुति, दधिक्रा, सोम पवमान, मरुद्गण, इन्द्राबृहस्पती । **छन्द–** अनुष्टुप्, जगती, त्रिष्टुप्, गायत्री ।

**यद्ध प्राचीरजगन्तोरो मण्डूरधाणिकीः । हता इन्द्रस्य शत्रवः सर्वे बुदबुदयाशवः ॥१॥**

गोला धारण गर्नेले जब अघि सरेर जान थालेपछि वीर इन्द्रदेवताका सबै शत्रुहरू पानीको फिँजझैँ विनाश हुन थाल्दछन् ।

**कपृन्नरः कपृथमुद् दधातन चोदयत खुदत वाजसातये । निष्टिग्रयः पुत्रमा च्यावयोतय इन्द्रं सबाध इह सोमपीतये ॥२॥**

हे कर्मशील मानिसहरू हो ! इन्द्रदेवता श्रेष्ठ सुखदाता हुन् । उनै सुखदायक इन्द्रदेवतालाई आफ्ना अन्तरङ्गमा धारण गर र अन्न, बल, ऐश्वर्य आदि प्राप्त गर्नका लागि उनैलाई प्रेरित गर । उनलाई प्रार्थना गर र उनलाई शान्ति प्रदान गर । यस भूलोकमा संरक्षण, कष्टको निवारण आदि गर्नका लागि र सोमपान गर्नका लागि अदितिका पुत्र इन्द्रदेवतालाई आह्वान गर ।

**दधिक्राव्णो अकारिषं जिष्णोरश्वस्य वाजिनः । सुरभि नो मुखा करत् प्र ण आयूंषि तारिषत् ॥३॥**

हामी विजयले सम्पन्न, व्यापक तथा वेगवान, दधिक्रादेवतालाई प्रार्थना गर्दछौँ । उनले हाम्रो मुख आदि इन्द्रियलाई सुरभित तथा श्रेष्ठ बनाऊन र आयु वृद्धि गराऊन् ।

**सतासो मधुमत्तमाः सोमा इन्द्राय मन्दिनः । पवित्रवन्तो अक्षरन् देवान् गच्छन्तु वो मदाः ॥४॥**

मधुर र हर्षप्रदायक सोमरस पवित्र भएर इन्द्रदेवताका लागि तयार हुने गर्दछ । हे सोमदेवता तिम्रो यो आनन्ददायक रस देवताहरूका निकटमा पुगोस् ।

**इन्दुरिन्द्राय पवत इति देवासो अब्रुवन् । वाचस्पतिर्मखस्यते विश्वस्येशान ओजसा ॥५॥**

शास्त्रको नियमअनुसार इन्द्रदेवताका लागि सोमरस शोधित हुन्छ । त्यही ज्ञानरक्षक, समर्थ सोम

यज्ञमा प्रयुक्त हुने गर्दछ ।

**सहस्रधारः पवते समुद्रो वाचमीङ्खयः । सोमः पती रयीणां सखेन्द्रस्य दिवेदिवे ॥६॥**

वाणीलाई प्रेरित गर्ने, ऐश्वर्यवान् इन्द्रदेवताको प्रिय मित्र सोम प्रतिदिन सहस्रौँ धाराले कलशमा शोधित हुने गर्दछ ।

**अव द्रप्सो अंशुमतीमतिष्ठदियानः कृष्णो दशभिः सहस्रैः । आवत् तमिन्द्रः शच्या धमन्तमपस्नेहितीर्नृमणा अधत्त ॥७॥**

अत्यन्त चाँडो गतिले कुद्न सक्ने दस हजार सैनिक भएको आक्रमण गर्ने, सम्पूर्ण संसारलाई दुःख दिने अंशुमती पनि नाम भएको यमुना नदीका किनारमा बसेको सबैलाई आफ्ना चङ्गुलमा फँसाउन सक्ने कृष्णासुरमाथि सबैले प्रिय मान्ने गरेका इन्द्रदेवताले प्रत्याक्रमण गरे र सेनासहित त्यसलाई पराजित गराइदिए ।

**द्रप्समपश्यं विषुणे चरन्तमुपह्वरे नद्यो अंशुमत्याः । नभो न कृष्णमवतस्थिवांसमिष्यामि वो वृषणो युध्यताजौ ॥८॥**

अंशुमती नदीका किनारका गुफाहरूमा घुम्ने गरेका कृष्णासुरलाई सूर्यले झैँ हामीले पनि देखेका छौँ । हे शक्तिशाली मरुत्हरू हो ! हामी तिमीहरूका सहयोगको आकाङ्क्षा गर्दछौँ । सङ्ग्राममा उसलाई संहार गर ।

**अध द्रप्सो अंशुमत्या उपस्थेऽधारयत् तन्वं तित्विषाणः । विशो अदेवीरभ्याश्चरन्तीर्बृहस्पतिना युजेन्द्रः ससाहे ॥९॥**

अंशुमती नदीका किनारमा शीघ्रगामी कृष्णासुर तेजसम्पन्न भएर निवास गर्दछ । इन्द्रदेवताले बृहस्पतिको सहायताले सबै तिरबाट आक्रमण गर्नका लागि अघि सर्दै आएका उसका सेनालाई परास्त गरे ।

**त्वं ह त्यत् सप्तभ्यो जायमानोऽशत्रुभ्यो अभवः शत्रुरिन्द्र । गूळ्हे द्यावापृथिवी अन्वविन्दो विभुमद्भ्यो भुवनेभ्यो रणं धाः ॥१०॥**

हे जन्मजात शत्रु नै नभएका इन्द्रदेवता ! वृत्रासुर र सात राक्षसहरू उत्पन्न हुँदा नै तिमी उनीहरूका शत्रु बनेका थियौ । राक्षसले बनाएको अन्धकारबाट द्युलोक र पृथ्वीलाई उद्धार गरेर तिमीले प्रकाशित गरायौ । अब तिमीले यिनका लोकहरूलाई पनि उचित किसिमले स्थिर गराएर ऐश्वर्यवान् र सौन्दर्यशाली बनाइदियौ ।

**त्वं ह त्यदप्रतिमानमोजो वज्रेण वज्रिन् धृषितो जघन्थ । त्वं शुष्णस्यावातिरो वधत्रैस्त्वं गा इन्द्र शच्येदविन्दः ॥११॥**

वज्र धारण गर्ने हे इन्द्रदेवता ! तिमी शत्रुलाई दमन गर्ने हौ । असीमित शक्ति भएको शुष्णासुरलाई तिमीले आफ्ना वज्रले विनाश गर्‍यौ । राजर्षि कुत्सका लागि तिमीले त्यस शुष्णासुरलाई आफ्ना हतियारले काटिदियौ र आफ्नै बलले किरण वा जलधारारूपी गाई उत्पन्न गरायौ ।

**तमिन्द्रं वाजयामसि महे वृत्राय हन्तवे । स वृषा वृषभो भुवत् ॥१२॥**

जसले वृत्रासुरको हनन गरे हामी उनैको प्रशंसा र स्तुति गर्दछौँ । उनै जीवनदाता इन्द्रदेवताले हामीलाई धनधान्यले परिपूर्ण गरून् ।

**इन्द्रः स दामने कृत ओजिष्ठः स मदे शितः । द्युम्नी श्लोकी स सोम्यः ॥१३॥**

दान दिनकै लागि उत्पन्न भएका इन्द्रदेवता बलवान् बन्नका लागि सोमपान गर्दछन् । ती प्रशंसनीय कार्य गर्ने देवता नै सोमपान गराउनका लागि योग्य छन् ।

**गिरा बज्रो न संभृतः सबलो अनपच्युतः । ववक्ष ऋष्वो अस्तृतः ॥१४॥**

हातमा वज्र लिएका, स्तुति गर्न योग्य, तेजस्वी र अपराजेय इन्द्रदेवता साधकहरूलाई ऐश्वर्य प्रदान गर्ने रहर गर्दछन् ।

## सूक्त– १३८

**ऋषि–** वत्स । **देवता–** इन्द्र । **छन्द–** गायत्री ।

**महाँ इन्द्रो य ओजसा पर्जन्यो वृष्टिमाँ इव । स्तोमैर्वत्सस्य वावृधे ॥१॥**

जलको वर्षा गराउने मेघजस्तै तेजस्वी र यशस्वी इन्द्रदेवताले आफ्ना प्रियपात्रको स्तुतिबाट समृद्ध भएर व्यापक रूप ग्रहण गर्दछन् ।

**प्रजामृतस्य पिप्रतः प्र यद् भरन्त वह्नयः । विप्रा ऋतस्य वाहसा ॥२॥**

जब आकाशमार्गबाट गमन गर्नमा सक्षम अश्व, यज्ञमा जानका लागि तत्पर इन्द्रदेवतालाई वेगपूर्वक यज्ञस्थलमा लैजान्छन्, त्यस बेला उद्गाताहरू यज्ञमा प्रयुक्त हुने गरेका मन्त्रले उनै इन्द्रदेवतालाई स्तुति गर्दछन् ।

**कण्वा इन्द्रं यदक्रत स्तोमैर्यज्ञस्य साधनम् । जामि ब्रुवत आयुधम् ॥३॥**

जब कण्व वंशीय ऋषिहरू स्तुतिका माध्यमबाट इन्द्रदेवतालाई यज्ञसाधक बनाउँछन्, त्यस बेला यज्ञको रक्षाका लागि शस्त्रको आवश्यकता रहँदैन पनि भन्ने गरिन्छ ।

## सूक्त– १३९

**ऋषि–** शशकर्ण । **देवता–** अश्विनीकुमार । **छन्द–** बृहती, गायत्री, कुकुप् उष्णिक् ।

**आ नूनमश्विना युवं वत्सस्य गन्तमवसे । प्रास्मै यच्छतमवृकं पृथु च्छर्दिर्युयुतं या अरातयः ॥१॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै वत्स ऋषिको सुरक्षाका लागि निश्चित रूपले आओ । उनलाई क्रोधी मानिसहरूबाट सुरक्षित र विशाल आवास प्रदान गर । त्यसपछि तिमीहरू दुवैले उनका शत्रुलाई पर भगाओ ।

**यदन्तरिक्षे यद् दिवि यत् पञ्च मानुषां अनु । नृम्णं तद् धत्तमश्विना ॥२॥**

हे अश्विनीकुमारहरू हो ! जुन ऐश्वर्य अन्तरिक्ष, दिव्यलोक तथा पृथ्वीलोकमा पाँच किसिमका मानिसहरूसित उपलब्ध रहन्छ, त्यही ऐश्वर्य हामीलाई पनि प्रदान गर ।

**ये वां दंसांस्यश्विना विप्रासः परिमामृशुः । एवेत् काण्वस्य बोधतम् ॥३॥**

हे अश्विनीकुमारहरू हो ! कण्वका पुत्रहरूले तथा जुन विद्वान् पुरुषहरूले आआफ्ना प्रार्थनाले तिम्रा कर्मका विषयमा जानेका छन्, तिमी तिनीहरूको जानकारी लेऊ अर्थात् तिनको सुरक्षा गर ।

**अयं वां घर्मो अश्विना स्तोमेन परि षिच्यते । अयं सोमो मधुमान् वाजिनीवसू येन वृत्रं चिकेतथः ॥४॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरूका निम्ति यो ऊर्जा उत्पन्न गराउने खालको गर्मी अथवा स्तोत्रले सेचन गरिँदै छ । हे बलसम्पन्न देवताहरू हो ! यही त्यो मधुर रस हो, जसका कारण तिमीले वृत्रलाई देख्ने गर्दछौ ।

**यदप्सु यद् वनस्पतौ यदोषधीषु पुरुदंससा कृतम् । तेन माविष्टमश्विना ॥५॥**

हे अश्विनीकुमारहरू हो ! जुन शक्तिले तिमीहरू दुवैले औषधि, विशाल वृक्ष तथा जललाई रक्षा गरेका छौ, उसै बलले हामीलाई पनि रक्षा गर ।

## सूक्त– १४०

**ऋषि–** शशकर्ण । **देवता–** अश्विनीकुमार । **छन्द–** बृहती, अनुष्टुप्, त्रिष्टुप् ।

**यन्नासत्या भुरण्यथो यद् वा देव भिषज्यथः । अयं वां वत्सो मतिभिर्न विन्धते हविष्मन्तं हि गच्छथः ॥१॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै संसारका पालनकर्ता तथा सबैलाई स्वस्थ राख्ने हौ केवल ज्ञानले मात्रै स्तोतागहरूले तिमीहरूलाई पाउन सक्दैनन् । किनभने हवि प्रदान गर्ने यजमानका नजिक तिमीहरू जाने गर्दछौ ।

**आ नूनमश्विनोर्ऋषि स्तोमं चिकेत वामया । आ सोमं मधुमत्तमं घर्मं सिञ्चादथर्वणि ॥२॥**
अश्विनीकुमारहरूको स्तुतिलाई स्तोताहरूले आफ्ना श्रेष्ठ बुद्धिले सम्पन्न गर्दछन् । उनीहरूले मधुर सोमरस तथा घिउले सिञ्चित हवि समर्पित गरेका छन् ।

**आ नूनं रघुवर्तनिं रथं तिष्ठाथो अश्विना । आ वां स्तोमा इमे मम नभो न चुच्यवीरत ॥३॥**
हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै तेज चल्ने गरेका रथमा आरुढ हुने गर्दछौ । आकाशजस्तै विस्तृत हाम्रो स्तुति तिमीहरूलाई प्राप्त होस् ।

**यदद्य वां नासत्योक्थैराचुच्युवीमहि । यद् वा वाणीभिरश्विनेवेत् काण्वस्य बोधतम् ॥४॥**
हे सत्यनिष्ठ अश्विनीकुमारहरू हो ! आज जसरी शास्त्रका वचनले तिमीहरूलाई बोलाइँदै छ, उसै गरी म कण्व ऋषिले स्तोत्रका माध्यमबाट तिमीहरूलाई आह्वान गर्दछु ।

**यद् वा कक्षीवाँ उत यद् व्यश्व ऋषिर्यद् वां दीर्घतमा जुहाव । पृथी यद् वां वैन्यः सादनेष्वेवेदतो अश्विना चेतयेथाम् ॥५॥**
हे अश्विनीकुमारहरू हो ! जसरी तिमीहरू दुवैलाई कक्षीवान्, व्यश्व, दीर्घतमाले आह्वान गरे, जसरी यज्ञस्थलमा वेनका पुत्र पृथुले बोलाएका थिए, उसै गरी हामी यस बेला तिमीहरू दुवैलाई आह्वान गर्दछौँ, यसलाई मनन गर ।

## सूक्त– १४१

**ऋषि–** शशकर्ण । **देवता–** अश्विनीकुमार । **छन्द–** विराट् अनुष्टुप्, जगती, अनुष्टुप्, बृहती ।

**यातं छर्दिष्पा उत नः परस्पा भूतं जगत्पा उत नस्तनूपा । वर्तिस्तोकाय तनयाय यातम् ॥१॥**
सबैका घरलाई रक्षा गर्ने हे अश्विनीकुमारहरू हो ! तिमीहरू हाम्रो, हाम्रा घरको र समस्त संसारको पालक बन । हाम्रा पुत्रपौत्रादिको कल्याणका लागि तिमीहरू हाम्रा घरमा आओ ।

**यदिन्द्रेण सरथं याथो अश्विना यद् वा वायुना भवथः समोकसा । यदादित्येभिर्ऋभुभिः सजोषसा यद् वा विष्णोर्विक्रमणेषु तिष्ठथः ॥२॥**
हे अश्विनीकुमारहरू हो ! यदि तिमीहरू इन्द्रदेवताका साथमा उनका रथमा आसीन भएर गमन गर्दछौ, वायुदेवतासँग एकै ठाउँमा निवास गर्दछौ, अदितिपुत्र अथवा ऋभुदेवतासँग प्रेमपूर्वक रहन्छौ र विष्णुका विशिष्ट पदक्षेपका साथमा तीनै लोकमा विराजमान हुन्छौ भनेदेखि हाम्रा नजिकै आओ ।

**यदद्याश्विनावहं हुवेय वाजसातये । यत् पृत्सु तुर्वणे सहस्तच्छ्रेष्ठमश्विनोरवः ॥३॥**
अश्विनीकुमारहरूको संरक्षण उच्च कोटिको छ । सङ्ग्राममा शत्रुको विनाश गर्नमा उनीहरू सक्षम छन्, त्यसैले आफ्नो रक्षाका लागि यदि उनलाई हामीले बोलाउँछौँ भनेदेखि उनीहरू पक्का पनि आउनेछन् ।

**आ नूनं यातमश्विनेमा हव्यानि वां हिता । इमे सोमासो अधि तुर्वशे यदाविमे कण्वेषु वामथ ॥४॥**
यो सोमरस तुर्वश र यदुका घरमा विद्यमान छ, यो कण्वका पुत्रलाई प्रदान गरिएको थियो । हे अश्विनीकुमारहरू हो ! यो हव्यरूपी सोमरस तिमीहरूका लागि प्रस्तुत छ । त्यसैले तिमीहरू यसलाई पान गर्नका लागि आओ ।

**यन्नासतया पराके अर्वाके अस्ति भेषजम् । तेन नूनं विमदाय प्रचेतसा छर्दिर्वत्साय यच्छतम् ॥५॥**
हे अश्विनीकुमारहरू हो ! जुन औषधिहरू हाम्रा नजिक वा परपरसम्म उपलब्ध रहेका छन्, तिनीहरूलाई प्राप्त गर्न खोज्ने अहङ्काररहित वत्स ऋषिका लागि श्रेष्ठ आवास प्रदान गर ।

## सूक्त– १४२

**ऋषि–** शशकर्ण । **देवता–** अश्विनीकुमार । **छन्द–** अनुष्टुप्, गायत्री ।

**अभुत्स्यु प्र देव्या साकं वाचाहमश्विनोः । व्यावर्देव्या मतिं वि रातिं मर्त्येभ्यः ॥१॥**

दुवै अश्विनीकुमारको दिव्य वाणीले हामी चेतन भएका छौँ । हे उषादेवी ! तिमी अन्धकारलाई पर हटाएर सबै मानिसलाई सद्बुद्धि तथा उपयुक्त ऐश्वर्य प्रदान गर ।

**प्र बोधयोषो अश्विना प्र देवि सूनृते महि । प्र यज्ञहोतरानुषक् प्र मदाय श्रवो बृहत् ॥२॥**

हे प्रकाशले सम्पन्न तथा महान् उषादेवी ! तिमी अश्विनीकुमारहरूलाई प्रेरित गर । हे याजकहरू हो ! तिमीहरू अश्विनीकुमारहरूलाई आनन्ददायक प्रचुर हव्य प्रदान गर ।

**यदुषो यासि भानुना सं सूर्येण रोचसे । आ हायमश्विनो रथो वर्तिर्याति नृपाय्यम् ॥३॥**

हे उषादेवी ! जब तिमी सुनौलो किरणले सम्पन्न भएर हिँड्दछ्यौ, त्यस बेला सूर्यको तेज किरण प्रकाशित हुन्छ । उसै बेला अश्विनीकुमारहरूको रथ मानिसको स्वास्थ्य लाभ गराउनका लागि यज्ञमण्डपमा प्रवेश गर्दछ ।

**यदापीतासो अंशवो गावो न दुह्र ऊधभिः । यद्वा वाणीरनूषत प्र देवयन्तो अश्विना ॥४॥**

हे अश्विनीकुमारहरू हो ! जब पहेँलो वर्णको सोमलताबाट गाईका थुनबाट दुध दुहेझैँ रस निकालिन्छ र जब हामी देवत्व प्राप्तिका कामनाले आफ्ना स्तुति वचनले तिमीहरूलाई प्रार्थना गर्दछौँ, त्यस बेला तिमीहरू हाम्रा संरक्षक होओ ।

**प्र द्युम्नाय प्र शवसे प्र नृषाह्याय शर्मणे र प्र दक्षाय प्रचेतसा ॥५॥**

श्रेष्ठ ज्ञानले सम्पन्न हे अश्विनीकुमारहरू हो ! तिमीहरू हामीलाई यस्तो प्रेरणा प्रदान गर, जसबाट हामी ऐश्वर्य, शक्ति, सहनशीलता र श्रेष्ठ कार्य गर्ने कौशल प्राप्त गर्न सकौँ ।

**यन्नूनं धीभिरश्विना पितुर्योना निषीदथः । यद्वा सुम्नेभिरुक्थ्या ॥६॥**

प्रशंसा गर्न योग्य हे अश्विनीकुमारहरू हो ! तिमीहरू हाम्रा पिताजस्तै हौ । त्यसैले जसरी पिताले आफ्ना पुत्रलाई प्रत्येक सुखका साधनहरू उपलब्ध गराउँछन्, उसै गरी हामीलाई हर्ष प्रदान गर ।

## सूक्त– १४३

**ऋषि–** पुरुमीढ, अजमीढ, वामदेव, मेध्यातिथि मेधातिथि । **देवता–** अश्विनीकुमार ।
**छन्द–** त्रिष्टुप् ।

**तं वां रथं वयमद्या हुवेम पृथुज्रयमश्विना संगतिं गोः । यः सूर्यां वहति वन्धुरायुर्गिर्वाहसं पुरुतमं वसूयुम् ॥१॥**

हे अश्विनीकुमारहरू हो ! आज हामी तिमीहरूको प्रसिद्ध वेग भएको र गाई प्रदान गर्ने रथलाई यहाँ निम्त्याउँछौँ । काठका खम्बाहरूले बनेका त्यस रथले सूर्यालाई पनि धारण गर्न सक्दछ । त्यो रथ स्तुतिलाई वहन गर्ने, विशाल र ऐश्वर्यवान् छ ।

**युवं श्रियमश्विना देवता तां दिवो नपाता वनथः शचीभिः । युवोर्वपुरभि पृक्षः सचन्ते वहन्ति यत् ककुहासो रथे वाम् ॥२॥**

हे द्युलोकको दिव्यतालाई पतन हुन नदिने अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै देवता हौ । तिमीहरू दुवै त्यो श्रेष्ठतालाई आफ्ना बलले प्राप्त गर्दछौ । जब विशाल अश्व नारिएको रथले तिमीहरूलाई वहन गर्दछ, त्यस बेला तिमीहरूको शरीर सोमरसले परिपुष्ट भएको हुन्छ ।

**को वामद्या करते रातहव्य ऊतये वा सुतपेयाय वार्कैः । ऋतस्य वा वनुषे पूर्व्याय नमो येमानो अश्विना ववर्तत् ॥३॥**

आज आफ्नो सुरक्षाका लागि अथवा पेलेर तयार पारेको सोमरस पान गर्नका लागि कुन सोमरस प्रदाताले तिमीहरूलाई बोलाउँदै छन् ? नमस्कार गर्ने कुन मानिसले आज तिमीहरू दुवैलाई यज्ञका लागि प्रवृत्त गराउँछन् ?

हिरण्ययेन पुरुभू रथेनेमं यज्ञं नासत्योप याचम् । पिबाथ इन्मधुनः सोम्यस्य दधथो रत्नं विधते जनाय ॥४॥

अनेकौं किसिमले आफ्नो सत्ता प्रकट गर्ने र सत्य वचनलाई पालन गर्ने हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै यस यज्ञमा सुनौलो रथमा आओ, मधुर सोमरस पान गर र पुरुषार्थी मानिसलाई मनोहर ऐश्वर्य प्रदान गर ।

आ नो यातं दिवो अच्छा पृथिव्या हिरण्ययेन सुवृता रथेन । मा वामन्ये नि यमन् देवयन्तः सं यद् ददे नाभिः पूर्व्या वाम् ॥५॥

श्रेष्ठ सुनौला रथले तिमीहरू दुवै द्युलोक या भूलोकबाट हामीकहाँ आओ । तिमीहरूको अभिलाषा गर्ने अन्य याजकहरूले तिमीहरूलाई बीच बाटामै अवरुद्ध गर्न नसकून् । किनभने हामीले उहिलेदेखि नै तिमीहरूलाई प्राप्त गर्नका लागि स्तुति गरेका छौं ।

नू नो रयिं पुरुवीरं बृहन्तं दस्रा मिमाथामुभयेष्वस्मे । नरो यद् वामश्विना स्तोममावन्त्सधस्तुतिमाजमीढहासो अग्मन् ॥६॥

हे शत्रुलाई संहार गर्ने अश्विनीकुमारहरू हो ! तिमीहरू दुईले अनेकौं वीरले सम्पन्न प्रचुर ऐश्वर्य हाम्रा लागि प्रदान गर । हे अश्विनीकुमारहरू हो ! पुरुमीढका स्तोताहरूले तिमीहरूलाई स्तुति गरेर प्राप्त गरेका थिए र अजमीढका स्तोताहरूको प्रशंसा पनि त्यसैसित सम्मिलित छ ।

इहेह यद् वां समना पपृक्षे सेयमस्मे सुमतिर्वाजरत्ना । ऊरुष्यतं जरितारं युवं ह श्रितः कामो नासत्या युवद्रिक् ॥७॥

शक्तिरूपी अन्नलाई आफ्ना नजिकै राख्ने गरेका हे अश्विनीकुमारहरू हो ! समान विचार भएका तिमीहरू दुवैका लागि हामी स्तुति समर्पित गर्दछौं । ती श्रेष्ठ स्तुतिहरू हामी याजकहरूलाई फल प्रदान गर्ने खालका होऊन् । हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैले हामीलाई सुरक्षा गर । हाम्रो कामना तिमीहरूतर्फ नै गमन गर्दछ ।

मधुमतीरोषधीर्द्याव आपो मधुमन्नो भवत्वन्तरिक्षम् क्षेत्रस्य पतिर्मधुमान्नो अस्त्वरिष्यन्तो अन्वेनं चरेम ॥८॥

वनौषधिहरू हाम्रा लागि मधुरतायुक्त होऊन् । द्युलोक, अन्तरिक्ष र जल हाम्रा लागि मधुरतायुक्त होऊन् । क्षेत्रका स्वामी हाम्रा लागि मधुरतायुक्त होऊन् । हामी शत्रुद्वारा हिंसित नहुँदै उनीहरूका पछि लाग्न सकौं ।

पनाय्यं तदश्विना कृतं वां वृषभो दिवो रजसः पृथिव्याः । सहस्रं शंसा उत ये गविष्टौ सर्वाँ इत् ताँ उप याता पिबध्यै ॥९॥

हे अश्विनीकुमारहरू हो ! अन्तरिक्षबाट पृथ्वीमा जलको वर्षा गराउने तिमीहरूको कार्य प्रशंसनीय छ । गाई खोज्नेजस्ता हजारौं खालका पुण्य कार्य गर्ने समयमा सोमरस पान गर्नका लागि तिमीहरू यहाँ आओ ।

## ॥ इति विंशं काण्डं समाप्तम् ॥

बीसौं काण्ड सकियो ।

**इति अथर्ववेदसंहिता समाप्ता ॥**

अथर्ववेदसंहिता सकियो ।